# हरिराज खेवा (तिगेला)

# स्मृति-ग्रन्थ



हरिराज खेवा स्मृति प्रतिष्ठान

# हरिराज खेवा (तिगेला) स्मृति-ग्रन्थ

**सम्पादक**

विश्वास दीप तिगेला

**संकलन सहयोगी**

सुवास मगर

**प्रकाशकः**

हरिराज खेवा स्मृति प्रतिष्ठान

# हरिराज खेवा (तिगेला) स्मृति-ग्रन्थ


**सम्पादक** : विश्वास दीप तिगेला

**प्रकाशक** : हरिराज खेवा स्मृति प्रतिष्ठान

**संकलन सहयोगी** : सुवास मगर

प्रतिः : १०००

प्रकाशन वर्ष : २०७६ साउन १३

**कम्प्युटर** : खापुङ क्रिएसन, अनामनगर काठमाडौं

**मुदण** : प्रज्ञा छापाखाना, कमलादी

**मूल्य** : ५००।-

ISBN : 9789937062396

ईमेलः direct.letter@gmail.com

वेभः www.nepaliliterature.com

उपराष्ट्रपति

काठमाडौं, नेपाल

उपराष्ट्रपतिको कार्यालय
बहादुर भवन, काठमाडौं

## शुभ-कामना

दिवंगत नेता तथा पूर्व अर्थराज्यमन्त्री हरिराज खेवाको जीवनी समेटेर हरिराज खेवा स्मृति प्रतिस्थानले **'हरिराज खेवा स्मृति ग्रन्थ'** प्रकाशन गर्न लागेको जानकारी पाउँदा मलाई ज्यादै खुशी लागेको छ। म हरिराज खेवा स्मृति ग्रन्थ प्रकाशनको पूर्ण सफलताको शुभकामना व्यक्त गर्दछु। यस अवसरमा दिवंगत खेवाजीप्रति हार्दिक श्रद्धा सुमन अर्पण गर्दछु।

मानिस जन्मनु र मर्नु प्राकृतिक नियम हो। संसारमा हरेक दिन हजारौं मानिसले जन्म लिइरहेका हुन्छन्, हजारौंले नै भौतिक रुपमा विदा पनि लिइरहेका हुन्छन्। ती मध्ये कसै मानिसको मात्रै चर्चा हुन्छ -जसले समाज, राष्ट्र र मानव जातिका लागि विशिष्ट योगदान पुऱ्याएका हुन्छन्। र, ती अजर अमर रहन्छन्।

दिवंगत हरिराज खेवाको निधनले समाज र राष्ट्रले एक बहुप्रतिभाशाली नेता गुमायो। सडक दुर्घटनाका कारण अल्पायुमै भएको उहाँको निधनले राष्ट्रलाई अपुरणीय क्षति पुग्यो। अझ विशेषत: पूर्वी क्षेत्रले भावि नेता गुमायो। तर, उहाँ अमर रहनु भएको छ। अर्थराज्यमन्त्री, संविधानसभा सदस्य भएर उहाँले राष्ट्रका लागि पुऱ्याउनु भएको योगदानको बारेमा हामी पूर्ण जानकारी छौँ। त्यसबाहेक शिक्षण पेशा, तात्कालीन गाविस अध्यक्ष, नाट्यकार, कलाकार र समाजसेवी भएर विविध आयामबाट राष्ट्रका लागि उहाँले दिनु भएको योगदान उच्च प्रशंसनीय छ। म यस स्मृति ग्रन्थमार्फत दिवंगत पूर्व अर्थराज्यमन्त्री हरिराज खेवाले समाज, राष्ट्र र मानव जातिका लागि पुऱ्याउनु भएको योगदानप्रति उच्च सम्मान व्यक्त गर्दछु।

अन्त्यमा, हरिराज खेवा स्मृति प्रतिस्थानले प्रकाशन गर्ने 'हरिराज खेवा स्मृति ग्रन्थ'मा समाविष्ट सामाग्रीहरुले खेवाको बहुआयामिक व्यक्तित्व, उहाँले समाजका विभिन्न पक्षमा पुऱ्याउनु भएको योगदानका बारेमा आम मानिसलाई विस्तृत् जानकारी दिने मैले विश्वास लिएको छु। मलाई विश्वास छ, यो पुस्तकबाट हामी सबैले हरिराज खेवाको जीवनबाट केहीं न केहीं नयाँ प्रेरणा अवश्य लिने छौँ। म यो महत्वपूर्ण ग्रन्थ प्रकाशनका लागि हरिराज खेवा स्मृति प्रतिस्थानलाई हृयदेखि धन्यवाद दिन चाहन्छु।

धन्यवाद।

१२ असार २०७६

..............................
(नन्दबहादुर पुन 'पासाङ')

संघीय संसद, नेपाल
प्रतिनिधि सभा
कृष्ण बहादुर महरा
सभामुख
फोन : ०१-४२००१५९
फ्याक्स : ०१-४२००१३७
सिंहदरबार, काठमाडौं, नेपाल

# शुभकामना

प.सं.
च. नं.

पूर्व अर्थराज्यमन्त्री, संविधान सभा सदस्य तथा तत्कालीन नेकपा (माओवादी केन्द्र) का केन्द्रीय सदस्य एवं धनकुटा जिल्ला अध्यक्ष हरिराज खेवाको चौथो स्मृति दिवसको यस क्षणमा उहाँप्रति हार्दिक श्रद्धाञ्जली तथा परिवारजनप्रति गहिरो समवेदना व्यक्त गर्दछु । उहाँको स्मृति दिवसको सन्दर्भ पारेर **हरिराज खेवा स्मृति प्रतिष्ठानले 'हरिराज खेवा स्मृति ग्रन्थ'** प्रकाशन गर्न लागेको खबर सुन्दा मलाई अत्यन्तै खुशी लागेको छ ।

स्मृति ग्रन्थ प्रकाशन गरी हरिराजजीको व्यक्तित्व, जीवनी र समग्र राजनीतिक तथा सामाजिक योगदानलाई संस्थागत गर्नु निकै प्रशंसनीय छ । यस कार्यमा अग्रसर **हरिराज खेवा स्मृति प्रतिष्ठान**लाई विशेष धन्यवाद दिन चाहन्छु ।

नेपालको कम्युनिष्ट आन्दोलन र त्यसमा पनि नेपालको राजनीतिक परिवर्तनको ऐतिहासिक कालखण्डका रुपमा रहेको जनयुद्ध, ऐतिहासिक जनआन्दोलन र संविधान लेखनको क्रममा पूर्वी नेपालबाट प्रतिनिधित्व गरी महत्वपूर्ण भूमिका पूरा गर्ने व्यक्तिहरुमध्ये हरिराजजी पनि एक हुनुहुन्थ्यो । ती ऐतिहासिक जनसंघर्षपछि नेपालमा पहिलोपटक जननिर्वाचित संविधान सभाबाट संघीय गणतान्त्रिक संविधान निर्माण भयो भने संविधानमै गणतन्त्र, संघीयता, धर्मनिरपेक्षता, समावेशी/समानुपातिक प्रणाली संस्थागत गरिएको छ । यी सबै उपलब्धि र सफलता प्राप्तिको लागि संविधान सभा सदस्यको हैसियतले उहाँको महत्वपूर्ण भूमिका रहेको छ । पहिलो संविधानसभा (२०६४-२०६९) मा हरिराजजी र हामी सँगसँगै थियौं । विडम्बना ! युवा नेतृत्वका रुपमा प्रशस्त सम्भावना भएका हरिराजजीलाई हामीले सवारी दुर्घटनामा गुमाउनुपर्‍यो ।

हरिराज खेवाको चौथो स्मृति दिवसका सन्दर्भमा स्मृति ग्रन्थ प्रकाशन गरी उहाँको जीवनी र योगदानलाई सुरक्षित गर्ने कार्यमा यो प्रतिष्ठान सफल हुनेछ । फेरि पनि हरिराजजी प्रति हार्दिक श्रद्धासुमन व्यक्त गर्दै हरिराज खेवा स्मृति प्रतिष्ठानलाई हार्दिक धन्यवाद तथा शुभकामना व्यक्त गर्दछु ।

२९ जेठ, २०७६

कृष्ण बहादुर महरा
सभामुख

Website- www.parliament.gov.np Email- krishna_mahara@parliament.gov.np fb.com/kbmaharaofficial

# नेपाल कम्युनिष्ट पार्टी (नेकपा)

केन्द्रीय कार्यालय, काठमाडौं, नेपाल


## शुभकामना

पूर्व अर्थ राज्यमन्त्री कमरेड हरिराज खेवा स्मृति प्रतिष्ठानले उहाँको स्मृति दिवसको अवसरमा स्मृति ग्रन्थ प्रकाशन गर्न लागेको जानकारी पाउँदा खुसी लागेको छ । आफ्नो जीवन राजनीति र समाजसेवामा व्यतित गर्नुभएका कमरेड खेवा जुझारु युवा हुनुहुन्थ्यो ।

जनता र राष्ट्रप्रति ईमान्दार कमरेड खेवा भावी नेतृत्वका रुपमा विकास हुने धेरै सम्भावना बोकेका युवा नेता हुनुहुन्थ्यो । विद्यार्थी कालदेखि नै वामपन्थी राजनीति गरेका कमरेड खेवा राजनीतिलाई गाउँको विकाससँग जोड्दै स्थानीय जनताको मन जित्न सफल जननेता हुनुहुन्थ्यो ।

हक्की, आँटिला, जोशिला र मिलनसार कमरेड खेवा नयाँ पुस्ताले प्रेरणा लिन सक्ने व्यक्तित्व हुनुहुन्थ्यो । समाजवादको आधार तयार गरी सुखी नेपाली, सम्वृद्ध नेपालको सपना पुरा गर्न उहाँका योगदान कम्युनिष्ट क्रान्तिकारीहरुका लागि थप उर्जा र हौसलाको आधार बन्न सक्ने ठानेको छु ।

आफ्नो आस्था, विश्वास र विचारमा दृढ र अविचलित कमरेड खेवाका जीवनका योगदानको चर्चा गर्दै स्मृति ग्रन्थ प्रकाशन गर्ने हरिराज खेवा स्मृति प्रतिष्ठानको उत्तरोत्तर प्रगतिको कामना सहित शुभकामना व्यक्त गर्दछु ।

*०५ साउन, २०७६*

पुष्पकमल दाहाल 'प्रचण्ड'
अध्यक्ष


• धुम्बाराही: फोन: +९७७ १ ४३७८०५५, ४३७८०९०, फ्याक्स: +९७७ १ ४०१५९८० • पेरिसडाँडा: फोन: +९७७ १ ४६०२२९०, ४६०२२८८, फ्याक्स: +९७७ १ ४६०२२८९
पोष्टबक्स नं. ५४७१, ईमेल : info@ncp.org.np, वेबपेज: www.ncp.org.np

नेपाल सरकार

**गृहमन्त्रालय**

Government of Nepal

MINISTRY OF HOME AFFAIRS

**गृहमन्त्री**

NISTRY OF HOME AFFAIRS

## शुभकामना

हरिराज खेवा स्मृति प्रतिष्ठान धनकुटाले 'हरिराज खेवा स्मृति-ग्रन्थ' प्रकाशन गर्न लागेको जानकारी पाउँदा मलाई अत्यन्तै खुशी लागेको छ। हरिराज खेवा नेपालको कम्युष्टि आन्दोलनमा एक जना इमान्दार क्रान्तिकारी योद्धा हुनुहुन्थ्यो । वहाँले खासगरी नेपालको पूर्वीक्षेत्रमा क्रान्तिकारी कम्युनिष्टहरूलाई एकतावद्ध बनाउने, जनतालाई प्रशिक्षित गर्ने र वर्ग सङ्घर्षबाट नेपाली जनताको मुक्ति गर्नुपर्छ भन्ने मान्यतालाई स्थापित गर्नमा महत्वपूर्ण योगदान पुऱ्याउनु भएको थियो ।

वहाँ एउटा असल राजनीतिज्ञ, कुशल जनप्रतिनिधि, जनताको प्रिय कलाकार, साहित्य सर्जक, जनप्रिय समाजसेवी र सफल सत्ता सञ्चालकको रूपमा स्थापित भइसक्नुभएको थियो। वहाँमा रहेका सवल पक्षहरू मिति २०७३ साउन १३ गतेको दुर्घटनामा हामीले वहाँलाई गुमाउँदा सँगसँगै गुमाए पनि नेपालाका सच्चा क्रान्तिकारी कम्युनिष्ट र साहित्य कलाक्षेत्रका महानुभावहरूका लागि यो हरिराज खेवा स्मृति-ग्रन्थ अविश्वमरणीय र उपयोगी हुने विश्वास लिएको छु।

हरिराज खेवा स्मृति प्रतिष्ठानले प्रकाशन गर्न लागेको हरिराज खेवा स्मृति-ग्रन्थ सबैका लागि स्मरणीय रहने विश्वास लिएको छु । यस ग्रन्थको लागि शुभकामना सन्देश उपलब्ध गराउने अवसर प्रदान गर्नुभएकोमा हरिराज खेवा स्मृति प्रतिष्ठान र वहाँको परिवाजनप्रति हार्दिक कृतज्ञता प्रकट गर्न चाहन्छु।

अन्त्यमा वहाँका सन्दर्भमा हरिराज खेवा स्मृति-ग्रन्थ प्रकाशनको चरणसमम पुऱ्याउन संलग्न सबैमा धन्यवाद दिँदै यस ग्रन्थको सफलको शुभकामना व्यक्त गर्न चाहन्छु।

**२८ जेठ २०७६**

**रामबहादुर थापा**

गृहमन्त्री

**मुख्यमन्त्री** **प्रदेश नं.१, विराटनगर**

## शुभकामना सन्देश

स्व.हरिराज खेवा स्मृति प्रतिष्ठानले राजनीतिज्ञ एंव पूर्व अर्थ राज्यमन्त्री स्व. हरिराज खेवाको स्मृतिमा **हरिराज खेवा स्मृति ग्रन्थ** नामक पुस्तक प्रकाशन गर्न लागेको खबर पाउँदा मलाई खुसी लागेको छ ।

युवा राजनीतिक व्यक्तित्वका साथै समाजसेवी, साहित्यकार एंव नाट्य कलाकार समेत रहनु भएका खेवाको सडक दुर्घटनामा परी अल्पायुमै निधन भयो । उहाँको निधनले धनकुटालाई मात्रै हैन सिंगो देशलाई नै अपूरणीय क्षति भएको छ । म स्व. खेवाको योगदानको स्मरण गर्दै भावपूर्ण श्रद्धाञ्जली एंव परिवारजनमा गहिरो समवेदना व्यक्त गर्दछु ।

अहिलेको परिवर्तनमा दिवंगत खेवाको विशेष योगदान छ । उहाँले देशको विकासका लागि बनाउनु भएको योजना एंव उहाँका अधुरा सपनाहरु पुरा गर्ने जिम्मेवारी हाम्रो काँधमा छ । हामी सबै मिलेर उहाँका अधुरा सपनाहरु पुरा गर्न लागेको खण्डमा उहाँप्रति सच्चा श्रद्धाञ्जली हुने मैले विश्वास लिएको छु ।

यो पुस्तकमा प्रकाशित हुने लेख, रचनाले समाज राष्ट्र र भावी पुस्तालाई स्व. हरिराज खेवाको सबै पक्षबारे जानकारी गराई मार्गदर्शन हुने मैले ठानेको छु । स्व. खेवाको योगदानलाई चिर स्थायी बनाउन यो पुस्तक महत्वपूर्ण दस्तावेज हुने मैले विश्वास लिएको छु ।

प्रकाशन गर्न लागिएको पुस्तक महत्वपूर्ण, पठनीय एंव संग्रहनीय हुने मैले ठानेको छु, साथै पुस्तक प्रकाशन सफलताको हार्दिक शुभकामना व्यक्त गर्दछु ।

**२३ असार, २०७६** **शेरधन राई**

राजेन्द्र कुमार राई
सदस्य
प्रतिनिधि सभा
धनकुटा
नेपाल कम्युनिष्ट पार्टी (नेकपा)

Rajendra Kumar Rai
Member
House of Representatives
Dhankuta
Nepal Communist Party (NCP)

प.सं.
च.नं.

मितिः

## शुभकामना

धनकुटाले जन्माएको एकजना जनप्रिय नेता कमरेड हरीराज खेवाको सम्झना र सम्मानमा 'हरिराज खेवा स्मृति प्रतिष्ठान'ले स्मृति-ग्रन्थ प्रकाशन गर्न लागेको खबरले मलाई असाध्यै हर्षित बनाएको छ । कहालीलाग्दो दुर्घटनाको कारण हामीले कमरेड हरिराज खेवालाई असमयमै गुमायौं । त्यो दुर्घटना हाम्रो निम्ति बिर्सनलायक अप्रिय दुर्घटना थियो । वहाँ भौतिक रूपमा हाम्रो बीचमा नरहनु भए पनि वहाँले छोडेर जानुभएको उज्यालो र देखाएर जानु भएको बाटो भने हाम्रा लागि अमुल्य छन् । नेपाल कम्युनिष्ट पार्टी (नेकपा), धनकुटेली जनता र समग्र नेपालको कम्युनिष्ट आन्दोलनको लागि पनि महत्वपूर्ण छ । वहाँसँग जोडिएका सम्झना र अनुभवहरू हाम्रा लागि प्रेरणादायी पनि छन् । तसर्थ ती सम्झना र अनुभवहरुको अभिलेखिकरण असाध्यै जरुरी थियो । यो प्रतिष्ठानले त्यो महत्वपूर्ण काम गरेको छ । यो स्मृतिग्रन्थ धनकुटेली जनताको निम्ति त एउटा संग्रहयोग्य ऐतिहासिक दस्ताबेज बन्ने नै छ । नेपाली कम्युनिष्ट आन्दोलनको इतिहास र साहित्यिक इतिहासको निम्ति पनि महत्वपूर्ण अभिलेख बन्नेमा मेरो गहिरो विश्वास छ ।

व्यक्तिगत रूपमा हरिराज खेवासँग जोडिएका मेरा पनि अनेक सम्झनाहरु छन् । वहाँप्रतिको सम्मानको उचाई उस्तै छ, ती सबै यो छोटो लेखाईमा सम्भव छैन । यति भनौं, कमरेड हरिराज असाध्यै जुझारु, लगनशील, कर्तव्यनिष्ठ, जनप्रिय र इमानदार नेता हुनुहुन्थ्यो । नेपालको राजनीतिक परिर्वतनको निम्ति वहाँले खेल्नु भएको भूमिका समग्र नेपाली राजनीतिमा सम्झनायोग्य छ, धनकुटेली जनताको निम्ती गौरव गर्न लायक छ । राजनीतिक परिवर्तनको निम्ती सांस्कृतिक मोर्चाबाट खेल्नु भएको भूमिकाको पनि हामीले उत्तिकै सम्झना गरिरहेका छौं । इतिहासले त्यो योगदानलाई सम्झिरहने छ । राजनीतिक परिवर्तनसँगै सामाजिक परिर्वतन

र रूपान्तरणको निम्ती गर्नु भएको अगुवाई र नेतृत्व उस्तै गौरवपूर्ण छ । नेपाली जनतालाई सबै खालका असमानता, शोषण र विभेदबाट मुक्त गर्नको निम्ति सामाजिक आन्दोलनसँगै रुपान्तरण पनि जरुरी छ भन्नेमा वहाँ दृढ हुनुहुन्थ्यो ।

कमरेड हरिराजको त्यही उर्जा, निष्ठा र विचारको कारण छोटो समयमै एउटा उचाईमा पुग्नुभयो । गाविस अध्यक्ष हुँदै प्रतिनिधिसभा सदस्यहुदैं राज्यमन्त्री समेत बन्नुभयो । धनकुटाको राजनीतिक अप्ठ्यारा र जटिलताकोबीचमा पनि त्यो उचाईमा पुग्नु चानाचुने कुरो होइन, यो त धनकुटाकै गौरवको विषय हो । एउटा अध्यांरोबीचमा चम्किरहेको ताराको रुपमा हामीले वहाँलाई देखिरहेका थियौं । तर, समय यति निर्मम र क्रुर भएर आयो की हामीले वहाँलाई गुमायौं । त्यो उज्यालो तारा एकाएक हाम्रोबीचबाट अस्तायो । अब वहाँले छोडी जानु भएको उज्यालो र देखाउनु भएको बाटोमा हिडेर वहाँले देख्नु भएको सपना पुरा गर्नका लागि दृढता र इमानदारिताको साथ काम गर्नुको विकल्प रहेन । त्यसको निम्ती यस ग्रन्थमा संग्रहित वहाँका विचार, वहाँसँग जोडिएका अनेकन संस्मरण र आलेखहरुले हामीलाई सचेत र मार्गदर्शन गराउने छ भन्ने मेरो विश्वास छ ।

अन्तमा :'हरिराज खेवा स्मृति प्रतिष्ठान'ले गरेको यस महत्वपूर्ण कामको म हाम्रो पार्टी नेपाल कम्युनिष्ट पार्टी (नेकपा) र धनकुटेली जनताहरूको तर्फबाट उच्च सम्मान व्यक्त गर्न चाहन्छु । आगमी दिनमा पनि कमरेड हरिराजको सम्झना र सम्मानमा यसप्रकारको सृजनशील काम हुने विश्वाससहित त्यस काममा पार्टी र धनकुटेली जनताहरूको प्रतिनिधि हुनुको नाताले मेरो सदैव साथ हुने प्रतिवद्धता समेत व्यक्त गर्दछु ।

धन्यवाद ।

**मिति : २२ असार २०७६**

राजेन्द्रकुमार राई
सदस्य, प्रतिनिधिसभा धनकुटा
एंव अध्यक्ष, नेपाल कम्युनिष्ट पार्टी (नेकपा), धनकुटा

प्रदेश सरकार
प्रदेश नं. १

आर्थिक मामिला तथा योजना मन्त्रालय
प्रदेश नं.१
विराटनगर, नेपाल

**माननीय इन्द्र वहादुर आङबो**
**आर्थिक मामिला तथा योजना मन्त्री**

आर्थिक मामिला तथा योजना मन्त्रालय
प्रदेस नं. १ बिराटनगर नेपाल

२२ असार ०७६

प.सं. : ०७५/०७६
च.नं. : ५२

## शुभकामना

हरिराज खेवा स्मृति प्रतिष्ठान धनकुटाले राजनिती साहित्य समाजसेवा तथा बिभिन्न अनुभब र अनुभुतीका संगालोहरुलाई समेटेर **हरिराज स्मृति ग्रन्थ** नामक पुस्तक प्रकासन गर्न लागेको सुन्न पाउदा धेरै खुसी लागेको छ ।

२५० बर्ष देखीको सामन्ती एकात्मक राज्य सत्ताको अन्त्य तथा सदियौ देखी नेपाली जनता सामु लादिएको विभेद,अन्याय,अत्याचारको बिरुद्ध सञ्चालित महान जनयुद्ध सहभागि हुदै ऐतिहासिक पहिलो संविधान सभाका सदस्य र नेपाल सरकारको अर्थराज्य मन्त्री जस्तो गरिमामय जिम्मेवारी समेत सम्हाल्नु भएका क. हरिराज खेवा मिलनसार मृदुभाषी सरल एंव वहुप्रतिभाषाली व्यक्तित्व हुनुहुन्थ्यो । गणतन्त्र,संघीयता,धर्मनिरपेक्षता,सामाबेशी एंव समानुपातिक प्रतिनीधीत्व जस्ता ऐतिहासिक उपलब्धीमा उहाको महत्वपुर्ण योगदान रहयो । पार्टी कामको शिलशिलामा २०७३ साउन १३ गत्ते सडक दुर्घटनामा परि उहाको असामायीक निधनले सबैलाई स्तब्ध र दुखी बनाउनका साथै कुसल राजनितीज्ञ प्रतिभाशाली व्यक्तित्व राष्ट्रले गुमायो भने घनकुटाले आफ्नो प्रिय अभिभाबक समेत गुमायो । क. हरिराज खेवाले समाज र राष्ट्रको निम्ती पुर्‍याउनु भएको योगदान बिभिन्न समयमा उहाले लेख्नु भएको लेख अनुभुती र साहित्यहरुलाई समेटेर प्रकाशन हुन लागेको पुस्तकले क. हरिराज खेवा प्रतिको उच्च सम्मान र उहाले नेपाली समाज र राजनिती परिर्बतनमा पुर्‍याउनु भएको योगदानको थप स्थापित हुने र नया पुस्ताको निम्ती महत्वपुर्ण ईतिहास तथा पाठ्य सामाग्री हुने विस्वास लिएको छु ।

अन्त्यमा पुस्तक प्रकासनले क. हरिराज खेवाको नेपाली समाज रुपान्तरणमा ऐतिहासिक उपलब्धी हासिल गर्न खेल्नु भएको भुमिका उहाले गर्नु भएको योगदानको उच्च सम्मान गर्न सफल होस समाज परिबर्तन र बिकासको निम्ती थप प्रेरणा र उर्जा प्रदान गर्न र महत्वपुर्ण पाठ्य सामाग्री बन्न सफल होस भन्ने अपेक्षा सहित पुस्तक प्रकासन गर्नुहुने **हरिराज खेवा स्मृती प्रतिष्ठान** र संलग्न सबैमा सफलताको शुभकामना ब्यक्त गर्दछु ।

**क. हरिराज खेवा-लाल सलाम**

२२ असार ०७६

इन्द्रबहादुर आङ्बो
मन्त्री

# प्रकाशकीय

सर्वप्रथमतः स्व. हरिराज खेवाप्रति भावपूर्ण श्रद्धा-सुमन व्यक्त गर्दछौं ।

स्व. हरिराज खेवा नेपाल सरकारको पूर्व-अर्थराज्यमन्त्री (२०६८) तथा ऐतिहासिक संविधान सभा (२०६४)मा धनकुटा क्षेत्र नं. २ बाट निर्वाचित सदस्य साथै संवैधानिक समितिका सदस्य, साविक हात्तिखर्क गाविस अध्यक्ष (२०५४), लिम्बुवान राष्ट्रिय मुक्ति मोर्चा केन्द्रिय महासचिव (२०६४) एकीकृत नेपाल कम्युनिष्ट पार्टी (माओवादी) का केन्द्रीय सम्मेलन आयोजक समिति सदस्य साथै धनकुटा जिल्ला अध्यक्ष (२०७१) को जिम्मेवारी सम्हाल्नु भएको थियो ।

वहाँले राजनीति क्षेत्रमा मात्र लगाव नभई नेपाली साहित्यको विकासमा पनि उतिकै योगदान दिनु भएको थियो । वहाँको नेपाली साहित्यका, कथा, कविता, गीत, नाटकको क्षेत्रमा बढी कलम चलेको पाइन्छ । “अपदस्त जिन्दगी” लगायत वहाँका कृतिहरू नेपाली साहित्यमा कालजयी छन् । वहाँ गाविस अध्यक्षमा निर्वाचित हुनु पूर्व श्री जनकल्याण प्रा.वि. हात्तिखर्कमा प्रधानाध्यापक (२०५१) समेत हुनुहुन्थ्यो । वहाँको जन्म २०२५ साल कार्तिक २३ गते धनकुटा जिल्ला साविक हात्तीखर्क गाविस वडा नं. ६ हाल छथर जोरपाटी गाउँपालिका वडा नं. १ मा पिता स्वर्गिय सुब्बा हृदयमान खेवा लिम्बू र माता स्वर्गिय तीर्थमाया खापुङ लिम्बूको माइलो सुपुत्र हुनुहुन्थो । वहाँ गीता गुरुङ्गसँग २०६१ सालमा वैवाहिक सम्बन्धमा बाँधिनु भएको थियो । वहाँका दुई छोरीहरू गुराँस खेवा लिम्बू र लारक खेवा लिम्बू रहनु भएको छ ।

जिल्ला पार्टीले तय गरेको योजनामा समवेदना प्रकट गर्न वहाँ साविक मारेक

कटहरे गाविस वडा नं. २ (हाल महालक्ष्मी न.पा. १ निवासी) जिल्ला सदस्य कमरेड यम कार्कीको बुवा स्व. धनबहादुर कार्कीलाई श्रद्धाञ्जली अर्पण एवम् शोकसन्तप्त परिवारजनमा समवेदना व्यक्त गर्नका लागि जिल्ला पार्टी सल्लाहकार कमरेड भोला थापासँग जानु भएको थियो । २०७३ साउन १३ का दिन मारेक कटहरेबाट धनकुटा फर्कने क्रममा धनकुटा र तेह्रथुम जिल्लाको सङ्गमस्थल चित्रे बजारमा संखुवासभाको मुढेशनिश्चरेबाट धरानतर्फ जादै गरेको बा.२ ख. ७३६६ डाँफे मुनाल यात्रुवाहक बसमा चढेको लगभग दश मिनेट पुग्दानपुग्दै यात्रारत अवस्थामा धनकुटा जिल्लाको साविक परेवादनि गाविस एवं हालको छथर जोरपाटी गाउँपालिकामा पर्ने सिधुवा बजार सिरानमा दुर्घटनामा परी वहाँको देहावशान भएको थियो ।

वहाँको सम्झनामा २०७३ साल कार्तिक ११ गते धनकुटा जिल्ला प्रशासन कार्यालयमा दर्ता गरी समाज कल्याण परिषद भृकुटीमण्डप काठमाडौँमा आवद्धता जनाई गैह्र नाफामूलक संस्था “हरिराज खेवा स्मृति प्रतिष्ठान” स्थापना भएको छ । प्रतिष्ठानले हालसम्म विभिन्न सामाजिक सेवामुलक कार्यहरू सञ्चालन गर्दै आएको छ ।

समाज, राष्ट्र, देशको लागि स्व. खेवाले पुऱ्याउनु भएको योगदानलाई समेटेर यस प्रतिष्ठानले “हरिराज खेवा स्मृति-ग्रन्थ” प्रकाशन गरेको छ । स्मृति-ग्रन्थ प्रकाशनका लागि शुभकामना सन्देश व्यक्त गर्नु हुने सङ्घीय लोकतान्त्रिक गणतन्त्र नेपालका सम्माननीय उपराष्ट्रपति, संघीय संसदका सभामुख, गृहमन्त्री, १ नं. प्रदेशका मुख्यमन्त्री, १ नं. प्रदेशका मन्त्री, १ नं. प्रदेश सभा (धनकुटा)का माननीय सांसदप्रति हार्दिक आभार प्रकट गर्दछौँ । त्यसैगरी जिल्ला समन्वय समितिका सभापतिज्यू, जिल्ला समन्वय समितिका सदस्यज्यूहरू, धनकुटा जिल्लाका सबै स्थानीय तह नगर तथा गाउँपालिका प्रमुख/उपप्रमुख/सदस्यहरूप्रति पनि हार्दिक आभार प्रकट गर्दछौँ । लेखरचना, शुभकामना सन्देश र स्वेच्छिक आर्थिक सहयोग गरिदिनु हुने सबैमा हार्दिक आभार व्यक्त गर्दछौ ।

यस स्मृति ग्रन्थ प्रकाशन गर्नका लागि सल्लाह, सुझाव र अमूल्य सहयोग प्रदान गर्नुहुने संरक्षक, सल्लाहकार, विभिन्न उपसमितिमा रहनु भई आफ्नो जिम्मेवार पुरा गर्नुहुने उपसमितिका संयोजक तथा सदस्यहरूलाई हार्दिक धन्यवाद ज्ञापन गर्दछौँ।

यस स्मृति ग्रन्थ प्रकाशन गर्न अहोरात्र खटिनु भई अथक परिश्रम गरी आर्थिक, भौतिक, नैतिक सहयोग गर्नुहुने सम्पादक विश्वासदीप तिगेला, संकलन सहयोगी सुवास मगरप्रति प्रतिष्ठानको तर्फबाट विशेष धन्यवाद दिन चाहान्छौ। साथै यस स्मृति ग्रन्थलाई प्रत्यक्ष/अप्रत्यक्ष रूपमा सहयोग गर्नु हुने सम्पादक मण्डलका सदस्यज्यूहरू, स्व. खेवाका परिवारजन, नातागोता, आफन्त, प्रवासमा रहनुहुने आफन्तजनहरू प्रति पनि हार्दिक आभार व्यक्त गर्न चाहान्छौ।

अन्त्यमा सम्पूर्ण पाठकवृन्द समक्ष थप सल्लाह, सुझाव, प्रतिक्रिया एवम् पृष्ठपोषणका लागि हार्दिक अनुरोध गर्दछौँ।

**विष्णु बहादुर लिम्बू**
अध्यक्ष
हरिराज खेवा स्मृति प्रतिष्ठान, धनकुटा

# हरिराज खेवाको स्मृति-ग्रन्थ पढेपछि

डा. गोविन्दराज भट्टराई

धनकुटामा जन्मी हुर्केका हरिराज खेवासित विश्वास दीप भाइले एकपल्ट मेरो परिचय गराउनु भएको थियो । २०६० सालतिर वहाँको 'अपदस्त जिन्दगी' नामक चारवटा एकांकीको संग्रह पनि उपलब्ध गराउनु भएको थियो । जिल्लावासी स्रष्टाको कृति त्यो पढेको थिएँ । उनै हरिराजको अल्पायुमै स्वर्गवास भएको दुःखद खबर सुनें, समाचारहरू पढें ।

हरिराजले छोटो अवधिमै अति सक्रिय भै आफ्नो विलक्षण प्रतिभाले अह्राएका कामहरू पूरा गर्दै आएका रहेछन् । मूलतः राजनीति नै उनको रुचि र सफलताको क्षेत्र प्रमाणित भएको थियो । यद्यपि सँगसँगै साहित्यतिर पनि अभिरुचि एवम् क्षमता राख्ने उनले नाटक लेखन तथा मञ्चनलाई प्रमुख क्षेत्र बनाएका रहेछन् ।

केही वर्षअघि मैले एउटा जिम्मेवारी पूरा गर्नुपर्ने भयो । त्यो थियो नेपाली साहित्यमा लिम्बू स्रष्टाको योगदान विषयमा एक अनुसन्धान कृतिको तयारी । मैले अध्ययन गर्दै लेख्दै लगें, इमानसिंह चेम्जोङबाट शुरु गरेर समकालीनहरूसम्म आइपुग्दा ८४ जना लिम्बू स्रष्टा फेला पार्न सकें । उक्त लेखमा हरिराज खेवालाई पनि समेटेको छु । तर दुःखको कुरा सो लेख तयार भएको केही महिनामा एक दुर्घटनाले हरिराजको इहलीला समाप्त गरायो । हामी दुखित भयौं ।

उमेरको क्रमले हेर्दा ३४ नं. मा प्रस्तुत हरिराजको साहित्यिक परिचय यस प्रकार छ :

## ३४. **हरिराज खेवा** (२०२५–२०७२)

हरिराज खेवा धनकुटाको हात्तिखर्कमा जन्मिई ४७ वर्षको अल्पायुमा धनकुटाकै सिधुवा बजारमा बस दुर्घटनामा परी देहान्त हुने एक होनाहार प्रतिभा हुन् । उनी कलाकारिता, साहित्य-सृजना, समाजसेवा र राजनीतिमा समर्पित युवा प्रतिभा थिए । उनको एउटा नाटक कृति छ- अपदस्त जिन्दगी (२०५८) । उनले अरू पनि एकाङ्की, नाटक, कथा, कविता रचेका छन् । भूगोलशास्त्रमा स्नातकोत्तर गरेका हरिराजले शिक्षण पेसामा पनि केही समय कार्य गरे । २०५४ सालमा एमालेको तर्फबाट गाविस अध्यक्ष निर्वाचित भए । २०६४ सालमा लिम्बुवान राष्ट्रिय मुक्ति मोर्चा नेपालको केन्द्रीय महासचिव भएका थिए भने वि.सं. २०६४ सालमा सम्पन्न संविधानसभाको पहिलो निर्वाचनमा धनकुटा क्षेत्र नं. २ बाट सभासदमा निर्वाचित भए; वि.सं. २०६८ कार्तिक २२ देखि २०६९ चैत्रसम्म अर्थ राज्यमन्त्रीको पदभार सम्हालेका थिए ।

हरिराजको अपदस्त जिन्दगीमा मानिसको सार्वभौमिक अस्तित्वको खोजी गरिएको छ । परन्तु आफ्नो राजनीतिक विश्वास, लिम्बू संस्कृति र परिवेशले त्यो सिञ्चित छ । हरिराजले राष्ट्रियस्तरमा नाटक प्रतियोगितामा भाग लिएर विजयी भएका थिए । उनको अल्पायुको निधन हामी सबैका लागि अपार क्षतिको कुरा हो । उनले धेरै आफ्ना सपना पूरा गर्न बाँकी थियो ।

समन्वेषणले हरिराजलाई सङ्क्षेपमा यति मात्र चिनाएको थियो । यस्ता हरिराजलाई प्रस्तुत स्मृति ग्रन्थले राम्ररी चिनाएको छ । यहाँ समाविष्ट लेखरचनाहरू अधिकांश हरिराजकै समकालीन सहकर्मीबाट लेखिएका, उनका स्वजन र धनकुटाकै इष्टमित्रबाट लेखिएका छन् । यसमा लेख्नेमध्ये धेरैजसो लेखक पत्रकारहरू पनि छन् । तीमध्ये कति टाढा विदेशभूमि पुगेर पनि हरिराजलाई स्मरण गरिरहेका छन् । यसबाट हाम्रो देशको एक दुःखद पक्ष प्रकट हुन्छ– पसिना बगाउनको लागि अधिकांश युवा युवतीहरू बाहिरी मुलुकको विकट परिस्थितिसँग लड्दैछन् । देशमा कथित लोकतन्त्र आए पनि यहाँ दुःखतन्त्र बढ्दो छ, लुटतन्त्र बढ्दो छ । सामान्य नागरिक असुरक्षा, अज्ञान र भयमा छ । यस्तो स्थितिबाट देशलाई बचाउने प्रतीज्ञा

गरेर उठेका जुझारु युवा हरिराजको अवसानले दुखित लेखकहरूको कलम लिएर आएको छ। यस्तो अमूल्य ग्रन्थको निर्माणमा लागि पर्ने भाइ विश्वासदीपको जति प्रशंसा गरे पनि पुग्दैन । दूरदेशमा रहेका भाइ विश्वासले आफ्नै दुःखसित लड्दै पनि सधैँ परहित सोचेका छन्, गर्दै आएका छन् ।

प्रस्तुत ग्रन्थका रचनाले हरिराजका तीनवटा पक्षलाई प्रस्तुत गरेका छन्–

क) हरिराज खेवाको राजनीतिक व्यक्तित्व
ख) हरिराज खेवाको साहित्यिक व्यक्तित्व
ग) हरिराज खेवाको सामाजिक व्यक्तित्व ।

यस ग्रन्थमा स्वयम् अशेष मल्ल जस्ता व्यक्तिले उनको रङ्गकर्मी व्यक्तित्व चिनाएका छन्, त्यसो त अरु पनि लेखहरू त्यस पक्षका छन् जसले हरिराजले रोजेको र अभ्यास गरेको नाटक सिर्जना, प्रस्तुति आदिलाई चिनाएका छन् । धेरै लेखरचना, संस्मरणात्मक छन्, हरिराजका विद्यार्थी कालका, गाउँले जीवनका, सांगठानिक दक्षताका, चुनावमा विजय प्राप्तिका अनि राजनीतिक परिवर्तनका यस्तै कुरा छन् ।

वामपन्थी राजनीतिमा समर्पित हरिराज आफ्नो धरातल गाउँदेखि बनाएर आएको मान्छे । उनका आस्था, निष्ठा र समर्पण भावलाई लिएर हरि रोका, हेमराज भण्डारी, थर्कदीप तिगेला, राजकुमार दिक्पालले प्रस्तुत गरेका छन् भने जेपी भुजेलले हरिराजको कुशल नाटककार व्यक्तित्वलाई चिनाएका छन् । गणेश खड्काको प्रस्तुति उस्तै गहिरो र रोचक छ। राजकुमार दिक्पाल र गिरीश पोखेलले मर्मस्थल छोएर लेखेका छन् ।

भरत थोक्लेनले दुर्घटना पश्चात उत्पन्न शोकको यथार्थ चित्र प्रस्तुत गरेका छन् । एउटा महत्वपूर्ण लेख छ भगिराज इङ्नामको । इङ्नाम स्वयम् एक स्रष्टा खासगरी लिम्बू इतिहासका । उनको लिम्बू जातिको इतिहास (२०७५) ले त्यो प्रमाणित गर्दछ। प्रस्तुत ग्रन्थमा समाविष्ट भगिराजको लेखले भन्दछ– एउटा लामो विरासत बोकेको हरिराजको परिवारमा कति दुर्लभ सामग्री/कागजात सुरक्षित थिए । अरू लेखकहरू– गणेश राई, ठाकुर बराल, गोपाल रानामगर, प्रेम खजुम,

वेग आले, होमकुमारी खापुङ, उत्तरमान लिम्बू, पञ्च विस्मृत, खड्गबहादुर आले, झमक घिमिरे, हेम तामाङ, हेमराज भण्डारी, देवेन्द्र खापुङ सुर्केलीलगायत प्रवुद्ध व्यक्तिहरूले हरिराजलाई देखेको कुरा लेखेका छन् । यसमा समाविष्ट रोशन परियारको एक उत्कृष्ट कविताले सबैलाई छोएर जानेछ ।

"कीर्तियस्य सजीवति" भनिएको छ, जसको कीर्ति छ सो जीवित रहनेछ । हरिराज आफ्ना कीर्तिले जीवित रहेका छन् । यसरी जिल्लाबासीको दुःखसुख संघर्ष र प्राप्तिलाई अरु समक्ष प्रस्तुत गर्ने भाइ विश्वासदीप तिगेला पनि सदा जीवित रहने छन् ।

यो कृति धनकुटा जिल्लाको साहित्यिक/सांस्कृतिक अझ मूलतः राजनैतिक एवम् ऐतिहासिक दस्तावेज हो । यसले नेपाली साहित्यमा पनि सबैको समुचित स्थान सुरक्षित गर्नेछ ।

**२०७६ असार १६** **ट्याङ्लाफाँट, कीतिपूर**

tu.govinda@gmail.com

# स्व. हरिराज खेवा तिगेलाको व्यक्तिगत विवरण

**जन्म** : ८ नोभेम्बर १९६८
**स्वर्गरोहण** : २८ जुलाई २०१६, सिधुवा (धनकुटा)को बस दुर्घटनामा
**जन्मस्थल** : छथर जोरपाटी १ हात्तिखर्क, प्रदेश न १
**आमाबुबाको नाम** : सुब्बा हृदयमान तिगेला, तीर्थमाया खापुङ
**श्रीमती** : गीता गुरुङ
**दुई छोरी** : गुराँस र लारक खेवा
**शिक्षा** : स्नातक
**हेड माष्टर** : जनकल्याण प्रावि वि.स. २०५०-२०५४ हात्तिखर्क
**गाविस अध्यक्ष** : वि.स. २०५४ (२९ वर्षको उमेरमा एमालेबाट विजयी ।)
**राजनीति** : एमालेबाट गाविस अध्यक्षमा विजयी २०५४, त्यसपछि माले खेमा हुँदै माओवादीमा संलग्न पहिलो संविधानसभाको निर्वाचन २०६४ मा धनकुटा क्षेत्र नं. २ बाट **सभासदमा विजयी**, पूर्व प्रधानमन्त्री सूर्यबहादुर थापालाई पराजित
**सदस्य** : सवैधानिक समितिमा सबैभन्दा कम उमेरका सदस्य
**मन्त्री** : माननीय अर्थ राज्यमन्त्री (अर्थमन्त्री वर्षमान पुन) सन् २०१२
**बहाल रहदै स्वर्गरोहणः** पार्टी केन्द्रीय सदस्यः नेकपा (माओवादी एकता केन्द्र) सन् २०१६, **अध्यक्षः** नेकपा (माओवादी केन्द्र) धनकुटा जिल्ला समिति ।
**महासचिव** : लिम्बुवान राष्ट्रिय मुक्ति मोर्चा, केन्द्रीय समिति सन् २०१६ ।
**अध्यक्ष** : भक्तराज कन्दङ्वा स्मृति प्रतिष्ठान
**पुस्तक कृति** : अपदस्त जिन्दगी, एकाङ्की नाटक संग्रह, प्रकाशित २०५८
**कलाकारिता** : झण्डै एक दर्जन नाटकमा उत्कृष्ट अभिनय
**गीत** : 'धनकुटाको बजारमा हावा सरर....' रेकर्डेड
**गोल्ड मेडलिष्ट** : नेपाल अधिराज्यव्यापी रेडियो नाटक प्रतियोगिता -२०५५

# विषयसूचि

# हरिराज खेवाको स्मरणमा

**घनश्याम बराल 'औलाली'**

सच्चा राष्ट्रिय पुत्र हौ, धनकुटा गर्दैछ गर्व हेर
अस्तायौ छिनमै मनुष्य जूनीको हुँदैन केही भर
साह्रै शान्त र सम्य यो प्रकृतिको सच्चा उपहारता
तिम्रो क्षति पूर्ण हुन्छ कसरी हे प्रकृति कठोरता

लेख्यौ नाटक खेल्दथ्यौ पनि तिमी साहित्यको फाँटमा
लाग्यौ रे दलतर्फ राजनीतिमा सत्मार्ग कै आँचमा
आयो टप्प टिपेर लान, कसरी बाँचे अरु सबजना
के गर्ने यमको विधि जहरिलो यस्तै छ यसको क्रम

खोज्दैछन जनता, गयौ भन कता सत्मार्गका नायक
बाबाको ममता नपाई, तनया बन्छन् नि मर्माहत
सम्झन्छन् परिवार साथी संगिनी बिर्सन्न है राष्ट्रले
के गर्ने तर गैगयौ नि हरि जी शान्ति पावस् आत्माले

तिम्रो कीर्ति सधैँ रहोस् स्मरणमा यहि हो सफलता पनि

भुल्ने छैन समग्रमा भुवनले सच्चाई यस्तै हुन्छ नी
ऐले ताण्डव भित्रन्दैछ किन हो हेर्दा हुँदो हो दुःख
चाह्यौ सभ्य समाज छैन त्यो, पार्दैछ की चिन्तित ।

कल्पन्छन् हँसिलो मुहार तन त्यो ईर्ष्या गरे हुन कति
नेताको अभाव दिई भयो धनकुटाको हेर साँच्चै खति
कालो शासनको विरुद्ध लडने आशा भरोसा थियौं
ऐले पूर्ण गराउने समयमा थाहै नपाई छोडी गयौं ।

**कुरुले तेनुपा १, धनकुटा**

# हरिराज खेवा मेरो नजरमा

**पूर्णबहादुर भुजेल**

कुनै एक सन्दर्भमा चीनिया कम्युनिष्ट पार्टीका नेता माओ त्से तुङले भन्नुभएको थियो 'मृत्यु पहाडजस्तो विशाल गह्रौं र प्वाख जस्तो हलुका हुन्छ ।'

कमरेड स्वर्गीय हरिराज खेवाको बारेमा लेख्न बसेको बेला माओ त्से तुङको यो भनाइले यतिबेला निकै तरङ्गित बनाएको छ । कमरेड खेवाको असमायिक मृत्यु साँच्चै नै हामी सबैखाले उत्पीडनको विरुद्धमा लागेकाहरूकोलागि ठूलो पहाडजस्तै गह्रौ भएको छ । यद्यपि, हामी मृत्युलाई अस्वीकार गर्न सक्दैनौ ।

यो संसारमा जतिपनि मनुष्य लगायत जतिपनि जीवित वस्तुहरूको अस्तित्व छ, प्रकृतिको नियमअनुसार ऊ विभिन्न चरण पार गर्दै समाप्तिको दिशामा जान्छ । सम्पूर्ण जीवित प्राणीको हकमा लागू हुने यो निर्मम नियमसँगै अर्को सत्य के हो भने मनुष्यमात्र यस्तो जीव हो, जसको भौतिक मृत्युपछि पनि उनीमा रहेको विशिष्ठताले सदैव जीवित बनाउँछ । समाजमा हरेक किसिमका मानिस हुन्छ । तर, खास समयमा केही खास मानिसमात्र समाजभन्दा माथि उठ्छन् । जसले आफ्नो प्रतिभा, क्षमता वा इमान्दारिताका कारण समाजमा अलग पहिचान निर्माण गर्छ । जनजनमा छाडेका छाप, विशेष परिस्थितिमा गरेको निर्णयले व्यक्तिलाई समाजमा आत्मीयरूपले स्थापित गरिदिन्छ । समाजमा आफ्नो अस्तित्व बनाउन वा जनजनको मनभित्र बास बस्ने कुरा सजिलो छैन । परिस्थितिअनुसार निर्मम हुनुपर्छ, आवश्यकताअनुसार दुःख-कष्ट सहन गर्ने क्षमता राख्न सक्नुपर्छ र जोखिम उठाउने क्षमता पनि राख्न सक्नुपर्छ । व्यक्तिले समाजलाई अग्रभागमा राखेर आफ्नो

विशिष्टता कायम गर्न सकेन भने ऊ औसत मानिस हुन्छ । त्यस्ता व्यक्तिहरू भौतिकरूपमा हिसाबमा जीवित भएर पनि वैचारिक हिसाबमा मृतक सरह हुन्छ । अर्थात, औसत व्यक्तिहरूको मृत्यु जनचासो र जनसरोकारका विषय हुँदैन र बन्दैन पनि । कोही मानिस यस्ता हुन्छन । जसको मृत्युको लामो समयसम्म पनि उसको अभाव महसुस गरिन्छ वा समाज परिवर्तनमा गरेको लगानी खोजीको विषय भइरहन्छ । यस्तै खोजीको विषय बनिरहने व्यक्ति हुनुहुन्थ्यो धनकुटा जिल्लाको हात्तिखर्कमा जन्मनु भएका कमरेड हरिराज खेवा ।

कमरेड स्वर्गीय हरिराज खेवा हामी माझ हुनुहुन्न तर वहाँको विशिष्टताले अहिले पनि हामीलाई हरिराज खेवा खोज्न बाध्य बनाउँछ। हामी कमरेड खेवालाई अहिले पनि सम्झनु पर्ने स्थितिमा पुग्नु वा वहाँको अभाव अनुभूति हुनुको अर्थ हो, कमरेड खेवाले समाजको सकरात्मक परिवर्तनमा खेलेको रचनात्मक भूमिका हो । अझ, वैचारिक कोणबाट भन्ने हो भने सर्वहारा वर्गको अधिनायकत्व स्थापित गर्न कमरेड खेवाले खेलेको विशिष्ट भूमिकाको कारणले हो । त्यसैले जनवादी चेतनाले भन्छ-

*मृत्यु पनि मान्छे पिच्छे फरक हुँदोरहेछ*
*देशभक्त छोरा मर्दा देश रुँदोरहेछ*
*आँखाबाट आँशु होइन माया बग्दो रहेछ*
*हराएको मान्छेको याद आउँदो रहेछ ।*

औसत मानिसको भन्दा फरक भूमिकाको कारण नै कमरेड खेवा अहिलेसम्म हामीमाझ याद आउने खास व्यक्तित्व बन्नु भएको छ। जुन खास हुनुको भावलाई अहिलेसम्म धनकुटाले पुरा गर्न सकेको छैन । त्यसैले आज पनि धनकुटा जिल्लाले अभिभावक नेतृत्वको अभाव खडकिएको महसुस गरिरहेको छ । धनकुटाको प्रिय मान्छे कमरेड खेवा एकाएक कहीँबाट उदाएको नभइ समाजको विशिष्टताबीच चमत्कारिक निर्णायक भूमिका र ठोस परिस्थितिमा ठोस निर्णय दिन सक्ने क्षमताले स्थापित गरेको नेतृत्व हो। त्यही क्षमताले वहाँलाई जिवित बनाएको छ र पछिल्लो पुस्ताका हामीहरू वहाँले लिएको बाटोमा हिँडिरहेका छौ । कमरेड खेवाले लिएको

विचारको विकल्पमा अर्को वैज्ञानिक विचार स्थापित नभएसम्म भौतिकरूपले वहाँ हामीबीच नरहे पनि वैचारिकरूपले जीवन्त रहिरहनु हुनेछ । र, हामी वहाँलाई पछ्याँइरहने छौ ।

पूर्वी नेपालको धनकुटा जिल्लास्थित हात्तिखर्कमा वि.सं. २०२६ सालमा जन्मनु भएका कमरेड खेवा जिम्मावाल परिवारमा जन्मनु भएको थियो । पिता हृदयमान खेवा माता तीर्थमाया खापुङ खेवाको कोखबाट जन्मिएका चार दाजुभाइ र तीन दिदीबहिनीमध्ये कमरेड खेवा परिवारको माइलो सन्तान हुन् । समाजलाई बुझ्ने प्रगतीशील धारका कारण नै कमरेड खेवा आम व्यक्तिभन्दा फरक देखिएका हुन् । विशेषगरि साहित्य लेखनमा रुझान भएका कमरेड खेवा नाटक लेखनमा स्थापित नाम थिए । समाजलाई बुझ्ने प्रगतिशील धारका कारण वहाँका लेखनमा समाज परिवर्तनका आग्रह पाईन्छ । नाटक लेखनबाट समाजलाई परिवर्तनको दिशामा अगाडि बढाउने कमरेड खेवा भौतिकरूपमै पनि जनताको घरमा पुगेर जनतासँग भावनात्मकरूपले एकाकार हुने क्षमता राख्थे । यसरी एउटै व्यक्ति लेखन र भौतिकरूपमै जनतामाझ उभिन सक्नु कमरेड खेवा भएको विशिष्ट क्षमता हो, जो कमैमा पाइन्छ ।

कमरेड स्वर्गीय खेवा लेखनमा सबैखाले अन्यायको विरुद्ध जति आक्रमक थिए, वास्तविक जीवनमा पनि उत्तिकै विद्रोही र आक्रमक थिए । ग्रामीण जीवन शैली बिताउने कमरेड खेवा आफ्नो क्षमताका कारण धनकुटा क्षेत्रमा मिथकीय पात्रको रूपमा पनि बाँच्नु भएको छ । जनपक्षीय काम नगर्ने प्रहरीविरुद्ध आक्रमण उत्रनु तथा सबैखाले अन्यायको विरुद्ध विद्रोही बन्ने क्षमता राख्ने सत्य किस्साहरूले कमरेड खेवालाई धनुकटाको भूगोलमा मिथकीय पात्र बनाएको छ । राजनीतिकरूपले आयामिक क्षमता राख्ने वहाँले देश, जनता, पार्टी र वर्ग क्रान्तिप्रति निरन्तर रूपमा जीवन समर्पण गरेको कारणले पूर्वको राजनीतिक आकासमा चम्किलो ताराको रूपमा स्थापित हुनुहुन्छ । जनतासँग सिक्ने र सिकाउने तर वर्ग दुश्मनसँग आक्रमक देखिने वहाँमा एउटा असल क्रान्तिकारी कम्युनिस्टमा हुनुपर्ने गुण यथेष्ट मात्रामा थियो । त्यसैले कमरेड स्वर्गीय हरिराज खेवा धनुकटाको भूगोलमा उदाएको

पूर्वको चम्किलो तारा हुनुहुन्छ ।

एउटा हरिराज खेवा धनकुटाको भूगोलमा कहिले शिक्षक बनेर देखा परे, कहिले जनविरोधी काम गर्ने प्रहरीलाई आक्रमण गर्ने नायक बने, कहिले नाटक र कवितामार्फत सर्वहारा वर्गको अधिनायकत्वलाई स्थापित गर्न आवाज उराल्ने सचेत पात्र बने । एउटा व्यक्तिको अनेक पात्रका कारण नै वि.सं.२०६४ सालमा पहिलो संविधानसभाको निर्वाचनमा पूर्व प्रधानमन्त्री सूर्यबहादुर थापालाई धनकुटा क्षेत्र नं. २ बाट पराजित गरेका थिए । समाजमा गरेको लगानीका कारण नै कमरेड खेवा अहिले पनि उत्तिकै सम्झनु पर्ने नाम भएको छ । वहाँको वैचारिक तथा समाजिक उचाइको सम्मान गर्दै नेपाल सरकारले पूर्वबाट एकमात्र पात्र प्रतिनिधि हरिराज खेवालाई २०६७ देखि २०६८ मा नौ महिना अर्थ राज्यमन्त्रीको जिम्मेवारी सुम्पेको थियो ।

तत्कालिन माओवादी केन्द्रीय सदस्य एवम् धनकुटा जिल्ला पार्टी अध्यक्ष समेत रहेका कमरेड खेवा लिम्बुवान राष्ट्रिय मुक्ति मोर्चा नेपालको केन्द्रीय अध्यक्षसमेत हुनुहुन्थ्यो । पार्टी कामको सिलसिलामा २०७२ श्रावण १३ हिलेको सिधुवा नजिक बस दुर्घटना परि मृत्यु हुनु भएका वहाँको श्रीमती गीता गुरुङ खेवा, दुई छोरी गुराँस खेवा, लारक खेवा हुनुहुन्छ । कमरेड खेवासँग मैले छोटो समयसम्म सहकार्य गर्ने अवसर पाएको थिए, वहाँमा भएको क्षमता देखेर म अवाक हुन्थे । सामाजिक अन्तरविरोधलाई मज्जाले केलाउन सक्नु र लेखनलाई पनि वर्गीय मुक्तिको पाटो बनाउन सक्नु वहाँमा रहेको खुबी थियो । स्थानीय जनकल्याण विद्यालयबाट शिक्षण पेशा थालेका वहाँले जनताको चाहना बमोजिम २०५४ सालमा हात्तिखर्क गाविस अध्यक्ष भई जनसेवामा समर्पित हुनु भएको थियो ।

नेपालको पूर्वी आकाशबाट सर्वहारा वर्ग र उत्पीडित जातिको मुक्ति विषयलाई वैचारिक मुद्दा बनाउँदै धनकुटामा जकडिएको सामन्तवादको जालोलाई तोड्न जुन सङ्घर्ष कमरेड खेवाले गरे, त्यो विषय हामीजस्ता पछिल्लो पुस्ताको लागि उर्जा दिने प्रसँग हो । जातीय अंहकारवाद विरुद्ध डटेर लाग्नु भएका वहाँ वर्ग सङ्घर्षबाट

मात्र मुक्ति हुन्छ भन्ने कुरामा विश्वास राख्नुहुन्थ्यो । कमरेड खेवासँगको थोरै समयको सहकार्यमा मैले यस्तै कुराहरू वहाँबाट सिक्ने र जान्ने मौका पाएको थिएँ ।

जीवनको अन्त्यभन्दा अगाडिसम्म जनताको जनजीविकाको विषयलाई बहस र सङ्घर्षको विषय बनाइरहनु हुने कमरेड खेवाको जुझारूपन हामीले सिक्नै पर्ने पाटो बनेको छ । सङ्घर्षलाई जनताको सापेक्षतामा चलायमान बनाइरहनु कम पेचिलो विषय थिएन । त्यही पेचिलो कामलाई निर्णय दिने क्षमताले नै वहाँ भौतिकरूपले हामीबीच नरहे पनि बैचारिक हिसाबले बाँचिरहनु भएको छ । र, हामीले बचाइरहनु पर्छ-कमरेड खेवाले समातेको सामाजिक परिवर्तनको बैचारिक धारलाई । किनकि, कमरेड खेवाले अधुरो छोडेका कम्युनिस्ट आन्दोलको कार्यभार हामीमाथि आएको छ । समाजका सबै अन्तरविरोधलाई नयाँ ढङ्गले हेर्ने र बुझ्ने कमरेड स्वर्गीय हरिराज खेवाप्रति सच्चा श्रद्धाञ्जली यहीँ रहने छ कि हामी सबैले कमरेड खेवाले हिँडेको गोरेटोलाई मूलबाटोमा परिणत गर्ने हिम्मत गरौं ।

posigoal@gmail.com

# हरिराजभित्रको रङ्गकर्मी व्यक्तित्व

**अशेष मल्ल**

सायद २०५३ सालतिर हुनुपर्छ धनकुटामा प्रज्ञा प्रतिष्ठानको आयोजना र मेरो संयोजनमा पहिलो पटक क्षेत्रीय नाटक महोत्सव भएको थियो जहाँ हरिराज खेवाको नाटक पहिलो पटक हेर्ने मौका मिलेको थियो ।

धनकुटाबाट एउटा होनाहार युवा नाटककार नेपाली रङ्गकर्मले पाएको देख्दा म खुसीले दङ्ग परेको थिएँ । साहित्यका अन्य विधाभन्दा अपेक्षाकृत कम लेखिने नाटक विधामा यसरी एक ज्वाज्ल्यमान युवा उदाउनु समग्र नेपाली कला र साहित्यकै लागि गौरवको विषय थियो । बत्तीस सालतिर हामी केही मिलेर धनकुटामा नव कलाकार सांस्कृतिक समुदाय खोलेका थियौँ । अनेक नाटकहरू मञ्चन गर्‍यौँ । पछि त्यो संस्था सेलाउँदै गयो तर फेरि सक्रिय भएको थाहा पाएँ । हरिराज भाइ त्यो संस्थालाई सक्रिय पार्न चिन्तित भएको देख्दा खुसी लागेको थियो । रङ्गकर्ममा अत्यन्त रुचि राख्ने एउटा युवा धनकुटाबाट उदाउँदै गर्नु मेरो लागि समेत खुसी र आनन्दको विषय थियो ।

हरिराज भाइसँग यसरी म प्रभावित भएको थिएँ । मलाई अझै याद छ पहिलो भेटमै उनले भनेका थिए दाइ मेरो घर हात्तिखर्क हो नि । यो हात्तिखर्क शब्दसँगै मेरो भावनात्मक सम्बन्ध छ भन्ने कुरा उनलाई राम्ररी थाहा रहेछ । मेरो पहिलो नाटक तुवाँलाले ढाकेको बस्तीको पृष्ठभूमि हात्तिखर्क हो । हाम्रो खेती थियो त्यहाँ । सानो

छँदा पटक पटक गईरहन्थैँ कहिले बुबासँग र कहिले एक्लै । हप्तौं बस्थैँ । माईला सुब्बा मेरा बुबाका अत्यन्तै मिल्ने मित्र थिए । म उनकै घरमा बस्थैँ । हाम्रो खेती हेरिदिने बखत काका र श्रीमानेहरूका दिनचर्यासँग म प्रभावित थिएँ । गाऊँको वातावरण मेरो मानसपटलमा अहिले पनि ताजा नै छ । यी विभिन्न कारणले हात्तिखर्कसँग मेरो भावनात्मक सम्बन्ध रहेको र हरिराज भाइ पनि हात्तिखर्ककै हुनुले पनि अझ सम्बन्ध गहिरिनुको कारण हुनसक्छ । तर त्यत्ति मात्र चाहिँ अवश्य होइन, उनी साहित्यप्रति रुचि राख्थे राम्रा कविता लेख्थे । उनको केही लघुकथा पनि पढेको छु । यो भन्दा ठूलो कुरा भनेको उनी नाटक लेख्थे । उनका एकाङ्की नाटक संग्रह 'अपदस्त जिन्दगी' प्रकाशित छ । नाटक लेख्नु भनेको त्यत्ति सजिलो कुरा होईन । रङ्गमञ्चको ज्ञान नभई नाटक लेख्न सकिँदैन । मलाइ थाहा छ उनी अभिनयमा समेत रुचि राख्थे । अधिराज्यब्यापी रेडियो नाटक प्रतियोगितामा गोल्ड मेडल पनि जिते । अभिनय उनको रुचिको विषय पनि थियो । पटक पटकको भेटमा उनी नाटक लेखन, अभिनय र रङ्गकर्मका लागि केही गर्न छटपटिएको देख्थैँ ।

राजनीतिमा सक्रिय भएपछि नाटकतिर समय दिन नसके पनि नाटकप्रति उनको माया,प्रेम र रुचि व्यक्तिएको देख्थैँ । भेट्ने समय नभए पनि फोन गरिरहन्थे र भन्थे दाइ समय मिलाएर नाटक हेर्न आउँछु । एकदिन सर्वानाम थिएटरमा धनकुटा हिलेका केही भाइहरू आएका थिए । हिलेमा थिएटर निर्माण गर्ने र नियमित नाटक मञ्चन गर्ने सिलसिलामा आएका भाइहरू निकै उत्साहित देखिन्थे । तर आर्थिक कारणले सफल हुन नसकेको अवस्था थियो । यसै सन्दर्भमा मैले हरिराज भाइलाई फोन गरेँ । भाइ धनकुटा गएका रहेछन्, भने दाइ म अहिले धनकुटामा छु, काठमाडौं आएर भेट्छु अनि केही न केही गरौला । हिलेमा थिएटर बनाउने कुरा गर्ने बित्तिकै उनको खुसी र उत्साह सुनेर मलाई अचम्म लागेको थियो । आफ्नो समय राजनीति र समाज सेवामा अत्यधिक रूपमा समर्पण गर्ने एउटा व्यक्ति नाटक र रङ्गकर्मप्रति यति सजग, सचेत र त्यसप्रतिको प्रेम अनि सद्भाव मलाई लाग्थ्यो त्यस्तै भावना अन्य राजनैतिक नेतृत्वहरूमा पनि भैदिएको भए हाम्रो नाट्य रङ्गकर्म आज देशव्यापी समृद्द हुने थियो ।

यहाँ नाटकको मात्र प्रश्न होइन नाटकसँगै नेपाली कला र संस्कृतिको विकासको प्रसङ्ग छ । जब एउटा राजनैतिक नेतृत्व स्वयंमा साहित्य, कला, रङ्गकर्मजस्ता सिर्जनाका साधक हुन्छ, उसले मुलुकको केवल भौतिक विकासमा मात्र होईन मुलुकको कला र संस्कृतिको अभिवृद्धिका लागि सर्वप्रथम योजना बनाउन उत्प्रेरित गर्छ । आज युरोप त्यतिकै चरम विकासको चरणमा पुगेको होईन, त्यहाँ भौतिक विकाससँगै कला र साहित्यलाई पनि उच्च प्रथमिकता दिईयो । हाम्रो सन्दर्भमा अधिकांश नेतृत्व वर्गमा यो कलाप्रतिको भावको अभाव रह्यो । थोरै नेताहरूमा मात्र कला साहित्यप्रति लगाव रह्यो । ती थोरैमध्ये एक थिए हाम्रा प्रिय भाइ हरिराज खेवा । त्यही प्रवृतिका भाव भएकाले नै होला उनी सबैका प्रिय थिए ।

राजनैतिक सिद्धान्त जे भए पनि उनी सबै तप्काका बीच अत्यन्तै प्रिय थिए । यस्ता मानिस भगवानका पनि प्रिय हुँदारहेछन् । त्यसैले त यति छोटो समय र सानै उमेरमा हाम्रा माझबाट टपक्कै टिपेर लगे । उनी र मेरो बिच अनेकौं पटक भेट भए । तर कहिल्यै राजनीतिका कुरा भएन । सधैं नाटक र रङ्गकर्मका कुरा । मलाई थाहा थियो उनको दायित्व भनेको आफ्नो क्षेत्रको विकास गर्न । गरिवी र अभावले घेरिएको हाम्रो समाजलाई आर्थिक समृद्दितर्फ उन्मुख गराउनु थियो ।

समाज सेवा र राजनैतिक नेतृत्वको घेरामा थिए तर म देख्थें उनी त्यो घेराभन्दा माथि उठेको । मानवतावादी प्रवृति देख्थें । यी सबै हुनुका पछाडि उनीभित्र रहेको कला चेतना नै हो भन्ने लाग्दछ । उनी धेरै नाटक लेख्न चाहन्थे, रङ्गकर्ममा समय दिन चाहन्थे तर उनको राजनैतिक र सामाजिक कर्तव्य र दायित्वले त्यो वैयक्तिक रहर पूरा गर्न सकिरहेका थिएनन् । उनको मनभित्र रहेका तिनै रहर र साहित्यिक प्यासका अनन्तः छाँया देख्थें उनको आँखामा । दुर्भाग्य, त्यो रहर अधुरै रह्यो उनका । धनकुटा र हात्तिखर्क मात्रै होइन समग्र मुलुककै लागि यो अकल्पनीय र अपुरणीय क्षति हो ।

**काठमाडौं ।**
info@sarwanam.org

# कमरेड हरि खेवाको सम्झना

**राम कार्की 'पार्थ'**

२०६४ साल पछिकै कुरा हो, एकिन साल महिना याद भएन । बाटोहरू हिलाम्मै रहेकाले वर्षाकै महिना हुनुपर्छ, म तेह्रथुमको म्याङ्लुङबाट हाम्रो पार्टी तत्कालिन नेकपा(माओवादी) को लिम्बुवान राज्य समितिको कार्यालय रहेको धरान तर्फको यात्रामा थिएँ । मसँग चालक, निजी सचिव बाहेक तत्कालिन लिम्बुवान राज्य समितिका केही कमरेडहरू पनि हुनुहुन्थ्यो । धनकुटा पुगेपछि चिया पिउने कुरा भयो । त्यहाँ अन्य साथीहरूसँगै कमरेड हरि खेवासँग पनि भेट भयो । हरि खेवा केही समय अघि मात्र तत्कालिन नेकपा (एमाले) परित्याग गरेर हाम्रो पार्टीमा सामेल हुनुभएको थियो । कमरेड खेवालाई धरान जानुपर्ने रहेछ । चिया-चमेना पछि वहाँ पनि धरान जान हामीसँगै गाडीमा चढ्नुभयो । यसभन्दा पहिले मैले हरि खेवाको बारेमा सुनेको त थिएँ, तर प्रत्यक्ष भेटघाट भने भएको थिएन ।

मूलघाट आइसकेपछि हाम्रो थोत्रो गाडीले अगाडि बढ्न मानेन । चालक अनुभवी थिए । गाडी खोलेर हेर्दा एउटा पूर्जा नै भाँचिएको रहेछ । साँझ परिसकेको थियो । हामी निरूपाय जस्तै बनेका थियौं । चालक भने -'म यसलाई जसरी पनि धरान पुग्ने बनाउँछु' भनेर मर्मत गर्न लागिपरेकै थिए । त्यसताका मूलघाटमा खाना खाने व्यवस्था भएका होटलहरू थिएनन् । झण्डै ४ घण्टा हामीले त्यहाँ बिताउनु पर्‍यो । धनकुटाकै निवासी अझ गाविस अध्यक्षसमेत भैसकेका कमरेड हरिसँग मूलघाट बासी र त्यहाँ यात्रारत धेरैको चिनजान रहेछ । झण्डै ४ घण्टाको त्यो बसाईमा मृदुभाषी, हँसिला हरि खेवाले हाम्रो टोलीलाई नै प्रभावित पार्नुभयो । वहाँले यत्न गरेर त्यहाँ बाटोमा काम गर्नेहरूको भान्सामा लगेर हामीलाई खाना खुवाउनु भयो ।

राति ११ बजे तिर हाम्रो गाडी बन्यो र हामी मध्यरात धरान पुग्यौं ।

त्यसपछि भने कमरेड हरि खेवासँग बाक्लै भेटघाट र छलफल भए । त्यतिबेला काठमाडौं आउँदा हाम्रो बसाई ललितपुरको नखिपोटमा हुने गर्दथ्यो र कमरेड हरि खेवाको डेरा पनि नखिपोटमै रहेकाले काठमाडौं बसाईका क्रममा प्रत्येक दिनजस्तै हाम्रो भेटघाट र छलफल हुने गर्दथ्यो । कमरेड हरिको विनम्रता र सरल व्यवहारले हामी सबैलाई यो निश्कर्षमा पुऱ्याएको थियो कि सूदुरपूर्वको एउटा उदियमान नेताको कमिलाई कमरेड हरिले पुरा गर्नु हुनेछ । कमरेड हरि हाम्रो पार्टीमा प्रवेश गरेको छोटो अवधिमै कमरेड हेमराज नेतृत्वको कमरेड हरिसहितको टोलीले धनकुटाको दुवै निर्वाचन क्षेत्रमा हाम्रो पार्टीलाई विजयी गराएर एउटा रेकर्ड नै कायम भयो । पछि अर्थराज्य मन्त्रीको रूपमा कमरेड हरिले आफ्नो योग्यतालाई राम्ररी प्रमाणित गर्नुभयो ।

सडक दुर्घटनामा कमरेड हरिको मृत्यु भएको तेजावी खबरले हामी सबैलाई मर्माहत बनायो । कमरेड हरिजस्ता इमान्दार कम्युनिष्टहरूको क्षतिपूर्ति १ नं. प्रदेशमा तुरुन्तै हुने आशा गर्नु व्यर्थको आशा हुनेछ । १ नं. प्रदेशमा कार्यरत युवा कम्युनिष्टहरूले कमरेड हरिकै बाटोमा इमान्दारीतापूर्वक अगाडि बढेर कमरेड हरिको सपनालाई साथै हामी सबैको सपनालाई साकार तुल्याउन प्रयास गर्नु कमरेड हरिप्रतिको न्याय ठहरिने छ । असमयमै हामीबाट छुट्टिएका यी कमरेडलाई श्रद्धासहित सलाम गर्दछु ।

(**लेखक पूर्वमन्त्री हुन् ।**)
chepenadi@gmail.com

# नारा, परिवर्तन र जीवन

**हरि रोका**

२०४६ को जनआन्दोलनको सफलतापछि हामीमध्य धेरै युवा-विद्यार्थी जनसङ्गठन छोडेर फिल्डमा पार्टी सङ्गठन गर्न आ-आफ्ना जिल्लातर्फ लाग्यौं । २०४६ अघि पार्टी सङ्गठन नाम मात्रका थिए भन्दा हुन्छ । एक जना इन्चार्जले ३-४ जिल्ला कभर गरेर केही ब्यक्तिलार्य लुज सम्पर्कमा राख्थे । पार्टीकेन्द्रका केही समाचार, आन्दोलनका केही कथा सुनाउथे । रोमाञ्चकारी कथाहरू सुनेर सुनाएर युवाहरूलाई क्रमिक रूपमा संगठित गर्ने गरिन्थ्यो । अलि म्याचियोर्ड भए पछि पार्टी सदस्यता दिइन्थ्यो र अन्तरपार्टी निर्देशनहरू उपलब्ध गराइन्थ्यो । यहीँ भित्रवाट एका दुई होलटाइमर निकालिन्थ्यो । राजनीतिक बन्देज भएको यो समयमा यतिको सम्पर्क सम्बन्ध बनाउनु, त्यति रिस्क बोकेर यातायातका कुनै साधन नभएका हिमाल पहाड तराईका विकट गाँउहरूमा निरन्तर सम्बन्ध बनाउन हिँडिरहनु कम अप्ठ्यारो कुरा थिएन । तर माथि उल्लेखित २०४६ सालको आन्दोलनको सफलता पछि सबै पर्दाहरू खुले । विगतको झिनो, खोपाभित्र भूमिगत सङ्गठनलाई रातारात विस्तार सामाजिक सङ्गठनमा रूपान्तरण गर्नुपर्ने अवस्था आइलाग्यो । मार्क्सवादी-एमालेको एकतापछि पनि दर्जनौ धाराहरू समाहित भएर एमाले निर्माण भयो । तर पनि सांगठानिक जागरण भित्र्याउन, क्रान्तिकारी र जुझारु रूपान्तरणकारी भूमिका निर्वाह गर्न हजारौं आफ्ना गाँउघर जिल्ला भित्रन आवश्यक थियो । आफ्नो अधुरो विश्वविद्यालयको पढाई छोडेर, जीवनको ग्यारेन्टीको धरोहर ठानिने जागीर छोडेर, वा विदेशमा अध्ययनको अवसर छोडेर गाउँ फर्कनु जीवनधारालाई अर्को अनिश्चिततामा धकेल्नु पनि हुन्थ्यो । जीवनमा एउटा नयाँ खाले रिस्क मोल्नु

पनि हुन्थ्यो । मैले बुझे अनुसार जीवनको अर्को एउटा रिस्क मोल्न हजारौं तयार युवाहरूमध्य धनकुटे हरि खेवा पनि एक हुनुहुन्थ्यो ।

०००

२०१७ सालमा राजा महेन्द्रले गरेको कु-देतापछि वामपन्थीको मुल नारा "विघटित संसदको पुर्नस्थापना" भन्ने रह्यो । यस्ले नेपाली वामपन्थीहरू सुरूदेखि नै संसदीय राजनीतिक अभ्यास गर्दै समाजवादी क्रान्तितर्फ अग्रसर हुन चाहन्छन् भन्ने बुझ्न सकिन्छ । २०३५/३६ होस् या २०४२ को वामपन्थी आन्दोलन र २०४६ पछिको बहुँदलीय व्यवस्थाका लागि सङ्घर्ष यी सबै सङ्घर्षहरू बहुँदलीय संसदीय व्यवस्थाको पुर्नस्थापनाका लागि नै भएका थिए । तर ढुक्क कोही थिएन । यो संसदीय पद्दतिमार्फत जनवाद वा समाजवादमा पुगिन्छ र ? भन्ने संसय क्यार्डरहरूमा नभएको होइन । विभाजित वामपन्थमा केही साना वाम पार्टीहरूले संसदीय भाषमा जाकिने खतरा नऔंल्याएका पनि होइनन् । तर मूलधारको संसदीय मोह भङ्ग गर्न कसैले सकेन । एमालेले २०४९ सालमा सम्पन्न गरेको पाँचौ महाधिवेशनपछि आफ्नो पार्टीको मूल कार्यनीतिको नाम नै "बहुँदलीय जनवाद" राख्न पुग्यो । संसदवादमा यो चाँही पक्का भसाई थियो । २०५१ सालको पहिलो अल्पमतको सरकार कामरेड मनमोहन अधिकारीको नेतृत्वमा नौ महिना टिकेपछि सत्ताको चस्को यसरी पस्यो कोही पनि बाहिर निस्कन तयारै भएनन् । विस्तारै पार्टीभित्र व्यक्तिवादी संस्कार र संस्कृति हावी हुँदै गयो । विकृतिहरू मौलाउदै गए । २०५२ सालमा नेकपा (माओवादी) ले जनयुद्ध सुरु गरेपछि युवाहरू क्रमश: माओवादतिर आकर्षित हुँदै थिए । एमाले नेतृत्व माओवादको उत्थानलाई पानी फोका ठानिरहेको थियो र अन्धाधुन्ध निर्णय लिइरहेको थियो । त्यसमध्य एक थियो भारतसँग गरिएको महाकाली एकीकृत सन्धीमा एमाले नेतृत्वले सत्तापक्षसँग कुम जोड्न पुगेको कुरा । अरु धेरै इश्यू गाँसिएका थिए तर मूल राष्ट्रवादकै कुरा बन्यो । एमाले विभाजीत भएर माले बन्यो । तर नेतृत्व गर्ने कामरेड वामदेव गौतम स्वयं "बहुँदलीय जनवाद" का निष्ठावान कार्यकर्ता थिए र हामी उनकै नाम र कामका पछि लागेका थियौं । कांग्रेस-एमाले-भारत गठबन्धनका अगाडि नवगठित माले

आम निर्वाचनमा असफल सावित भयो । असफल भएपछि शिथिलता आउनु अस्वभाविक थिएन ।

कामरेड वामदेव गौतम पार्टी चलाउन नसक्ने निश्कर्षमा पुगे । उनी आफूभित्रका चरम अनुयायीहरूसँग सल्लाह गरेर एमाले फर्किने निश्चिय गरिसकेका थिए । यो खासखुस सार्वजनिक भएपछि एमाले र माओवादीबीच अर्को र्‍याडिकल फोर्स तयार पार्न सकिन्छ कि भनेर हामीले 'तेश्रो शक्ति' निर्माणका लागि पहल गर्‍यौं । तत्कालिन मसाल र एकताकेन्द्रसँग गठजोड गर्न पनि खोज्यौं तर असफल भयौं । त्यही तेश्रो धारका नाममा गरिएको सेमिनारमा कामरेड हरि खेवासँग मेरो पहिलो भेट र कुराकानी भएको थियो । नयाँ माले विघटनको किनारतर्फ धकेलिँदै जाँदा मेरो "मालेको खरानीमा नयाँ जीवनको खोजी" शीर्षकमा एउटा लेख कान्तिपुरमा प्रकाशित भएको थियो । यो लेख वास्तवमा एउटा क्रान्तिकारी दस्ताको सम्भावित देहावसानमाथि एकखालको स्पष्टिकरण थियो । केही दिनपछि देशभरीका मालेसँग आवद्ध व्यक्तिहरू असंगठित व्यक्तिका हैँसियतमा माओवादी जनयुद्धमा सहभागी हुन पुगे । जनयुद्ध त्यसपछि देशव्यापी बन्यो । त्यसमध्य हरि खेवा पनि एक हुनुहुन्थ्यो । वि.सं. २०५७ पछि माओवादीका नाममा जेल, नेल, कुटाई, गोदाइ र निर्मम यातना पाउने र मारिने हजारौंको संख्या जुन गतिमा थपियो त्यसमध्य अधिकांस माले पंक्तिवाट माओवादी जनयुद्धमा प्रवेश गरेकाहरू नै सर्वाधिक थिए । हामीमध्य जो एमाले पनि फर्किएन र माओवादी जनयुद्धमा पनि जोडिएनन् तिनका लागि पनि कम रिस्क थिएन । झण्डै त्यसपछिका ७ वर्ष अधिकांस पुराना साथीभाईसँग भेटघाट र उनीहरूका वारेमा कमै सुचना उपलब्ध भयो ।

ooo

हरि खेवा संविधानसभा सदस्यका रूपमा सिंहदरवार पस्नु भो । पूर्व प्रधानमन्त्री सूर्यबहादुर थापालाई हराएर आउनु भएकोले पनि तुलनात्मक रूपमा बढि लोकप्रीय देखिनुभएको थियो । हामी लामो अन्तरालमा भेट भएका थियौं लामो भलाकुसारी गर्‍यौँण । पहिलो संविधानसभामा रहेका ६०१ सभासद्मध्य २३७ तत्कालिन

माओवादीवाट प्रतिनिधित्व भएको थियो । हामी दुई हरि मिलेर हिसाव गर्दा २३७ मध्य ८७ जना सभासद् पूर्व माले व्याकग्राउण्ड बोकेका थिए ।

संविधानसभामा म व्याकवेञ्चर थिए । मन्त्रीपरिषदवाट मनोनयनका २६ कोटा मध्य एक जना । साथीहरू के बिषय बोल्ने, प्रस्तुति कसरी गर्ने, कसरी बोल्दा बोलीको महत्व हुन्छ भन्नेबारेमा हामी नियमित छलफल र बहस हुनु स्वभाविक थियो । हरिजी धेरै मानेमा परिस्कृत हुनुहुन्थो, शुशिक्षित र सरल भाषामा सहज ढङ्गले भाँती पुऱ्याएर बोल्ने वक्ता हुनुहुन्थ्यो ।

पहिलो संविधानसभाको पछिल्लो कालखण्डमा अर्थराज्यमन्त्री हुनु भो । म अर्थशास्त्रीको विद्यार्थी भएका नाताले पनि हामी पुनः नजिकिउ । आफुले जानेको बुझेको कुरा भन्नलाई मलाई गाह्रो थिएन । किनकी म पार्टी सदस्य थिइनँ । तर वहाँहरू पार्टी अनुसासनको घेराभित्र हुनुहुन्थ्यो । नेकपा माओवादी वास्तवमा आन्दोलन थियो । पार्टी भईसकेको थिएन । बिस्तारै संसदवाद मात्र होइन नवउदारवादी व्यक्तिवाद हावी हुँदै गएको थियो । माओवादी पार्टी आन्दोलन भएकाले त्यहाँभित्र धेरै भँगालाहरू थिए । जातीय, क्षेत्रीय, भाषिक, जस्ता आइडिन्टिटीको विषय एकातर्फ, वर्गको विषय अर्कोतर्फ र पुरानो जनमोर्चावाला माओवाद अर्कोतर्फ । आफैंभित्र धेरैवटा वर्गमा विभाजित थियो त्यो वेलाको माओवादी । सन्तुलन मिलाउन नसक्दा कुनै पनिवेला सिसा फूटेझै टुक्रा-टुक्रामा विभाजित हुनसक्ने अवस्था । नभन्दै पहिलो संविधानसभासँगै विभाजित भयो माओवादी ।

चिन्तित हुनुहुन्थ्यो हरिजी । बौद्धिकहरूले हस्तक्षेप गर्नुपऱ्यो भनेर वहाँले मलाई भनिरहनु हुन्थ्यो । तर हाम्रा पनि समस्या थिए । सबैभन्दा पहिला त बौद्धिकता केलाई भन्नेमै माओवादीभित्र दरार थियो । जनयुद्धमा पठन संस्कृति कम्जोर थियो । जस्ले गर्दा नयाँ संस्कार र संस्कृति भुत्ते भएको थियो । मूलधारमा ओर्लदा समाज र राष्ट्रलाई परिवर्तन गर्ला भन्दा-भन्दै यस्का ठूला नेता आफैं संसदीयभाषमा भासिँदै गए । परिवर्तन नारामा सीमित हुँदै गयो । जीवन केही मानिस सुखी हुनेमा सीमित हुँदै गयो । पाखामा बसेका हामीहरू यही नियालिरहेका थियौं । यद्यपि वाम

आन्दोलनमा आशालाग्दा हरि खेवाहरूजस्ता नक्षेत्र पनि छन भनेर अशा गर्ने ठाँउ देखिन्थ्यो । अकस्मात वहाँको देहावसानको खबरले हाम्रा आशामा बज्रपात भएझैँ भयो । तर हिम्मत हार्न नहुने कुरामा हामी सबै विश्वस्त छौँ । युग कवि रिमालको आमाको सपनाझैँ ।

(**लेखक पूर्व माननीय तथा स्वतन्त्र वामपन्थी हुन् ।**)
काठमाण्डौं ५।०७।२०१९
hariroka@gmail.com

# जनताका नेता क. हरि खेवा जस्ता नेता जन्माउन अरू धेरै दशक लाग्नेछ

**गंगा कार्की**

हामी २०५५ साल मंसिरमा म इटहरी, धरान, भेडेटार, धनकुटा, हिले, पाखिवासहुँदै अरुणको किनारैकिनार भोजपुरको घोडेटारमा पाइला टेक्न पुग्यौं । हुन त हामी धरानहुँदै भेडेटारबाट तमोरतिर ओरालो लाग्दै मेरो कार्यक्षेत्र टेक्न पुगेका थियौं । त्यो टिममा कमरेड बलराम तिमल्सिना, वहाँकी जीवनसंगिनी विनिता, लक्ष्मी मुडभरी, शिव श्रेष्ठ र म थियौं । शिव र लक्ष्मी भोजपुरका स्थानीय साथीहरू थिए । मलाई इटहरीको तरहराबाट गाडी चढेर धरानतिर लागेदेखि नै त्यहाँको भूगोल र प्राकृतिक छटा असाध्यै मन पर्‍यो । पश्चिम बगेको तमोर, दक्षिण फर्केको धनकुटा र हिले बजार हुँदै पाखिवासतिर ओरालो लागेपछि असाध्यै शान्त अरुण नदीको शिरमा मकालु हिमश्रृङ्खला, अरुणको वारीपारी किनारामा पहेलपुर धान र कोदो पाकेको थियो । जतातत‍ै फुलहरू फुलेकोले मेरो निम्ति कुनै स्वर्ग भए यही हो भन्ने अनुभूति हुन्थ्यो । त्यो क्षेत्रको एउटा विशेषताचाहिँ सयमिटर माथि हिउँ पर्ने लेक र सयमिटर तल लटरम्मै धान हुने खेत देख्न पाउनु एउटा ठूलो अवसरको रूपमा मैंले लिएँ । अर्को रमाइलो कुरा पाखिवास बजारमा पुगेपछि देखिने संखुवासभाको खाँदवारी, तुम्लिङटार, चैनपुर र भोजपुरको साङपाङ देउराली र सदरमुकाम टक्सारले मेरो

मनलाई खुशीले पानी-पानी बनाएको अनुभूति हुन्थ्यो । अझ भोजपुरको उत्तरतिर रहेको ट्याम्के र सिलिङचोङ पहाडको दृश्यले मन भुलाउने मात्रै नभएर सम्पूर्ण रूपले हराइन्थ्यो । दोलखा छाडेर अपरिचित ठाउँमा पुग्दा सुरुका दिनहरूमा मेरो बाँच्ने आधार यिनै प्राकृतिक मनोरम छटाभित्र लुकामारी गरेर जिउने काम भयो । शुरुमा मेरो भन्ने त्यही दुइचार जना कमरेडहरू र त्यही प्राकृतिक छटाभन्दा बाहेक केही थिएन । त्यही दुइचार जना साथीहरू र प्राकृतिक छटालाई आफ्नो बनाएर पूर्वी पहाडमा म पाइला टेक्न पुगें ।

धनकुटा पञ्चायतकालदेखि नै छिन्ताङकाण्डले चर्चाको शिखरमा थियो । पञ्चायतकालमा धनकुटा जिल्लामा सूर्यबहादुर थापाको दबदबा भएको बेलामा छिन्ताङमा गोली हानेर होनाहार किसानहरू मारिएका थिए । मेरो कार्यक्षेत्र धनकुटामा एकजना अपाङ्ग मगर दाइसँगको सम्पर्क पहिलो थियो । धनकुटा बजारको पुच्छारमा घर भएका प्यारालाइसिस रोगले थलिएका ती दाइको घरको आर्थिक अवस्था निकै नाजुक थियो । बजार सकिएपछि बाटोको भित्तापट्टि रहेको घरमा म धेरैपटक गएर भूमिगत बसेँ । भाउजु असाध्यै दानी हुनुहुन्थ्यो । त्यो परिवार क्रिस्चियन धर्मालम्बी थिए । दुःखमा पनि दाइभाउजु असाध्यै प्रेमपूर्वक बसेका थिए । त्यसपछि धनकुटा गुराँसेका उदयबहादुर बस्नेतसँग सम्पर्क भयो । वहाँ पनि असाध्यै राम्रो मान्छे मात्रै होइन, एमालेको वरिष्ठ नेता हुनुहुन्थ्यो । वहाँले चिया बगान लगाउँदै हुनुहुन्थ्यो । धनकुटा बजारनजिक भएर पनि अजकमा रहेको उदयको घरमा हामी धेरैपटक बस्यौं । वहाँ माओवादीमा प्रवेश गरेपछि हाम्रो सम्पर्क व्यापक बन्दै गयो । छिन्ताङमा सम्पर्क गराउने उदयबहादुर बस्नेत नै थिए । छिन्ताङको एकजना पन्चनमान राई (नाम गलत पर्न सक्छ जो छिन्ताङ काण्डमा जेल बसेका थिए) लाई भेटेका थियौं । छिन्ताङ काण्डमा संलग्न दाइको कथा निकै दर्दनाक थियो । त्यसबाट हामी सबैलाई एउटा गतिलो प्रेरणा मिल्यो । छिन्ताङलाई माओवादी जनयुद्धमा जोड्नुपर्छ भन्ने हाम्रो योजना थियो । सो योजना मुताविक ती दाइलाई पहिला भेट्न जाने कमरेड बलराम तिमल्सिना र कमरेड पदम राई थिए ।

त्यस्तै अर्का एमाले धनकुटाका नेता राजकुमार राई मेरा प्रिय मित्र थिए । पञ्चायतकालमा गोविन्द राई र राजकुमार राई दोलखाको शान्ति आदर्श मावि लादुकमा पढाउन जीतवीर लामाले लगेका रहेछन् । सायद त्यसबेलाका दुवै जल्दाबल्दा एमालेका कार्यकर्ता भएर जीतवीर लामाले लगेको होलान् । वहाँहरूसँग भेट्दा निकै लामो बहस हुन्थ्यो । एकदिन दोलखाको गुँमुँखोलामा ती दुवै जनासँग मेरो भेट भयो । वहाँहरू पनि चर्को म पनि कम नभएकोले बहस हुँदै जाँदा निकै खस्रो अवस्था सिर्जना भयो । छलफल भनाभनको अवस्थासम्म ओर्लिएको थियो । राजकुमार राईसँग तिनै मगर दाइबाट सम्पर्क भयो । राजकुमारसँग कहिले एमाले पार्टी कार्यालयमा, कहिले होटलमा र कहिले बाटोमा भेट हुन्थ्यो । यो सम्बन्धले मलाई धनकुटा बजार घुमफिर गर्न सजिलो भएको थियो । राजकुमार राई दोलखाबाट शिक्षक जागिर छाडेर धनकुटामा एमालेको राजनीति गर्न लागेका रहेछन् । गोविन्द राई भने गामोदय उच्च मावि भ्याकु गाविसको प्राचार्य हुनुहुन्छ । अहिले गोविन्द सर नेकपा (माओवादी केन्द्र) को शिक्षक सङ्गठनमा सक्रिय हुनुहुन्छ । राजकुमारले फलानो फलानोलाई भेट्नु भनेर सम्पर्क दिन्थे । धनकुटामा सङ्गठन विस्तार गर्ने यो मेरो एउटा माध्यम बन्यो । राजकुमारसँगको भेटघाटले सुरक्षाका लागि पनि धेरै सहयोग गऱ्यो ।

अर्को सम्पर्क उदय बस्नेतले हरि खेवासँग गराउनु भयो । हरिकोमा उदय बस्नेत, बलराम तिमल्सिना, पदम राई र म साँझमा पहिलो पटक गएका थियौं । धनकुटाको हिले सैनिक क्याम्प काटेर हामी हरिजीको घर हात्तिखर्क गाविस हाल छथर जोरपाटी वडा नं. १ मा पुग्यौं । पहिलो पटक क. हरिजीलाई देख्दा म साँच्चै मोहित भएँ । मिलेको शारीरिक बनावट, अनुहार असाध्यै सुन्दर र हँसिलो, कपडा मिलाएर लगाउने, लरक्कै लर्केको ठिटो, क्षमता र तार्किकता पनि अद्भूत नै भएको हरिजीलाई जसरी पनि माओवादीमा प्रवेश गराउने मैले अठोट गरेँ । अन्य साथीहरूको पनि त्यस्तै कुरा रह्यो । भेट भएको पहिलो रातमा निकै लामो छलफल भयो । वहाँको जीवनसंगिनी पनि असाध्यै राम्री र फरासिलो स्वभावको हुनुहुन्थ्यो । लिम्बूहरू त्यसै पनि फरासिला हुन्छन् । मेडम विशेष प्रकारकै फरासिलो

हुनुहुन्थ्यो । हरिजी एमालेबाट हात्तिखर्क गाविसको निर्वाचित अध्यक्ष हुनुहुन्थ्यो । वहाँको घरमा हामी धेरैपटक पुगेपछि वहाँ तत्कालीन माओवादी पार्टीमा विनासर्त प्रवेश गर्नुभयो । मैले विना प्रसङ्गै भएपनि एउटा कुरा भनिहालौं । नवीन रिमाल दोलखामा यौन कारवाहीमा परेर पूर्व सरुवा भएको थियो । त्यहाँ पनि त्यस्तै हर्कतहरूको सङ्केत देखा पर्न थालेपछि हरिजीकै घरबाट नवीनलाई दोलखा फिर्ता पठाइएको थियो । हरिजीले त्यो छलफल सुन्नुभएको रहेछ । त्यो छलफल र निर्णयबाट वहाँ अझै स्पष्ट भएको कुरा पछि मलाई भन्नुहुन्थ्यो ।

पहिलो संविधानसभाको चुनावमा क. हरिजीले धनकुटाबाट सभासद जित्नुभयो । यहीँबाट प्रमाणित हुन्छ कि वहाँ कति राजनैतिक हिसावले स्थापित र जनताको इमान्दार नेता हुनुहुन्थ्यो । त्यो स्तरको नेता नभएको भए धनकुटाजस्तो जिल्लामा चुनाव जित्ने सम्भावना थिएन । म मेची कोशीबाट सरुवा भएपछि निकै लामो समयसम्म वहाँसँग प्रत्यक्ष भेट हुन सकेन । डा. बाबुराम भट्टराई प्रधानमन्त्री हुँदा कमरेड हरि खेवा जब अर्थ राज्यमन्त्री हुनुभयो । त्यसपछि नियमितजस्तै भेटघाट र कुराकानी भइरहन्थ्यो । दोलखाको भुमेस्थान, तितेचउर, डाडाखर्क सडकलाई पन्ध्रलाख बजेट वहाँकै पहलमा हालिदिएको हो । अर्को कुरा म वहाँको कार्यकक्षमा जाँदा सदैव उठेर मसँग हात मिलाउनु हुन्थ्यो । मलाई अन्य कुरामा पनि असाध्यै आदर गर्नुहुन्थ्यो । मलाई विश्वसर भन्नुहुन्थ्यो । वहाँलाई भेट्न जानेहरूसँग पनि त्यत्तिकै आदरभाव दर्शाएको मैले पाउँथे । वहाँ पार्टीभित्र देखापरेका समस्याप्रति चिन्तित हुनुहुन्थ्यो । पार्टी निर्माणका बारेमा वहाँसँग निकै लामालामा छलफलहरू हुन्थे । वहाँ एउटा पूर्वको मात्रै नभएर देशकै कुशल नेता हुनुहुन्थ्यो ।

बिहानै मोवाइलमा एक्कासी म्यासेज आयो । पूर्व अर्थ राज्यमन्त्री हरिराज खेवाको बस दुर्घटनामा मृत्यु ! म छाँगाबाट खसेजस्तै भएँ । मलाई पत्याउन कठिन पर्‍यो । मुटुको धड्कन एक्कासी बढ्यो । चक्कर लागेजस्तो भयो । पूर्वतिरका साथीहरूलाई फोन गरेर सोधेँ । अपुष्ट छ भन्नुभयो । त्यसपछि टिभीमा ब्रेकिङ न्युज दिन थाल्यो । टिभीले समाचारमा दियो । अलिपछि टाउकोबाट रगत बगिरहेको शवको फोटो फेसबुकमा देखियो । फेसबुकमा त्यो घटना भाइरल बन्यो । मारेकटहरेमा

एकजना जिल्ला पार्टी सदस्यको बुबाको शोकसभा कार्यक्रममा पुगेर घर फर्कदै गर्दा सिधुवामा बसको ब्रेकफेल भएर दुर्घटनामा पर्दा वहाँको असामयिक निधन हुन पुग्यो। वहाँ लगायत धेरै जनाको निधन भएको घटना सम्फँदै जिउ सिरिङ्ग हुन्छ। यसरी माओवादी केन्द्रले फेरि अर्को पूर्ति गर्न कठिन एउटा नेतालाई गुमाउन पुग्यो । मेरो सहयोद्धा, पूर्वका होनाहार कुशल नेता क. हरि खेवालाई गुमाउनु पार्टी केन्द्र विशेषतः पूर्वका जनताको निकै ठूलो दुर्भाग्यको कुरा हो । पूर्वले हरि खेवाजस्ता नेता जन्माउन अरु धेरै दशक लाग्नेछ। तै पनि हरि खेवा पाउन मुश्किल छ। नेकपा (माओवादी केन्द्र) पार्टीभित्र पूर्व र पश्चिमको ठूलो असन्तुलनको रोग देखा परिरहेको अवस्थामा हरि खेवाजस्ता होनाहार कुशल नेताको निधन हुनु आफैंमा विडम्बना हो । वहाँका बारेमा जति लेखेपनि कम हुन्छ । हामी बाँचेका भन्नेहरूले हरि खेवाबाट सिक्ने धेरै कुराहरू छन्। वहाँले दिएर गएका सकारात्मक सन्देशहरू हामी सदैव अनुशरण गर्नेछौं । हरिराज खेवाजस्तै जनताको आँखाको नानी बन्न कोशिस गर्नेछौं। तपाईका सपना पूरा गर्ने प्रतिवद्धता जाहेर गर्दछौं। क. हरिलगायत त्यस घटनामा निधन हुने सबैप्रति हार्दिक श्रद्धाञ्जली अर्पण गर्दछौं । घाइतेहरूको शीघ्र स्वास्थ्य लाभको कामना गर्दछौं। सबै शोक सन्तप्त परिवारप्रति समवेदना प्रकट गर्दै धैर्यधारण गर्न अनुरोध गर्दछौं। वहाँका सपना पूरा गर्न पार्टी निरन्तर लागिरहने विश्वास पनि दिलाउन चाहन्छौं। क.हरि खेवा-अमर रहुन्।

# अपदस्त जिन्दगी, दुर्घटना यस्तो थियो

**दिवेश खड्का**

२०६० सालतिरको कुरा हो । धनकुटा बहुमुखी क्याम्पसमा आइए दोस्रो वर्षको पढाई चलिरहेको थियो । अघिल्लो साल हिलेबाट धाइयो । धेरै खाले कठिनाईहरू भोग्नुपर्दा बरू घर भाडामै लिएर बस्ने घर सल्लाह भयो । मेरो स्कुले साथी पृथ पौडेल पनि धनकुटा डेरा बसेर पढ्ने भनेकोले सँगै डेरा बस्ने निधो गरियो । त्यो समय धनकुटा चकाचक थियो । अहिले जस्तो गाउँ-गाउँमा पढ्ने प्लस टु थिएन । धनकुटा दिपा चोकमा घनेन्द्रराज श्रेष्ठको घर छ र त्यो खाली छ भन्ने थाहा भयो । अनि ममीले घनेन्द्रराज श्रेष्ठको श्रीमती (बोलाउदा ठूलो ममी भन्छु) सँग कुरा गरिदिनु भयो । घर खाली छ यसो संरक्षण गरेर बसे हुन्छ भन्नुभयो । हामीले घरको चाबी लियौं । बाहिरबाट एक तले घर आकर्षण थियो । बाहिर ठूलो आँगन । हरियो घाँसको चउर । हामी ढोका खोलेर भित्र पस्दा भने विचित्र थियो । बेगारी केटाकेटी, रक्सीले मातिएका उरन्ठेउलाहरूले भेन्टिलेटरको प्वालबाट ढुङ्गा हानेर भित्र ढुङ्गा र इटाको टुक्रा बग्रेल्ती थियो । फोहोरै फोहोर थियो ।

सबै सफा गऱ्यौं, झाडु लायौं अनि कुनाबाट माकुराको जाल सबै हटायौं । चारकोठे घरको अगाडिको दुवै कोठा खुल्ला थिए । भित्रको एउटा कोठा सामान भरिभराऊ थियो । हामीलाई त्यहाँको सामान नचलाई त्यही बस्ने कोठाको चाबी पनि दिएका

थिए । हामी त्यो कोठा प्रवेश गर्दा त्यहाँ सबै व्यवस्थित थियो । मानौ कोही व्यक्ति त्यहि बस्छ ।  कार्पेट, साने गलैचा, बुक राख्ने च्याकलगायत सबै सामान भरिभराउ थियो । किताबको च्याकमा राजनैतिक आवरण भएको पुस्तक प्रष्ट देखिन्थ्यो । यसबाट प्रष्ट हुन्थयो विगतमा यहाँ कुनै राजनितीज्ञ बस्थ्यो भनेर । एउटा सानो हरियो गाता लगाएको किताब अलिक धेरै थियो । बाहिरी आवरण एउटा कलात्मक आवरण भएको अब्स्ट्रयाक्ट थिम थियो । नाम थियो “अपदस्त जिन्दगी” । मलाई स्मरण भएसम्म कालो ठूलो अक्षरमा अपदस्त जिन्दगी र त्यसको ठिक मुनी अलिक सानो अक्षरमा हरिराज खेवा लेखिएको थियो । यो किताब त हरि दाइको रहेछ प्रष्ट भयो । र, सोधिखोजी गर्दै जाँदा हामी बसेकै कोठामा अलिक अगाडि हरि दाइ बस्नुहुँदो रहेछ र त्यो च्याक भरिको राजनैतिक पुस्तक पनि वहाँकै रहेछ ।

उसो त हरिराज खेवालाई प्रष्ट नदेखे पनि वहाँको नामसँग परिचित थिएँ । हात्तिखर्कको पूर्व गाविस अध्यक्ष भनेर धेरै पटक नाम सुनेको थिए । अनि एउटा राम्रो साहित्यकारको रूपमा मैले पाए, जब वहाँको अपदस्त जिन्दगी दोहोऱ्याई तेहऱ्याई पढे । वास्तवमै एउटा राम्रो एकाङ्की थियो । राजनैतिक रूपमा नजिक बाट चिन्ने अवसर वहाँ संविधानसभाको पहिलो निर्वाचनमा हाम्रै क्षेत्र धनकुटा क्षेत्र नं. २ बाट निर्वाचित सभासदको रूपमा भयो । पछि बाबुराम भट्टराई मन्त्री परिषद्मा वर्षमान पुन अर्थमन्त्री रहँदा अर्थ राज्यमन्त्री पनि बन्न सफल हुनु भयो । गाविस अध्यक्ष, सभासद हुँदै अर्थराज्यमन्त्रीसम्म बन्न सफल युवा नेता हरिराजखेवा धनकुटा जिल्लाकै एउटा उदियमान नेता हुन सफल हुनुभयो ।

तर अफसोच् २०७३ साउन १३ गते भएको सिधुवा चर्च मुनिको बस दूर्घटनामा वहाँको दुःखत निधन भयो । एउटा उदियमान नेताको जीवन नियतीले अपदस्त गऱ्यो । वहाँको एकाङ्कीको शीर्षक झैँ । यो दूर्घटना एक भयावह प्रकारको दूर्घटना थियो, मेरो लागि । किनकी घटनाको प्रत्यक्षदर्शी मध्ये एक म पनि थिए ।

साउने झरीको समय सिमसिम पानी परिरहेको थियो । दिउँसोको ११:४० को समय हुनुपर्छ । तेस्रो घण्टी लागिसकेको थियो । सबै शिक्षक साथीहरू आ-आफ्नो कक्षामा

गई सक्नु भएको थियो । कमल सर अफिसतिर बाट आउँदै हुनुहुन्थयो, म बाहिर नै थिए । ड्वाङ... ड्वाङ... गरेको आवाज सुनियो एक्कासी ।

“के भयो ? कमल सर !” मैले सोधे । माथि डाँडातिर हेर्दै भन्नु भयो “गाडी पल्टेको हुनुपर्छ ।” सिमसिम पानी अनि माथि डाँडामा त्यस्तो आवाज सुनेपछि मैले कमल सरलाई त्यतै जाउँ भने । मलाई लाग्यो यदि दुर्घटना रै’छ भनेपनि त्यहाँ उद्दार गर्ने मान्छेको कमि हुन्छ । हामी कुद्यौ त्यतै । दुर्घटना भएको ठाउँ हाम्रो विद्यालय सगरमाथा बोर्डिङ्गदेखि १५ मिनेट उकालोमा थियो । अलिकमाथि पुगेपछि ठूलो होहल्ला र बस पल्टिरहेको प्रष्ट देखियो ।

“कमल सर, तपाई तु फर्केर कक्षा ९ र १० को सबै केटा लिएर तु आउनु । त्यतिञ्जेल म माथि हेर्दै गर्छु ।” मैले भन्न साथ कमल सर ओरालो कुद्दै फर्किनुभयो । म माथि लागे । बस रोडबाट २० मिटर जति तल खसेको थ्यो । बारीको पाटामा बस थियो, मानौ रोडमा भएजस्तै तर बसको छत पुरै उडेको थियो । मानिसहरू छरपस्ट थिए । रोइकराई गर्दै थिए । वरिपरीको मानिसहरू, खेतालाहरू हतास देखिन्थे । केही मानिस बसमुनि पुरिएजस्ता । मैले वरिपरीको सबैलाई बोलाएर उद्दार गर्न अपिल गरे । पहिले बस मुनिको मानिस निकाल्न मुनिबाट खन्न थाल्यौ । सबै मानिसहरू बसबाट उछिटिएका थिए । बसमा कोही थिएन । कोदालो, कुटे अनि हातैले खोस्रेर पनि बस मुनि भएको दुई जनालाई सकुशल उद्दार भयो ।

त्यतिन्जेल कमल सरले २०/२१ केटा लिएर आउनुभयो । मैले घाइतेहरूलाई माथि रोडमा निकाल्न भने । साधन केही थिएन । त्यतै छरिएका सल, मत्रोको सहायताले माथि निकाल्दै थियौ । कोही खुट्टा भाचिएर थला परेको थिए । कसैको हात चेपिएर भाँचिएको थियो । कसैको गर्दनमा चोट थियो । कोही पानी पानी गर्दै रोई-कराई गर्दै थिए ।  बजारभन्दा टाढा भएकाले उद्दार गर्न नि निकै कठिन भयो । म गाडीवरिपरि हेर्न थाले । गाडी पल्टेर अडिएको माथिल्लो डिलमा जाँदा निलो हाल्फ स्टकोट, सेटो सर्ट, कालो जुत्ता, निलो पेन्ट लाएको मृत शरीर देखियो । मलाई चिन्न बेर लागेन । यो त हरिराज खेवाको लास रहेछ । अरु ५/६ वटा लास

नजिकै थिए । के गर्ने के नगर्ने हामी हतास भयौ । मैले विलम्व नगरी, धेरै नसोची सबै दिवंगत अनि घाइतेहरूको फोटो खिची स्वर्गीय हरिराज खेवाको नामै लिएर फेसबुकमार्फत पोष्ट गरे । डाटाबाट भएर अलिक नेट स्लो थियो । अनि म उद्दारमै जुटे । पोष्ट भएपछि त्यो 'न्युज भाइरल' भएछ । राष्ट्रिय मिडियाहरूले मेरै पोष्टलाई आधार मानेर न्युज निकाल्न थालेछन् । जताततैबाट फोन आउन थाल्यो । र, त्यो पोष्टले गर्दा रेडक्रस, सुरक्षा निकायको नि ध्यानाकर्षण भयो र उद्दारका लागि गाडी आउन थाल्यो । घाइतेहरूलाई गाडी चढाउन हामी जुट्यौ ।

धनकुटाबाट मिडियाका साथीहरू पनि आइपुगे । उनिहरूले सोधपुछ गर्न थाले । मैले बेलिविस्तार सबै बताए । एकछिनमा धनकुटाबाट आएको प्रहरीको टोलीले मृत लासहरूलाई एक ठाउँमा छेऊ लगायो । धेरैको सनाखत भएको थिएन । अनि उद्दार सकेर म घरतिर आएर मोबाइलको वाइफाइ अन गरे । यतिकै ट्या ट्या र टु टु गरेर मोबाइल बज्न थाल्यो । मैले घटनास्थलबाट पोष्ट गरेको न्यूज दुई हजार भन्दामाथि शेयर भइसकेको रै'छ । अनि इनबक्समा हजारौको म्यासेज । घटनाको बारेमा सोध्न । जिज्ञाशा राख्न । केहीलाई रिप्लाई दिए । अनि एक खाले मानसिक तनाब पनि भयो । पूर्व अर्थ राज्यमन्त्रीको निधनले होला राष्ट्रिय मिडियाहरूले प्राथमिकताका साथ समचार सम्प्रेशण गरिरहेको थिए ।

तर्कनाले रातभर निद्रा लागेन । एक त दिउसोको त्यो दृश्य आँखा वरिपरी नाँचे जस्तो । मनमनै सोचे घटना घट्ने बितिकै मैले गरेको पोष्टले मृतकहरूको आफन्तमा कस्तो बज्रपात पऱ्यो होला । अनि उनिहरू कसरी सम्हालिए होलान् । फेरि मैले त्यति नगरेको भए अरुको ध्यानाकर्षण पनि त हुने थिएन । मनमा द्वन्द्व चलिरह्यो । मोबाइलमा देश विदेशबाट म्यासेज आउने क्रम रोकिएन ।

"कसरी, कहाँ, को को परे?" यस्तो प्रश्नको सामना रातभर गर्न पऱ्यो । आँखामा निद्रा थिएन । सुकिलो ड्रेसमा सफाचट देखिने स्वर्गीय हरिराज खेवाको मृत शरीर आँखाबाट हराउनै सकेन । वहाँको एकाङ्कीजस्तै नियतिले वहाँकै जिन्दगी अपदस्त गऱ्यो ।

dweskc@gmail.com

# हरिदाइ दाजुभन्दा पनि बढि साथी

**थर्कदीप तिगेला**

हरिराज खेवा मेरो साइनोले दाजु त हो, तर त्यसभन्दा बढि दुःखसुखको साथी हुनुहुन्थ्यो । राजनैतिक गुरु हुनुहुन्थ्यो । मैले माध्यमिक शिक्षा पार नगरी वहाँ हात्तिखर्क गाविसको अध्यक्ष बन्नुभएको थियो । गाविसको अध्यक्षको लागि पनि फेरि आफ्नै काकाका छोरासँग भिडेका । तत्कालिन एमालेबाट हरि दाइ र राप्रपाबाट लोकेन्द्र तिगेला दाइ । लोकेन्द्र दाइ पहिले पनि पटक पटक विजेता बनिसक्नुभएको र उमेर पनि पाको बन्दै जानुभएकोले जनलहर युवा नेतामै गयो । त्यो जनलहरले २७ वर्षको कलिलो उमेरमै गाविस अध्यक्ष बन्नुभएको थियो हरिदाइ ।

मैले राजनीति बुझिसकेकै थिइनँ । गाविस अध्यक्ष जितेर आफ्नो पारिश्रामिक नलिने घोषणा गर्नुभएको हल्ला चल्यो । गाउँलेहरूले भन्थे -यस्तो पो नेता । तसर्थ मलाई पनि दाइप्रति श्रद्धा जाग्थ्यो ।

म भने कक्षा ८ मा पढदा पढदै नेपाल स्वतन्त्र विद्यार्थी मोर्चाको स्कुल अध्यक्ष भएर काम गर्न थालेको थिए । पछि म धनकुटा क्याम्पस पढ्न थाले । धनकुटा पढ्दा मेरो अझ धेरै सङ्गत मोर्चाका अन्य साथीहरूसँग भयो । यो सङ्गत चाही आफ्नै माइला दाइ विश्वासदीप तिगेलाको कारण भएको थियो । लिम्बू विद्यार्थी मञ्चसँग पनि काम गर्नुपर्ने अवस्था आयो । यता गाउँमा माओवादी द्वन्द्वले विस्थापित हुने तरखरमा थिए । हरिदाइलाई पनि माओवादीको आरोप लाग्यो । अध्यक्ष एमालेको भए पनि भित्रि रूपमा माओवादीलाई सहयोग गर्नु हुन्थ्यो । यो कुरा प्रशासनलाई थाहा भयो र यसै कारण एक प्रहरी अधिकृतसँग झगडा भयो । तसर्थ भूमिगत हुनुपर्ने अवस्था आयो ।

धनकुटामा मैले लामो समय पढ्न पाइनँ । कारण, काठमाडौंमा बन्दै गरेको घरको रेखदेख गर्नुथियो । तसर्थ पढ्दापढ्दैको क्याम्पस सारेर ताहाचल क्याम्पसमा भर्ना भएँ । लिम्बू विद्यार्थी मञ्च तथा नेपाल स्वतन्त्र विद्यार्थी मोर्चाको केन्द्रीय सदस्यको जिम्मेवारी बोक्नु परेकोले गर्दा काठमाडौं बस्दा सहज हुने भयो ।

हरिदाइसँग काठमाडौंमा भेट हुन्थ्यो, वहाँ भूमिगत भएरै हिड्नु हुन्थ्यो म काठमाडौ नआइकन भोगेको दुःख खुब सनाउनु हुन्थ्यो । दाइको आफ्नै पार्टी र साहित्य तथा रङ्गमञ्चसँग नजिक रहेकाहरूसँग दाइको सङ्गत हुन्थ्यो । यो सङ्गतमै हाम्रो कहिलेकाही चियागफ हुन्थ्यो । बाँकी त म मेरै सङ्गठन तथा साथीभाइसँग व्यस्त रहन्थे ।

जब जनआन्दोलन २०६२/६३ सालले एउटा परिवर्तन ल्यायो, हरिदाइ र मलाई एकै मोर्चामा ल्याइपुऱ्यायो । वहाँ भूमिगतकालिन मोर्चासँगै आवद्ध हुनुहुन्थेछ । मैले काम गरिरहेको सङ्गठनमा पनि विचलन आएको थियो । त्यसैले गर्दा पनि मेरो पाइला तरलतामा दौडिरहेको थियो ।

हरि दाइले लिम्बूवान मोर्चामा काम गर्ने प्रस्ताव ल्याउनुभयो । लिम्बू विद्यार्थी मञ्च र किरात याक्थुङ चुम्लुङसँग आवद्ध भएकाले त्यसमा काम गर्न कुनै अनौठो थिएन मेरो लागि । लिम्बूवान मोर्चासँग आवद्ध भएपछि त्यहाँ भित्रको प्रशिक्षणहरूले मेरो तरलता भङ्ग गरिदियो । म ठोस भएँ । निरन्तर मोर्चासँगै रहेर काम गरेँ ।

दशौंवर्ष आन्दोलनमा होमिनेहरूको बिचमा म छेउबाट आएको व्यक्तिलाई उपयुक्त स्थान पाउनु कम सङ्घर्षको कुरा थिएन । मोर्चाले खटाएपछि सडक सफा गर्न निस्किएँ, उद्दार टोलीमा सामेल भएँ । हरेक आन्दोलनमा सरिक भएँ । मेरो अथक प्रयासले युद्धमा सामेल भएकाहरूसँग सहज काम गर्न वातावरण बनेको थियो ।

'समाज र देशको लागि काम गर्नेले पैसाको पछि लाग्नु हुँदैन' हरिदाइको मुलमन्त्र यहि थियो । गोजीमा एक पैसा नभए पनि कहिल्यै हतासिएको मैले पाइनँ । जति पुग्छ हिड्दै जाने, सकिएपछि यस्तो पो समस्या छ है भन्दै जनताको घरदैलोमा पुग्ने वहाँको बानी थियो ।

कुनै कार्यक्रम वा आन्दोलनको मोर्चामा रहँदा हामी खाना र खर्चको चिन्तामा हुन्थ्यौं, तर हरि दाइलाई केही वास्ता थिएन । त्यसो हुँदाहुँदै पनि कुनै साथी तथा कार्यकर्ताको मनोविज्ञान भने चाँडै बुझ्ने गर्नुहुन्थ्यो । मोर्चामा रहँदा साथीभाईसँग हुने सानातिना कुरामा प्रतिशोध लिएको कहिल्यै पाइनँ ।

**संविधान सभाको निर्वाचन र विजयी**

मोर्चामा रहेर काम गर्दा हाम्रो जिम्मेवारी काठमाडौं तथा पूर्वका विभिन्न भेगमा पर्‍यो । वहाँ अचानक ढुक्कै धनकुटा रहेर काम गर्न थाल्नुभयो । चुनावको मिति तोकिने, फेरि सर्नेजस्ता दिनचर्याले नेपालीलाई वाक्क बनाइरहेको थियो ।

चुनाव हुन्छ कि हुन्न भन्ने रणभुल्लमै अचानक चुनावको मिति घोषणा भयो । धनकुटा क्षेत्र नं. २ बाट हरि दाइले टिकट पाउनुभयो ।

भर्खरै आन्दोलन मत्थर भएर आएको पार्टीको गतिलो सङ्गठन थिएन । पहिले गाविस अध्यक्षमात्र भएको व्यक्तिको लागि संसदीय निर्वाचनमा पुगिहाल्ने आवश्यक जनाधार पनि थिए । फेरि हरेक चुनावमा विजयी हुँदै आएका पूर्व प्रधानमन्त्री स्व. सूर्यबहादुर थापाको निर्वाचन क्षेत्र परेकोले निकै सकसपूर्ण थियो त्यो टिकट । जे जति साथीभाई थिए, उनीहरूको राम्रो प्रतिक्रिया पनि थिएन ।

म पनि वहाँसँगै होमिए । हामीले हिम्मत हारेनौ । गाउँगाउँ पुग्यौ, बस्तीमै हाम्रो बास भयो । हाम्रो अथक प्रयासपश्चात हाम्रो माओवादी पार्टी त्यस क्षेत्रमा पहिलो बन्यो । हाम्रो क्षेत्रमा मात्र नभएर देशव्यापी रूपमै हाम्रो पार्टी पहिलो बन्यो । राजनीतिक वृत्तका शेर भनिने सुर्यबहादुर थापा पराजित बने ।

**अर्थ राज्यमन्त्री भएपछि म स्वकिय सचिव**

वहाँ संविधान सभाको सदस्य हुनुहुन्थ्यो । पार्टीको धनकुटा जिल्ला समिति र लिम्बूवान मोर्चाबाहेक माथिल्लो जिम्मेवारी थिएन । तसर्थ मन्त्रीमण्डल फेरिइरहँदा वहाँ पर्नुहुने कुनै सङ्केत भने थिएन । सदस्य भएकोले हुनसक्ने आधार भएता पनि

कुनै ठोस आधार भएन । तर कुनै हल्ला नै बिना वहाँ अर्थ मन्त्रालयको राज्यमन्त्री नाम आउदा हामी सरप्राइज़ नै भयौं । हरिदाइ मन्त्री बनेपछि म वहाँको स्वकीय सचिव बनेँ । वहाँको कार्यकाल अत्यन्तै राम्रो रह्यो । निर्णयमा अडिग हुनु नै वहाँको राम्रो पक्ष थियो । त्यसैले मन्त्रीभन्दा राज्यमन्त्रीसँग मन्त्रालयको कर्मचारी डराउने गर्थे ।

दाइ भ्रष्टचार भन्ने कुरा सुन्नै नमान्ने खालका थिए । पैसाको प्रलोभन देखाउने जो कोहीलाई गाली गरेर तुरुन्त बाहिर पठाउने गर्दथे । एकजना आफ्नै जिल्लातिरको सिमेन्ट फ्याक्ट्रीका मालिकले क्वाटरमा आएर पैसाको प्रलोभन देखाउदा तुरून्त पुलिस लाएर पक्रने भनि क्वाटर बाहिर पठाएको सम्झना छ ।

मन्त्री भएपछि आफ्नै पार्टीका नेताहरूले भ्रष्टाचार गर्न दबाब दिने तर त्यसको विरोध गर्दा नेताहरूसँग सम्बन्ध समेत बिग्रिएको थियो । मन्त्रालयमा रहँदा आफ्नो टेबलमा फाइल कहिल्य रोक्ने काम गरेनन् । इमानदार कर्मचारीको सधैँ सम्मान गर्ने पनि गर्दथे ।

वहाँकै पालामा महालेखा अन्तरगतको कर्मचारीहरूलाई ईन्सेटिभको व्यवस्था गर्ने निर्णय गरेको थियो । डोलिडार अन्तर्गतको देशैभरिको १३ वटा सडक योजना पास गर्ने पहल गरेको थियो । स्वरोजगार कार्यक्रम व्यवस्थित भएको थियो ।

थुप्रै टुक्रे योजना पास गर्ने काम भए तर पार्टीको बिग्रदो स्थिति थियो । ठूलो पार्टी हुनुको नाताले जनतामा धेरै आशा थियो । आशातीत फल नपाएपछि जनतामा निराशा व्याप्त थियो ।

### दोश्रो पटकको चुनावमा पराजित र मेरो जापान प्रस्थान

पहिलो संविधानसभाले संविधान बनाउन नसकेपछि वि.सं. २०७० मा दोश्रो चुनावको घोषणा गऱ्यो । हरिदाइले पुनः टिकट पाउनु भयो, तर जनताको निराशाले गर्दा सिङ्गो पार्टीले नै हार्न पुग्यो । सँगसँगै हामी पनि हाऱ्यौं ।

वहाँले हारेपनि पार्टीप्रति झनै डटेर लागि रहनु भयो । वहाँको डटाईप्रति पार्टीको विश्वास थियो । त्यसैले धनकुटा जिल्लाको अध्यक्षजस्तो पदमा आउन सफल हुनुभो । दाइसँगै म पनि जिल्ला सदस्य चुनिन सफल भए । हाम्रो दुई वर्षे कार्यकाल सँगै काम गरेर सफल पार्यौ । कार्यकाल सकिएपछि म आफ्नै पारिवारिक कारण विदेश जाने सोच बनाए तसर्थ गुपचुपमै जापानको तयारीमा लागेँ । मेरो तयारीले पूर्णता पाउँदै थियो, दाइलाई कसरी भन्ने, सल्लाह लिने भन्नेमा डर लागिरहेको थियो । मैले यथार्थ भन्नैपर्ने थियो । मैले दाइलाई भनेँ -जापान जाँदैछु दाइ ।

दाइ त हाँस्नु भो ! पहिल्यै खै कसरी हो थाहा पाईसक्नु भएको रैछ तर पनि भरसक नजानु यहि केही गरौ भन्दै हुनुहुन्थ्यो । तर मेरो सम्पूर्ण तयारी देखेपछि वहाँले अन्त्यमा भन्नुभयो -जानु । पार्टी सम्पर्कमा रहौंला ।

म जापान प्रस्थान गरेँ, उताबाट पनि म सम्पर्क रहिरहेको थिए । पार्टीले महाधिवेशन गर्ने तयारी गरिरहेको थियो । स्थानीय निर्वाचन हुने हल्ला पनि चलिरहेको थियो । पुनसंरचित मुलुकमा हाम्रो हात्तिखर्क गाविस छथरजोरपाटी गाउँपालिका बनेको थियो । चुनाव भइहालेको खण्डमा फर्किने कि भन्ने मनसायमा पनि थिएँ ।

**दाइको दुःखद देहावसन र पुगेको अपुरणीय क्षति**

जापानमा काम गरिरहेको थिए । विजया भतिजीबाट अचानक दाइको एक्सिडेट भएको खबर सुने । मैले शुरुमा त पत्याइनँ । यस्तो नभइदिए हुनेथियो ठाने । एकछिन काम छोडेरै यताउता बुझेँ पनि । नभन्दै सारा फेसबुक वाल र समाचारमा आयो आखिर सत्य नै रहेछ । भाउजु र कलिला नानीहरूलाई सम्झिएँ । त्यो बेला पर्ने आपतलाई सम्झिएँ । फर्किएर आइहालुँ भन्ने नलागेको पनि होइन, तर म पनि जञ्जिरमा बाँधिएको थिएँ । त्यसैले तत्काल आइहाल्ने स्थिति भएन ।

tharkadip.tigela@gmail.com

# भूकम्पपछिको पुनःनिर्माणमा हरिराज खेवासँग

**ओम प्रकाश निरौला**

२०७२ सालको भूकम्पले नेपालमा निकै ठूलो क्षति पुग्यो नेपालका खास-खास ठाँउमा र उक्त क्षतिसगैं एउटा अवसर भनौ वा सहयोग गर्ने रहर सबैमा जागेको थियो । त्यसबेला पार्टीहरूले पनि एउटा पूनःनिर्माण अभियान चलाएका थिए । त्यसै समयमा तत्कालिन नेकपा माओवादीको धनकुटा जिल्ला कमिटिको तर्फबाट जिल्ला अध्यक्षको रूपमा हरिराज खेवाको नेतृत्वमा हामी ओखलढुङ्गाको फुलबारी गाविसमा विद्यालय भवन निर्माणको लागि गऱ्यौ ।

हामीले सात दिन जति समय विद्यालय भवन पुननिर्माणमा बितायौ । त्यसवेला हामीले बास्तविक रूपमा श्रमिकका रूपमा कार्य गऱ्यौ । मेरो व्यक्तिगत जीवनको लागि त त्यो निकै नै ठूलो श्रम थियो । मैले त्यतिको काम शायद पहिला कहिल्यै पनि गरेको थिइनँ । अर्को अविस्मरणिय पक्ष के थियो भनें हरिराज खेवाले पनि हामीसँगै श्रमिक नै भएर काम गर्नुभएको थियो ।

संविधान सभाको सदस्यका साथै पूर्व राज्यमन्त्रीसमेत भइसकेका हरिराज खेवामा आफ्नो इतिहासप्रति कुनै घमण्ड थिएन । साधारण मानिसका रूपमा वहाँले जस्ता बोक्ने बाँसका भाटा बनाउने र खाबाँ गाड्नेजस्ता सबै काम गर्नुभयो । हामीले

उक्त अभियानमा रहदा त्यहाँका स्थानीय समुदायको मनमात्र जितेनौ धनकुटामा कम्यूनिष्ट पार्टीलाई अर्को उचाइमा लान र जनताका जनजीविकाका प्रश्नहरूमा धेरैभन्दा धेरै संवेदनशील भएर काम कसरी गर्ने भन्ने विषयमा बहस पनि गर्‍यौ ।

वहाँको पदप्रति पनि खास मोह थिंएन । उक्त अभियानकै क्रममा वहाँले भन्नुभएको थियो अब म अर्को कार्यकालमा अध्यक्ष बन्दिनँ । अरु साथीहरूलाई पालो दिन्छु । यो साँच्चिकै महान सोच र विचारको परिणाम थियो भन्ने मलाई लाग्छ ।

वहाँसँग चुनावमा हिडेको, र्‍यालीमा हिडेका तथा अन्य धेरै कार्यहरूमा सँगै रहेको यादहरू अझै ताजा छ । त्यसमा पनि भूकम्पपछि सँगै ओखलढुङ्गामा गएर श्रमदान गरेको याद निकै नै आइरहन्छ ।

omprakashniraula@yahoo.com

# मेरो स्मृतिपटमा कमरेड हरिराज खेवा

**सावित्रीकुमार काफ्ले 'समर'**

*जन्मी, हुर्की, बढी, खाइ-खेली जीवन बल्दछ,*
*नियती हो सबको उस्तै चितामा सब जल्दछ ।*
*न सानो न ठूलो कोही न कोही काल छल्दछ,*
*छ बाँच्नु मृत्यु पर्यन्त सुकर्मले नाम चल्दछ ।*

म दिनभरको काम सकेर कोठामा आइपुगेको मात्र थिएँ, कमरेड गीता गुरुङले फोनमार्फत् प्रत्यक्ष भेट गर्ने इच्छा जाहेर गर्नुभयो । मैले भोलि १०/११ बजेतिर बहाँसँग भेट गर्ने समय दिएँ, तोकिएकै समयमा हाम्रो भेट भयो । केही समयको भलकुसारी र औपचारिकता पछि 'हरिराज खेवा स्मृति प्रतिष्ठान' को लेटरप्याडमा लेख-रचना उपलब्ध गराउने व्यहोराको पत्र वहाँले मेरो हातमा थमाउनु भयो । हरिराज खेवा स्मृति ग्रन्थ प्रकाशन गर्ने र त्यसको लागि केही संस्मरणात्मक कुराहरू लेखिदिने मौखिक आग्रह समेत वहाँको थियो । केही दिन त पार्टीको केही विशेष काममा म व्यस्त छु, २/४ दिनपछि संक्षिप्त रूपमा केही लेखौँला भन्ने कुरा गरेर म छुट्टिएँ । ३ दिनपछि फोन गरेर वहाँले पुनः उही आग्रह दोहोऱ्याउनु भयो र आज कलम कापी लिएर बसेको छु – केही लेख्नको लागि ।

अहिले मेरो मानसपटलमा एउटा गोरो, चट्ट परेको, कद मिलेको, सुन्दर, हँसिलो र फरासिलो युवाको तस्विर नाचिरहेको छ । आठ वर्षे सहयात्रा र सहकार्यका पानाहरू पल्टिएका छन् दिमागमा । भावनाका छालहरू उर्लिएका छन् मनमा । म

एक्लै छु कोठामा, मौन छु, स्तब्ध छु र के लेखौं- के लेखौं हुँदै कलम खेलाउँदै छु हातमा । कति छिटो पग्लन्छ मन, पत्तै नपाई आँखा आँसुले भरिएका छन् । सायद वर्गीय प्रेमको चाह होला यो ! आफैं विक्षिप्त र विस्मित हुँदै के लेख्न सकिएला त खोइ ? कोट्टिएला त अतीत ? जबरजस्ती कलम दौडाउन खोज्दैछु – सादा कपीको पानामा ।

२०६२/०६३ को १९ दिने संयुक्त जनआन्दोलन सफल भइसकेको थियो । मेरो कार्यक्षेत्र पुनः फेरियो । म तत्कालीन सगरमाथा व्यूरोबाट कोशी व्यूरोमा स्थानान्तरित भएँ । पार्टी निर्णयानुसार म पूर्व आएँ – जनकपुरबाट । मलाई सुनसरी जिल्ला पार्टी इन्चार्ज बनाइयो, मेची-कोशी व्यूरोमा गएपछि । जनयुद्ध कालदेखि नै डोकोमा बोक्दै चलाएको एफएम रेडियो थियो हाम्रो गणतन्त्र एफएम नामको । त्यहाँभित्र रहेको पार्टी कमिटी र जनसाँस्कृतिक मोर्चा लगायत केही जनवर्गीय सङ्गठनहरूको इन्चार्जसीपको जिम्मा पनि मैले लिएँ । आफ्नो जिम्मेवारी अनुसार सङ्गठनात्मक काम कारवाहीहरू सुरु गरियो, कमिटीका भेला बैठकहरू चल्दै गए । यही क्रममा अखिल नेपाल जनसांस्कृतिक सङ्घको एउटा सानो भेला गरियो धरानमा । एउटा टाठो, तर्कशील र क्षमतावान युवालाई एक सांस्कृतिककर्मी सहितको रूपमा मैले त्यही भेलामा भेटेँ र मेरो मस्तिष्कमा सजियो त्यही दिनबाट क. हरिराज खेवाको तस्वीर ।

क्रमशः दिनहरू बित्दै गए, वर्षहरू बित्दै गए, झण्डै दशकभन्दा बढी समय पनि बित्न लागिसकेको छ अहिले । २०६४ सालको संविधान सभा १ को निर्वाचन, २०६७ सालको आन्दोलन, संविधान सभा १ को विघटन, २०७० सालको संविधान सभा -२ को निर्वाचन, पाटीभित्र फुट र विभाजन, पुनः १० पार्टी बीचको एकता र माओवादी केन्द्रको गठन, संविधान सभा -२ बाट नयाँ संविधान जारी – यो बीचका महत्वपूर्ण परिघटनाहरू थिए, हाम्रो लागि । ३ वर्षको अलग-अलग पार्टीको नेता कार्यकर्ताको रूपमा छुट्टाछुट्टै बसेर पुनः हामी एउटै पार्टीका बनेका थियौं । जेष्ठ ६ गतेको कार्की पार्टी प्यालेस- बबरमहल, काठमाडौंको पार्टी एकताको घोषणापछि हामी स्थानीय तहको पार्टी सङ्गठनलाई समायोजित गर्ने काममा

लागेका थियौँ । सङ्गठनात्मक समायोजनका कार्यक्रम निश्चित कार्यतालिका अनुसार चलिरहेका थिए । सिङ्गो पार्टी यही काममा व्यस्त थियो । म पनि यही कामको योजना बनाउँदै थिएँ कोठामा बसेर ।

सायद समय १२:३० बजेको थियो, श्रावण १३ गते २०७३ को दिन थियो त्यो । कार्यालयको कोठामा बाहिरबाट कोही साथी आउनु भयो र भन्नुभयो, “धनकुटाको परेवादिन -५, मारेकटहरेमा बस दुर्घटना भयो रे !” खबर अकल्पित थियो, दुःखद थियो । तत्कालै धनकुटाका साथीहरूलाई फोन गरियो । खबर सत्य साबित भयो । कमरेड हरिराज खेवा लगायत सातजना यात्रुहरूको घटनास्थलमै मृत्यु भएको र दर्जनौँ यात्रुहरू घाइते भएको जानकारी पाइयो ।

कतिपय घटना झट्ट सुन्दा मनभित्र संसय पैदा हुन्छ र उक्त संसय मेट्न विश्वासको आधार खोज्ने गरिन्छ । घनकुटाका साथीहरूलाई गरिएको फोन यही विश्वासको आधारमा खोज्ने प्रयत्न थियो । दुःखद घटनाको पुष्टि भयो । यो हाम्रो चाहना भन्दा बाहिरको कुरा थियो जो हाम्रो बसमा हुने कुरा पनि थिएन । आखिर घटना घटिसकेको थियो । मारेकटहरेबाट धनकुटा फिर्दै गर्दा ब्रेक फेल भएर गाडी दुर्घटना भएको थियो र कं. हरि खेवा लगायतका अन्य केही यात्रुहरूको घटनास्थलमा नै मृत्यु भइसकेको थियो । सत्य यही नै थियो ।

२०२५ साल कार्तिक २७ गते धनकुटा जिल्लाको छथर-जोरपाटी गाउँपालिका वडा नं. १ को हात्तीखर्कमा जन्मनु भएका कमरेड हरिराज खेवा बुवा हृदयराम लिम्बू र आमा तिर्थमाया लिम्बूका एक मात्र छोरा हुनुहुन्थ्यो । स्नातक तहसम्मको औपचारिक शिक्षा अध्ययन गर्नुभएका कमरेड हरिराज खेवाले १७ वर्षको उमेरदेखि नै अनेरास्ववियूबाट राजनीतिक यात्रा सुरु गर्नुभएको थियो । २०५४ सालको स्थानीय निर्वाचनमा तत्कालीन हात्तीखर्क गाविसमा अध्यक्षमा नेकपा (एमाले) को तर्फबाट अध्यक्ष भई एक असल जनप्रतिनिधिको हैसियतले जनताको मन जिति सक्नुभएका कमरेड खेवाले ऐतिहासिक संविधानसभा -१ मा धनकुटाको निर्वाचन क्षेत्र नं. २ बाट निर्वाचित भई नेपालको नयाँ संविधानको निर्माणमा अत्यन्त

सक्रियतापूर्वक सहभागि हुँदै एक कुशल सभासदको भूमिका पनि निर्वाह गर्नुभएको थियो । साथै २०६८ सालमा नेपाल सरकारको अर्थ राज्यमन्त्री पनि बनिसक्नु भएको थियो भने २०७१ सालमा एनेकपा (माओवादी), धनकुटाको जिल्ला पार्टी अध्यक्ष समेत बन्नु भएको थिया वहाँ ।

तत्कालीन नेकपा (माओवादी) द्वारा २०५२ साल फाल्गुन १ गतेबाट सञ्चालित महान् जनयुद्धले एक दशकभित्रै नेपाली समाजभित्र ठूलो उथलपुथल ल्याई नेपाली राजनीतिलाई नयाँ मोड दिन सफल भइसकेको थियो । यही जनयुद्धको जगमा २०६२/०६३ को संयुक्त जनआन्दोलन संगठित भएको थियो । परिणामत: देश संविधानसभाको निर्वाचनमा होमिने तयारी गर्दै थियो । नेकपा (माओवादी) को पक्षमा अत्यन्त ठूलो जनलहर पैदा भएको थियो त्यो बेला, ध्रुवीकरणको नयाँ माहौल खडा भएको थियो । यही माहोल सँगसँगै कमरेड हरिराज खेवा २०६३ सालमा माओवादी सम्बद्ध लिम्बूवान राष्ट्रिय मुक्ति मोर्चाको ललितपुर जिल्ला अध्यक्ष हुँदै राष्ट्रिय राजनीतिको मूलधारमा प्रवेश गर्नु भएको थियो । त्यसपछि अविराम माओवादी पाटी - आन्दोलनमा अत्यन्त उत्साहका साथ खट्नु भएका एक होनाहार युवा नेता कमरेड हरिराज खेवाको यो निधनले धनकुटा जिल्लालाई मात्र होइन सिङ्गो पूर्वको कम्युनिष्ट आन्दोलनलाई नै ठूलो क्षति पुग्न गएको अनुभूति मैले त्यतिबेर गरेको थिएँ, जो सत्य नै थियो भन्ने कुरा मलाई अहिले पनि लागिरहेकै छ ।

न लम्बाइ, न चौडाइ, न उचाइ, न गहिराइ ! न कसैले नाप्ने, न त कसैले छुने ! जीव, निर्जीव बनिसकेपछि मात्र बाँचेकाले अनुभूति गर्न सकिने मृत्यु; बाँचेकाहरूले बोध गर्न सकिने मृत्यु । परिभाषा धेरैले आ-आफ्नै ढङ्गले गर्लान्; निस्कर्ष आ-आफ्नै चेतना र दृष्टिकोणका आधारमा निकाल्लान् । वस्तु या जीव परिवर्तनीय, विकासशील र नाशवान छन् । यही सृष्टिको, प्रकृतिको नियम हो । सबै जन्मन्छन्, बदलिन्छन् र मर्छन् । जन्म र मृत्यु बीचको अवस्था नै जीवन हो; जो गतिशील हुन्छ र विभिन्न क्रियामा सहभागी रहन्छ ।

मानव जति सबैलाई थाहा छ कि मृत्यु शाश्वत कुरा हो । तर यो कहिल्यै प्रिय कुरा भने होइन । मृत्यु प्राकृतिक नियम, अनिवार्य, अवश्यम्भावी र नियमित क्रिया हो । सबैले सामना गर्ने पर्ने, सबैको जीवनमा लागू हुने र आकस्मिक रूपमा घट्ने घटना हो मृत्यु । कहिले, कसरी र कहाँ अहिलेसम्म कुनै क्षमताले पनि घोषणा गर्न नसकेको कुरा पनि हो मृत्यु । आ-आफ्नो चेतना, आस्था र विश्वासको आधारमा मृत्यु पर्यन्त कसैले स्वर्गारोहणको कुरा गर्लान्, कसैले मोक्षको, कसैले चोला उठेको/फेरिएको कुरा गर्लान् त कसैले भोग सकिएको भन्लान् । जसले जे भने पनि मृत्यु जीवनको अन्तिम क्रिया वा अन्तिम संश्लेषण हो । स्वयम् आफ्नो जीवनलाई ख्याल नहुने केवल स्रोता र द्रष्टाले अनुभूति गर्ने वा बोध गर्ने घटना । यही कुरा भयो २०७३ श्रावण १३ गते धनकुटा जिल्लाको मोरकटहरेको कहालीलाग्दो बस दुर्घटनामा – कमरेड हरि खेवाको मृत्यु । एउटा जीवनको अन्त्य !

श्रावण १४ गते बिहान हामी (गोपाल किराती, टंक गिरी र म) इटहरीहुँदै कमरेड हरि खेवाको शवयात्रा तथा अन्तिम श्रद्धाञ्जली कार्यक्रममा सहभागी हुन धनकुटातिर लाग्यौँ । काठमाडौंबाट प्लेनमा आएका कं. हरिराज खेवाका दुई नाबालक छोराछोरीहरूलाई समेत साथमा लिएर । प्लेन केही ढिलो भएको कारण शवयात्रामा धनकुटा पुग्न भ्याइएन । शवयात्रामा सहभागी साथीहरूसँग फोन सम्पर्क गरेर हामी मूलघाटमा नै अडियौँ । दुर्घटनाका अरू केही शवहरू पनि त्यही ल्याइएका रहेछन् । सिङ्गो मूलघाट शोक सन्तप्त आफन्तजनहरूले भरिएको देखिन्थ्यो । हामी त्यहाँ पुगेको केही समयपछि नै कमरेड हरिराज खेवाको शव ल्याइपुऱ्याइयो र तमोर नदिको किनारमा लगेर अन्तिम श्रद्धाञ्जलीको कार्यक्रम गरियो । कमरेड गोपाल किरातीले पार्टी केन्द्रिय समितिको तर्फबाट पार्टीको झण्डा ओढाउनु भयो हरिराज खेवाको पार्थिव शरीरमा र छोटो श्रद्धाञ्जली मन्तव्य पनि दिनुभयो पार्टीको तर्फबाट । त्यसभन्दा अगाडि नेपाल प्रहरीले राजकीय सम्मानका साथ सलामी अर्पण गऱ्यो । हामी सबैले मौन धारण गऱ्यौँ श्रद्धाञ्जली स्वरूप र पुष्पगुच्छा चढायौँ, मुट्ठी उठाएर रक्तिम सलामी अर्पण गऱ्यौँ । चितामा शव चढाइँदै थियो – एउटा होनाहार सहयोद्धा जलिरहेको हेर्न मनले मान्दै मानेन, अमिलो मन लिएर हामी विदा भयौँ त्यहाँबाट ।

कार्यक्रम स्थलबाट हिँड्दै गर्दा मैले गौर गरेर दृष्यलाई नियालेँ पुनः एकपटक । वर्षायाम भए पनि तमोर शान्त लाग्यो । सायद स्तब्ध थियो ऊ पनि । एउटै घटनाका केही लाशहरू एकै दिन एउटै समयमा आएका थिए त्यहाँ । कोही जल्दै थिए त कोही चितामा चढाइँदै थिए । सहयोद्धा या आफन्तलाई अकल्पित घटनाका कारण अल्पायुमा नै मृत घोषणा गरी चितामा चढाउन र जलाउन असहज र गाह्रो मानिरहेका थिए – आत्मिय मनहरू । तर भिजेका थिए गाला, सुकेका थिए; कण्ठ सुकेको थियो सबैका ! निःशब्द ! हामी अघि बढ्यौँ, गाडी चढ्यौँ र तराईतर्फ हुइँकियौँ । कमरेड हरिराज खेवालाई केवल स्मृतिमा राख्न हामी बाध्य भयौँ । वहाँको गाथा इतिहासको पानामा सजिने नै छन् – स्वर्णाक्षरमा । हामी निरन्तर क्रान्तिपथमा लागि नै रहने छौँ – वहाँहरूजस्ता सहयात्रीहरूको सपना साकार पार्न; मनले यसै भनिरह्यो ।

जीवन र मृत्युको परिभाषा मात्र होइन, तौल र उचाइको पनि चर्चा हुने गर्दछ । दुनियाँमा जीवनभर यो विषयमा प्रायः पशनको उठान हुन्न । मृत्युपर्यन्त थुप्रै चर्चा परिचर्चा चल्ने गर्दछन् र सफल जीवन, प्रेरणादायी जीवन, सम्मान गर्न लायक, अनुकरणीय र सार्थक जीवन... आदि सकारात्मक चर्चाका पदावलीहरू हुन् – जीवनको सन्दर्भमा भने गह्रौँ, ओभ्रिलो, असामान्य, गर्वीलो... आदि मृत्युको सन्दर्भमा । जीवन सफल भए मृत्यु उच्च र जीवन असफल भए मृत्यु हल्का । अझ आजभोलि त सफल र सार्थक जीवन कसरी जिउने भनेर सूत्रहरूसमेत किन्न पाइन्छ बजारमा । तर पैसामा सूत्र किनेर खल्तीमा हाल्दैमा जीवन सफल भने हुन सक्दैन सायद । न त रूप, रङ्ग र कदले नै सार्थकता निर्धारण गर्छ जीवनको । जीवनको सार्थकता र सफलता त जीवन जीउने शैलीमा भर पर्दछ । शैलीलाई विचार, दृष्टिकोण, सोच र चिन्तनले निर्धारण गर्दछ । जीवन र मृत्युको उचाइ वा तौल मापन गर्ने तराजु नै व्यक्तिको व्यवहार हो; व्यक्तिले गर्ने कर्म हो । यसर्थ व्यक्तिको चर्चा र मूल्याङ्कन नै उसको व्यवहार हेरेर गरिन्छ । उच्च जीवन, गौरवपूर्ण मृत्यु, प्रेरणादायी जीवन, अमरत्व प्राप्ति । जीवन र मृत्युको सफलता र सार्थकता यसैमा निहीत हुन्छ ।

मलाई लाग्छ – सादा, सरल र पारदर्शी जीवन; निष्कपट, हँसिलो, रसिलो र फराकिलो स्वभाव; निष्कलंकित आचरण र अनुशासित जीवन तथा उत्पीडित जनताप्रतिको निष्ठा र समर्पण कमरेड हरि खेवाबाट सिक्ने गुणहरू हुन् । 'नेता नहुञ्जेल गुन्द्रीको बास, नेता भएपछि ह्वीस्कीको सास' या 'सर्वहाराको भाषण र दलालहरूको पक्षमा शासन'... जस्ता घातक रोगहरूले अहिले कतिपय कम्युनिष्ट भन्नेहरूलाई सताउन खोज्दैछ । जनताबाट कट्ने, झुपडी देख्दा तर्सिने र शहरमा/महलमा बसेर गुड्डी हाक्ने प्रवृत्ति मौलाउन खोज्दैछ । यो अवस्थामा कमरेड हरिराज खेवालाई सम्झँदा मात्र पनि यस्ता मान्छे झस्कन सक्छन् । साम्राज्यावादी उपभोक्तावादले ग्रस्त हुँदै गइरहेको समाजलाई बदल्न उच्च नैतिकता र अनुशासन सहित जनताको सेवामा रातोदिन खट्ने युवा समूहको आवश्यकता बढ्दै गएको छ र वहाँजस्तो नेता-कार्यकर्ताको अभाव खट्कँदो छ ।

यहाँ अहिले यत्ति मात्र भनौँ कि, हरिराज खेवा स्मृति प्रतिष्ठानले कमरेड हरिराजलाई जीवित राख्ने जुन प्रयत्न गरेको छ, यो प्रशंशनीय छ । यस कार्यको लागि म प्रतिष्ठानलाई विशेष धन्यवाद दिन चाहन्छु। कमरेड हरिराज खेवाको भौतिक शरीर त हामीसँग छैन तर वहाँको कीर्ति र योगदान हामीसँग छ। वहाँको दृष्टिकोण, कार्यशैली र आचरणले दिएको शिक्षा छ हामीसँग । अत्यन्तै मिलनसार, स्पष्टवक्ता र रसिलो स्वभावका कमरेड हरि खेवा बहुप्रतिभाका धनी हुनुहुन्थ्यो । जनता र राष्ट्रप्रतिको समर्पण र प्रेम अत्यन्त गहिरो थियो वहाँको । वर्गप्रतिको निष्ठा उच्च थियो । आफ्नो लक्ष्य र उद्देश्य प्राप्तिको निम्ति अत्यन्तै दृढ देखिनु हुन्थ्यो । अत्यन्तै सक्रिय र फूर्तिलो देख्थेँ म वहाँलाई सधैँ नै । कुशल संगठक, सक्षम राजनीतिकर्मी, लोकप्रिय जननेता नै कमरेड हरि खेवाको परिचय हो भन्ने लाग्दथ्यो मलाई । १९३७ मा माओत्से तुङ्गले उदारवादको विरोध गर भन्ने लेख लेख्नु भएको थियो जसभित्रका यी पंक्तिहरूलाई मैले याद गरेको थिएँ । "कम्युनिष्टहरूको हृदय विशाल हुनु पर्दछ । ऊ इमान्दार र सक्रिय हुनु पर्दछ । क्रान्तिकारीहरूलाई उसले प्राणभन्दा प्यारो सम्झिनु पर्दछ र आफ्नो व्यक्तिगत हितलाई क्रान्तिको हितको अधिनस्थ राख्नु पर्दछ । कुनै व्यक्तिको भन्दा बढ्ता उसले पार्टी र जनताको चिन्ता लिनु पर्दछ । यसो भए मात्र उसलाई कम्युनिष्ट भन्न सकिन्छ ।"

हो, माओको यही शिक्षाद्वारा वहाँ राम्रो प्रशिक्षित हुनुहुन्थ्यो । जीवन व्यवहारमा वहाँले कम्युनिष्ट परिभाषालाई अनुदित गर्नु भएको थियो । पार्टी नीति कार्यान्वयन गर्ने कुरामा दृढ, पार्टी अनुशासन पालना गर्ने कुरामा प्रतिबद्ध र जनतासँगको दरिलो सम्बन्धका साथै सक्रिय, मिहेनती एवं निस्वार्थ भावले खट्ने कुरा नै कम्युनिष्टहरूमा हुने गुणहरू हुन् जो कमरेड हरिराज खेवामा पाउन सकिन्थ्यो । अहिले पार्टी सङ्गठनभित्र देखा परिरहेको वैचारिक तथा सांस्कृतिक स्खलनका विरुद्ध जुध्न कमरेड हरिराज खेवा जस्तो नेता-कार्यकर्ताहरूलाई बारबार स्मरण गर्ने र वहाँका उल्लेखित सकारात्मक गुणहरूको अवलम्बनमा जोड दिँदै समाजवादको आधार निर्माण गर्ने यात्रामा दृढतापूर्वक लागि रहने कुरा गऱ्यो भने मात्र कमरेड हरिराज खेवाजस्ता सहयोद्धाहरूको उचित सम्मान हुने छ र वहाँहरूप्रति सच्चा श्रद्धाञ्जली हुनेछ ।

**२०७५ आषाढ २१**

**मध्यपुर ठिमी, काठमाडौं ।**

# खेवा नभए मलाई निद्रा नलाग्ने म नभए खेवालाई निद्रा नलाग्ने

**जेपी भुजेल**

"इनिस्पेक्टर साब कुटाई चाही दह्रो होस् है... फेरि नक्कली जस्तो होला नि..." यो भनाई नाटक देखाउन अगाडि मैले उसलाई भन्ने शव्द वा सम्वाद थियो । "शहिदकी आमा" नाटक देखाउदा मेरो कुईना र घुडामा धेरै चोट लागेको थियो । कारण "इनिस्पेक्टर साबको कुटाई त्यो इनिस्पेक्टर कुनै प्रहरी चौकीको नभई उही अन्तरङ्ग मित्र हरिराज खेवाजीको कुटाई र भुइमा घिसार्दा यस्तो भएको हो । किनकी हामी कसरी नाटकलाई राम्रो बनाउने सकिन्छ ? वास्तविक अभिनयलाई कसरी निखार्न सकिन्छ ? भन्ने विषयमा केन्द्रित थियौं । एक पल्टको कुरा हो हामीले "शहीदकी आमा" नामक नाटक मञ्चन गर्ने तयारी गरौं । धनकुटास्थित सामुदायिक भवनको हलमा । नाटक देखाउने पूर्ण तयार भयो । नाटकको कथा बस्तु अनुसार शहीदको मामाको अभिनय मैले गरिरहेको थिए जुन नाटकको केन्द्रीय पात्र थियो । मेरो अभिनयको परीक्षा हुँदै थियो । त्यसैले यो नाटक हेर्न मैले मेरो आमाबुबा समेत ल्याएको थिए  र वहाँहरू मञ्चको अगाडि भागमा बसेर नाटक हेरिरहनु भएको थियो । हल दर्शकहरूको खचाखच भरिएको थियो । नाटक शुरु भयो हामी अभिनय गर्दै गयौं क्रमशः नाटक मञ्चन हुँदै भयो । नाटकको क्रममा हरिराज खेवाले नेतृत्व गरेको पुलिसको टोली त्यस दिन मञ्चवाट देखा नपरी दर्शक वसेको ठाउँवाट मान्छेहरूलाई ठेल्दै मञ्चमा प्रवेश गर्नु भएछ र मलाई लठ्ठी र बुटले कुट्न पुलिसलाई आदेश दिन थाल्नुभयो । पुलिसले मलाई पिट्न

थाले । दर्शकलाई यो नाटक होइन कुटाकुट हुन लाग्यो भन्ने भएछ ।

"ओई साला कहाँ हालिस् तेरो भान्जालाई ? (भान्जा: शहीदको अभिनय गर्ने पात्र) भन्दै इनिस्पेक्टर साब मलाई कुट्न थाल्नु भएछ । उता मञ्चको अगाडिवाट छोराको नाटक कस्तो होला भनि हेरिरहेकी मेरी आमा रुदै कराउदै मञ्चमा उक्लनु भएछ । उक्लने वेलामा स्वयंसेवकहरूले बुझी रोक्नु थालेछन् । आमा भने छोराको मायाले मञ्चको वीच भागमा आइपुग्न भएछ म पनि छक्क परेँ । पछि सबै जिल्ल परे यो त नाटक नै पो रहेछ भनेर । आमा आँशु पुछ्दै पहिले कै ठाउँमा बस्नु जानुभयो । यो हरिराज जीसँग मेरो नबिर्सने क्षण हो । हरिराज जी र मैले अभिनय गरेको नाटकमा धेरै चोटी यो नाटक नै हो भन्नु पर्थ्यो । किन हो आजसम्म मलाई थाहा छैन ।

एकपटक क्याम्पसमा विद्यार्थीहरूको स्वागत कार्यक्रममा नाटक दखाउनु पर्ने भयो । हरिराज जी र मेरो गोप्य सल्लाह थियो । नाटकको प्रस्तुतिबारे हरिजी र मैले नाटकको तयारी गयौं । नाटक स्वागत कार्यक्रमको वीचमा देखाउनु पर्ने थियो । यसैबीचमा म आफै उद्घोषक भएकोले विद्यार्थीलाई भन्दै थिए "आज विषेश कारणले नाटक हुन नसक्ने भएको व्यहोरा विनम्रपूर्वक विद्यार्थीहरू (दर्शकहरू) लाई भन्दै थिए" "कारण मुख्य कलाकारको आमा तत्काल बिरामी पर्नु भएछ । वहाँले नाटक गर्न नसक्ने हुनु भो भन्दै थिए । विद्यार्थीलाई बुझाउदै थिए । उता यस्तो खबर उद्घोषकले भनेको माईकवाट सुनेर भर्खर कार्यक्रम स्थलमा प्रवेश गर्न लागेकी (नीज नाटकीय रूपमा आमा विरामी भएको कारणले उपस्थित हुन नसक्ने कलाकारकी बहिनी) क्याम्पसको गेटनजीकै आउदै गर्दा यो खबर सुनिछिन् । "ला आमा विबामी हुनु भएछ" भनि बाटैबाट फिर्न लागिछिन् आत्तिदै... । उता कलाकार नहुने भएपछि विद्यार्थीमा ठूलो खैलावैला भयो । नाटक हेर्न नपाइने भो भन्दै विस्मात् भर्न थाले यही वेला विद्यार्थीको वीचवाट उठ्दै "नाटक हुनै पर्छ" म गरिदिन्छु अभिनय हरिराज जी उठ्नु भो दर्शक माझवाट । (यो पनि नाटकै थियो तर केवल थाहा थियो त हामी दुई जनालाई)अनि विद्यार्थीमा के भ्रम परेछ भने अहिले अभिनय गरेर देखाएको नाटक के होला र ? जाऊँ भन्न लागेछन् हामी

चाही अघिदेखि नाटक शुरु गरिसकेका थियो । मैले यदी "तपाई उसको अभिनय गर्न सक्नु हुन्छ भने नाटक देखाउन सकिन्छ" भनेर हरिराज जीलाई मञ्चमा आउन आग्रह गरे । नाटक हुने विद्यार्थीलाई सूचित गरे । हरिजी  स्टेजमा आउनु भयो । नाटक भने हामीले अघि नै शुरु गरिसकिएको थियो । यी सवै क्रियाशलापहरू नाटकै थियो । पछि यी सवै नाटक पो रहेछ भन्ने थाहा पाएपछि सबै जिल्ल परे पछि सवैले हामीलाई दोहोऱ्याई दोहाऱ्याई अचम्म मान्दै धन्यवाद दिनुभयो । यी सवै घटना हरिराज खेवा र मेरो नाटकीय, कलाकारिताको अविष्मणीय विद्यार्थी जीवन थियो । मैले बिर्सन नसकिने हरिराज खेवासँगको स्मृतिको छाप थियो ।

त्यसबेला हामीले सँगै आठवटा रेडियो नाटक गऱ्यौं । यसै समयमा एक चोटी माथिल्लो कोप्चेका महेश अमात्य (हाल काठमाण्डौं) ले नाटक देखाउने भनि कलाकारहरूको आवश्यकता भएको औपचारिक विज्ञापन गर्नुभयो । कुन संस्थावाट थियो हाल मैले सम्भन सकिन त्यसमा हामी दुवैले निवेदन दियौं मेरो पहिलो र हरिजीको दोस्रोमा नाम निस्कियो । महेश दाइले हाम्रो अभिनय गर्ने क्षमतामा विश्वास गर्नु भयो । अन्तरवार्ता लिने आदणिय गुरु इशदिप श्रेष्ठ (इश्वर श्रेष्ठ) हुनु हुन्थ्यो । हाम्रो छनौटपछि नाटक गर्ने भनि अरु कलाकारहरू समेत नियुक्ति भयौं । "जेमन्त" भन्ने नाटकमा अभिनय गर्नुपर्ने थियो यो नाटक प्रज्ञा प्रतिष्ठानबाट उत्कृष्ट भएको नाटक रहेछ । यही नाटक हामीले मञ्चन गर्न लागेको थियौं । यसमा कलाकारलाई पारिश्रमिकको व्यवस्था समेत थियो । तर पछि २० दिनसम्म अभ्यास गरी सकेपछि यो नाटक देखाउन सकिएन कारण आयोजकको पूर्ण तयार र व्यवस्थापनको कमजोरी थियो । तर पछि हरिजी र मैले आफैले आयोजना गरी अन्य कलाकारहरूको सहयोगमा यो नाटक पुनः गरेरै छाड्यौ. । यसै क्रममा हामी धेरै साथीहरू नाटकमा आवंद्ध भयौं । कलाकारहरू रेखा अर्याल (हाल अमेरिका) सुमन न्यौपाने, केशव पौड्याल, लक्ष्मी निरौला, प्रेम ओझा, इन्द्र खतिवडा, मुकुन्द भण्डारी, उमेशचन्द्र अधिकारी, रमेशचन्द्र अधिकारी, गीता अधिकारी, कल्पना ढुंगेल, मुकुन्द प्रयास, सन्तनु पोखेल, कुमार कार्की, लक्ष्मी उदास, (केही मुख्य कलाकारहरूमा नाम छुट्यो) लगायत धेरै कलाकारहरू थियौं । त्यो दिनको सम्झना

आज पनि ताजै छ । नाटक गर्ने सबै साथीहरू एक ठाउँमा बण्स्ने गफ गर्ने सँगै सुत्ने गदाँ एक जना नहुँदा अर्कोलाई निद्रासमेत नलाग्ने अवस्था थियो हामीमा ।

हरिजीलाई आज पनि सम्भन्छु । वहाँको सङ्गतले गर्दा मैले आफ्नो नाटकमा अभिनय निखार्ने मौका पाएँ, राजनीतिक घटनाका केही महत्वपूर्ण दस्तावेज बुझ्ने, र जान्ने मौका समेत पाए । यद्दपी हामी विद्यार्थी हुँदा राजनीतिक विचारधारामा खासै मेल खाने थिएन । तर पनि हामी सबैभन्दा मिल्ने साथी थियौं ।

नाटक गर्दा हरिजी प्रायः सिनियर पात्र, मुख्य पात्र, अलि कडा स्वभावको चरित्र भएको पात्रको अभिनय छान्नु हुन्थ्यो । म भने गाउँले, गरिव, दुःखीजस्तो पात्र छान्ने गर्दथे । हामीले सँगै 'पचास रूपयाँको तमसुक', 'शहीदकी आमा', 'जेमन्त', 'रुख अझै नाङ्गै छ', जस्ता त्यसबेलाको अति चर्चित नाटक गऱ्यौं । दर्जनौ रडियो नाटक गऱ्यौं । पछि वहाँलाई राजनीतिक रूपमा जनताको प्रतिनिधित्व गर्दै गाविस अध्यक्ष तथा नेकपा माओवादीको जिल्ला इन्चार्जसमेत रहनुभयो । वृहत शान्ति सम्झौतासँगै एकदिन मेरो घरमा हेमराज भण्डारी सुदर्शन र हरिजी साँझमा आउनु भयो र राजनीतिक कुरा गर्नुभयो । त्यसैदिन दुवैजना मेरो घरमा नै बास बस्नुभयो । रातभरी मैले हरिजीसँग धित मरुन्जेल गफ गरें । विगत दुबैले सम्झ्यौं ।

पछि वहाँ अर्थराज्य मन्त्री भएपछि छोटो कुराकानी हुन्थ्यो । तर पनि अति नै हार्दिकतापूर्वक हुन्थ्यो । जब वहाँको बस दुर्घटनावाट मृत्यु भएको खबर जिल्ला विकास समितिको कार्यक्रम चलिरहेको बेला थाहा भयो । पहिले त विश्वास गर्नै सकिनँ पछि पुष्टि भयो । त्यसपछि म लगायत सबै स्तव्ध भयौं । हामीवाट एक होनाहार, योद्धा, सामाजिक अभियन्ता, कलाकार, नाटककार, साहित्यकार एक कुशल राजनीतिज्ञ गुमायौं सदा-सदालाई । त्यो भन्दा पनि कुनै समय ऊ नभए म ननिदाउने र म नभए ऊ ननिदाउने साथी गुमाए । म बिर्सन सक्दिनँ त्यो पल जीवनभर सम्झिरहन्छु ।

# सम्झनाको झ्यालबाट खेवादाइ

**कोशी किनारे**

त्यतिबेलाका तेस्रो आवाज मासिकका सम्पादक शंकरहरि खालिङ र म धनकुटाको टुडिखेलदेखि लागेका थियो होटल सुरभीको कार्यक्रमतिर त्यही कार्यक्रममा भएको थियो प्रथम भेट हरिराज खेवा दाइसँग । उतिबेला पनि म खेवा दाइलाई नाटककारको रूपमा चिन्थेँ । अहिले पनि नाटककारको रूपमा ज्यादा र सभासद र मन्त्रीको रूपमा कम चिन्न चाहन्थे। वहाँको रेडियो नाटक अप्रत्याशित घटनाको म ठुलै फ्यान भैइसकेको थिएँ । हुन त वहाँको नाटक 'अपदस्त जिन्दगी'ले रेडियोमा धेरै चर्चा कमाए पनि मलाई भने अप्रत्याशित घटना नाटकले नै धेरै छोएको थियो । रेडियोमा जब वहाँको नाटक अप्रत्याशित घटना सुने मलाई नाटक लेख्ने जोस चलेपछि मैले कतिवटा नाटक आधा लेख्दै च्यात्दै गरेँ । मलाई औधी हुटहुटी चल्थ्यो नाटक लेख्नु त अप्रत्याशित घटना जस्तो पो । कार्यक्रममा खेवा दाइलाई देखेपछि मैले कार्यक्रममा बस्दा-बस्दै पत्रिकाको लागि तुरुन्तै तयार पारेँ दसबाह्र अन्तरवार्ता प्रश्नहरू ।

'तपाईं कुन पत्रिकामा लेख्नुहुन्छ ?'

उनले त मलाई ठुलै पत्रकार ठानेछन् क्यारे दाइको यो सोधाइले मलाई एकपटक खङग्रङ्गै बनायो । 'दाइ गाउँबाटै निकालिन्छ लघुपत्रिका ।'

खङग्रंगैमा जवाफ दिएको थिएँ ।

‘पत्रिका गाउँबाट निकाल्नु धेरै गाह्रो काम हो ।” पत्रिका प्रकाशन कार्य वहाँलाई राम्रै ज्ञात रहेछ ।

खेवा दाइ साह्रै शालिन । प्रत्येक पल्टको बोलीमा मिसिने वहाँको मुस्कान शालिनताको अर्को विम्ब थियो । पत्रिकाको लागि भएको अन्तर्वार्ता भन्दा पनि हामीबिच भएको व्यक्तिगत अन्तर्वार्ताले निक्कै वटा कुराहरूको उठान भएको थियो । नाटक एकातिर राजनीति अर्कोतिर । र, पार्टी परिवर्तनबारे मैले खेवा दाइसँग मुख्य दुई कुरामा घोर असन्तुष्ट देखाएँ । कलासँग आवद्ध व्यक्तित्वहरूले राजनीतिमा पाइला राख्नु पूर्णरूपमा गलत हो भनेर मैले भन्न खोजेको हैन । मेरो चिन्ता यसैमा हो कि सुन्दर व्यक्तित्वहरूको रङ्गहरूलाई राजनीतिक माहौलहरूले धमिल्याइदिने गर्दछ ।

खेवादाइ यो देशको लागि सभासददेखि मन्त्रीसम्म बन्न पुगे । सायद नाटकमात्र लेख्दैब स्नु भएको भए आज वहाँको उचाइ यहाँ नपुग्न पनि सक्थ्यो । खेवा सभासददेखि मन्त्रीसम्म बने तर आफ्नो क्षेत्रमा केनै ख्याँस्यो त भन्ने अन्य कुरौटेहरूको यो कुरालाई मैले खासै पछ्याईन । जनताको त्यति ठूलो बलिदानपश्चात निर्माण भएको त्यतिठूलो उंहाको मूल पाटीले नै नराम्ररी धरातल छोडिसकेको दुःखद घडिमा खेवा दाइबाट त्यति ठूलो महत्वाकांक्षा हामीले पाल्नु मिथ्या हुनजान्छ ।

मेरो फुटकर रचना र उक्त पार्टीको सैद्धान्तिक रङ्गहरू मिलेपछि कमरेडहरूको नजरमा म त्यसै पनि पर्ने भए । तर ममा एउटा घमण्ड थियो मेरो धर्म भनेको सामान्य लेखकले दलीय झण्डामा बसेरभन्दा प्रतिपक्षमा बसेर जनताको कुरा लेख्नु नै हो । खेवा दाइलाई सहयोग गर्न हरेक कोणले एक वहाँको फ्यान हुनुबाट अर्को छिमेकी गाउँले हुनुबाट पनि मेरो जिम्मेवारी बन्न पुग्यो । यहीँ मेरो जिम्मेवारीको कमजोरीलाई उपभोग गर्दै केही अन्य दलिय मित्रहरूले मलाई पटक पटक पार्टीगतको बिल्ला भिराई नै रहे । तर ती मित्रहरूले मेरो यो कुरामा कहिल्यै समिक्षा गरेननकी चुनाव भरी त्योपार्टीको काम गरेता पनि अन्तिममा तिनले किन पार्टीको सदस्यता लिन इन्कार गरेँ ? रातदिन नभनी भोकतिर्खा नभनी खेवा दाइको लागि केही मेहनत गरिएकै हो । तर मलाई त्यस्तो कहिल्यै लागेन की कुनै पार्टीको

झण्डा बोकेर कुनै पार्टीको लागि काम गरिरहेको छु । मलाई त सधैँ लाग्थ्यो मैले मेरो मन पर्ने नाटककारको लागि काम गरिरहेको छु ।

'दाइ तपाईं राजनीतिमा नलागी नाटकमै निरन्तर लागेको भए हुन्थ्यो ।' मैले नचाहेरै भए पनि यतिकुरा वहाँलाई भनेको थिएँ ।

'म नाटकदेखि टाढिएको कहाँ हो र भाइ ?' यंही बाक्यले मलाई थुमथुम्याउनु भएको थियो । शंकरहरि खालिङले पनि त्यही चिन्ता दोहोऱ्याएका थिए -'साहित्य भएपछी राजनीति नगरे हुंदैन दाइ ?' मेरा मित्र खालिङको प्रश्नलाई सबैभन्दा पहिले त मुस्कानले जबाफ दिनुभएको थियो -'मेरो राजनीति भन्नु नै प्रत्यक्ष साहित्य हो' अन्य विद्वानहरूको दृष्टिमा त राजनीति फोहोरी गेम भन्थे तर खेवा दाइको दृष्टिमा राजनीति प्रत्यक्ष साहित्य बनिदिदा म रनभुल्लमा अल्मलिनु स्वाभाविक नै थियो । भिडभाडमा खेवादाइ कम नै बोल्थे । बोली नै हाले पनि तर्कपूर्ण र अर्थपूर्ण बोल्थे ।

'खेवा कहाँदेखि कहाँ पुगेँ' चियागफमा चर्चा हुने समय पनि थियो त्यो बेला । खेवा दाइ लगातार चरमचुलीमा पुग्नुलाई कतिले त भाग्य र अवसरलाई पनि जोडेर जिब्रो पड्काए । एकपटक खेवा दाइसँग सदरमुकामको जिल्ला प्रशासन कार्यालय अगाडि भेट हुन पुग्यो । मेरो हातमा भएको राहादानीको कागजात देखेपछि दाइ निक्कै झर्किएका थिए -मेरो भाइ अरु जे गर तर विदेश जाने काम नगर' म अनुत्तरित थिएँ ।

'नयाँ नेपाल र नयाँ संविधानको भर्खर खाका कोरिन्दैछ । अहिले नै निरास भैइहाल्ने कारण किन ?' फेरि पनि म अनुत्तरित नै थिएँ । 'भाइलाई फेरि पनि यो मुडमा देख्न नपरोस् । 'यति बोलेर खेवादाइ म सँग छुट्टिएका थिए । त्यसपछि त खेवादाइ सँग त्यसरी कहिल्यै भेट भएन । चुनावपछिको वहाँको बिजय ऱ्यालीमा टाढैदेखि हात उठाएर साङ्केतिक कुराकानी मात्र हुनसक्यो । त्यसपछि त खेवादाइसँग फेरि कहिल्यै प्रत्यक्ष भेट हुनै सकेन । चुनावपछिको राजनैतिक व्यक्तित्वहरूको विम्ब मैले बुझेको

थिएँ । सायद त्यसैले पनि नाटकको कुरोलाई लिएर मैले खेवादाइसँग संलाप गर्ने चाहना राख्नै छाडिसकेको थिएँ । किनकी नाटककार हरिराज खेवालाई सभासद र मन्त्री हरि खेवाले व्यस्त बनाइसकेको थियो । पछि हातमा राहदानी र झोला लिएर म काठमाडौ आईपुग्दा अचानक ताल्छिखेलको एक पसलमा खेवादाइलाई देखेँ । एक मनले सोचेँ धेरै समयपछि भेट भएको अवसरमा भेटुँ कि लाग्यो । तर मेरो हातमा राहदानी र साउदीको भिसा थियो । मैले खेवादाइलाई फेरि निरास पार्नु छैन भनेर म त्यहाँबाट तुरुन्त भागेँ । त्यसपछि त खेवा दाइसँण्ग कहिल्यै भेट हुनसकेन र अब त कहिल्यै हुनेछैन । जुनदिन खेवादाइलाई भेटेर पनि जबरजस्ती भागेँ त्यहि दिन सायद खेवादाइसँगको सामिप्यता सदाको लागि समाप्त भइसकेको थियो ।

सिधुवामा बस पल्टिएछ । धेरैजनाको मृत्यु भएको छ रे । मन्त्री हरिराज खेवाको पनि मृत्यु भएको छ रे ! अचानक फोन गरेर श्रीमतीले दुर्घटनाको वृतान्त सुनाईन् । मलाई पत्याउन गाह्रो भो । अर्कै कुनै मन्त्री होलान् सोचें । त्यसैबेला पत्रकार मित्र प्रकाश पाक्साँवाले मेरो इन्बक्समै समाचार पठाइदिनुभयो । फेसबुकको भित्ताभरी समवेदनाको फोटोहरू धमाधम आउन थाले । त्यो दिन भरी मेरो टाउको फनफनी घुमिरह्यो। मान्छेको मृत्यु कंहाँनेर हुन्छ ? मृत्यु साँच्चै भयाभह हुन्छ ? मृत्युको कुनै साँध सीमा हुँदैन ? मेरो टाउको लगतार दुइतिन दिन घुमिरह्यो । खेवादाइ त्यो क्षेत्रको सभासद भूतपूर्व अर्थराज्यमन्त्री उनले चाहेको भए सुविधायुक्त सरकारी गाडी उपलब्ध हुन सक्थ्यो होला नि त ? किन त्यसो गर्न चाहेनन् ? सर्वसाधारणले प्रयोग गरिने गाडी नै उनले किन प्रयोग गरे ? र सर्वसाधरण जसरी नै मृत्युवरण गरे । धनकुटाले सशक्त युवा नेतृत्व गुमाए । त्यो भन्दा असल र उत्कृष्ट नाटककार गुमाए । उहीँ पुरानो समय अनि उहीँ मेरो घरको उहीँ पिढीँमा बसी त्यहीँ पुरानो रेडियोमा उहीँ हरिराज खेवाको उहीँ नाटक अप्रत्याशित घटना फेरि पनि सुन्न मन लागेको छ । कसैको जीवनको अप्रत्याशित घटना लेख्ने खेवादाइ अन्ततः आफ्नो जीवनलाई पनि अप्रत्याशित रूपमा विदा लिए । हार्दिक श्रद्दासुमन खेवादाइलाई ।

**– परेवादिन २, छापाङ, धनकुटा – हाल साउदी अरब ।**

# सुदूर सम्झनामा हरिराज खेवा

**गणेश खड्का**

हरिराज खेवा मेरो स्मृतिको झ्यालबाट कहिल्यै नओझेलिने एउटा अजम्बरी नाम हो । जो झझल्को बनेर हरदम चिहाइरहन्छ । पचासको दशकका प्रारम्भिक दिनहरू उच्च शिक्षा हासिल गर्ने उत्कण्ट अभिलाषा बनेर धनकुटा बहुमुखी क्याम्पसमा व्यतित हुँदैथिए मेरा । शिक्षाको फलामे गेट मानिने एसएलसी पार गरेर भोजपुरबाट धनुकुटा आउनु मुख्यतः दुइवटा उद्देश्य थिए (रेडियो नेपालमा बोल्नु र नाटक गर्न अनि शिक्षाशास्त्र पढेर भविष्यमा प्राध्यापक बन्नु । त्यतिबेला भर्खरै रेडियो नेपालका क्षेत्रीय प्रसारणहरू संचालनमा आएका थिए । म भोजपुरमा क्याम्पस नभएर होइन, रेडियोमा बोल्ने रहरले धनकुटा पढ्न आएको । महेन्द्र बहुमुखी क्याम्पस धरानमा पनि प्रवेश परिक्षा दिएको थिएँ, नाम पनि निस्कियो । तर रोजाइमा पर्यो धनकुटा नै । यदि धनकुटा पढ्न नआएको भए सायद हरिराज खेवासँग भेट हुने थिएन मेरो ।

म धनकुटा बहुमुखी क्याम्पसमा आयोजना हुने विद्यार्थी युनियनहरूको सांस्कृतिक कार्यक्रममा नाटक मञ्चन गर्न थालें । सँगैमा रेडियो नाटकतिर पनि सहभागिता जनाउदै थिएँ फाट्टफुट्ट । एकदिन क्याम्पस गेट र क्याफ़ेटेरियाको बाहिरि भित्तामा पोस्टर देखियो । जहाँ 'आक्रोश' नामक नाटकको लागि कलाकार आव्हाँन गरिएको रहेछ । साथैमा थिए क्याम्पसे साथी चेतन गजुरेल । मेरो रुचिको विषय बुझेका उनले नै मेरो नाप सिफारिस गरिदिएछन् उक्त नाटक समुहलाई । नवकलाकार

सांस्कृतिक समुदायको भवन निर्माण सहयोगार्थ भनेर मञ्चन हुनलागेको नाटक आक्रोशका निर्देशक राजकुमार निर्दोषी रहेछन् । बोलावट भएपछि म त्यहाँ पुगें । माथ्लो गोकुण्डेश्वर मावीको कक्षा कोठामा रिहर्शल हुन्थ्यो ४ बजे स्कुल छुट्टिपछि । क्याम्पसमा क्लास सकिनासाथ त्यहाँ पुग्नु मेरो दैनिकी बन्न थाल्यो अब । त्यहीं भेटिए र चिनिए अग्रज कलाकारहरू उपेन्द्र दुःखी, लक्ष्मीकृष्ण श्रेष्ठ र अन्य-अन्य पनि । त्यहि मेसोमा थिए हरिराज खेवा । आक्रोश नाटकमा मलाई दिइएको भूमिका थियो -धनवीर साहू । अनि हरिराज खेवाको रोल थियो -खोखा । दुवै नेगेटिभ रोल ।  पहिलो दिनको पहिलो रिहर्शलमै हामी दुबैको अभिनय देखेर निर्देशक राजकुमार निर्दोषीलगायत पुरै टिम प्रभावित भयो । उपेन्द्र दुःखीले हामीलाई अर्गानिक कलाकारको संज्ञा नै दिन भ्याए । उनि उक्त नाटक मञ्चनको संयोजक थिए । पुरै रिहर्शल अवधिभर नाटक मञ्चन हुने मितिसम्मै कुनै दिन दोश्रो टेक लिनु परेन निर्देशकले हामी दुईलाई ।

हरिराज खेवासँग मेरो खासगरीकन रङ्गकर्मकै सिलसिलामा भेट भएको हो । उनि पढाईमा म भन्दा सिनियर थिए । उनलाई क्याम्पसमा देखिदैनथ्यो पनि । म शिक्षा शास्त्र संकायको विद्यार्थी भएर क्याम्पस प्रवेश गर्दा उनले क्याम्पसको नियमित विद्यार्थीका रूपमा विदा लिईसकेका रहेछन् । प्रविणता प्रमाणपत्र तह सकिवरी स्नातकमा नाम लेखाएर उनको गाउँ हात्तिखर्ककै एउटा प्राथमिक बिद्यालयमा शिक्षण गर्दारहेछन् । धनकुटा बजार त उनि तलब लिन, क्याम्पसको परिक्षा दिन र नाटक गर्नकै लागि मात्र आउदारहेछन् ।

अग्लो कद, फराकिलो निधार, लिम्बूको छोरो भए पनि बाहुनको जस्तो चुच्चो नाक, र ठुलाठुला आँखा । त्यसमाथि सेतो फ्रेमको पावरवाला चस्मा लगाइराख्ने । एउटा आकर्षक व्यक्तित्व हरिराज खेवा । हाम्रो मित्रता झाङ्गिदै गयो रङ्गकर्मकै कारण । उमेर, अनुभव र अध्ययनको हिसाबले पनि मभन्दा केहि अग्रज थिए हरिराज खेवा । त्यस मानेमा दाइ भन्नुपर्थ्यो होला मैले उनलाई । तर मैले कहिल्यै दाइ पुकारिन, न त उनले नै भाइ भनेर बोलाए । हामी एक असल साथीकै रूपमा विकसित भयौं । हरिजी र गणेशजी नै आपसी सम्बोधनमा खुल्दथे । आक्रोश नाटक मन्चनपश्चात

हाम्रो सम्बन्ध झन् मौलायो । गाउँबाट धनकुटा बजार आएको बेला मलाई नभेटी फर्किंदै फ़र्किन्नथे । बरु उनको धनकुटा आउने क्रम झन् बाक्लिन थाल्यो । उपेन्द्र दाइ त पटकपटक जिस्काउथे उनलाई -तिमीले जस्तो जागिर त कसले खा'को होला यो देशमा ! म पनि व्यङ्ग्य गर्न पछि पर्दैनथें -पढाउन छोडेर बाहिर-बाहिर बरालिने मास्टरकै कारण यो मुलुकको शिक्षाको गुणस्तर यो हालतमा पुगेको हो । के पढ्लान्, के सिक्लान् तपाइँका विद्यार्थीले ? जवाफमा आफ्नो प्राकृतिक धोद्रे स्वरमा एक हलको मेलो हाँस्थे हरिराज - हा…हा…हा…!

भुल्नै नसकिने समयका अनगिन्ति बाछिटाहरू छन् मसँग । जो हरिजीले छोडेर गए । अधिकतम समय हामीले रङ्गयात्रा गर्यौं । धनकुटा बहुमुखी क्याम्पसको स्टेजदेखि सामुदायिक भवन, नवकलाकार सांस्कृतिक समुदायको भवन र तत्कालिन नेपाल राजकीय प्रज्ञाप्रतिष्ठानसम्म । क्षेत्रीय नाटक उत्सवदेखी राष्ट्रिय नाटक महोत्सवसम्म । रेडियो नाटकमा त हाम्रो हानाथाप नै पर्थ्यो । खासगरी लेखनमा । कहिले कसको नाटक रेकर्ड गर्ने भन्ने सम्बन्धमा । उनि राम्रा लेखक र अभिनेता हुन् । म चाहिँ लेखन, अभिनयका अतिरिक्त निर्देशन पनि गर्दथें । मेरो लेखन, निर्देशनमा थुप्रै नाटक अभिनय गरेका छन् हरिजीले । दसैंको छेक पारेर रेडियोबाट बजिरहने देवी र दानव सम्बन्धि नाटक "शुम्भ-निशुम्भ वध" हाम्रो जिवन्त सिर्जना मध्यको एक हो, जो अध्यावधि बजिरहन्छ रेडियोमा प्रत्येक वर्ष दसैंछेक । हरिजीको नियतिले बिर्सेर गएका ति पदचापहरू त्यत्ति सजिलै कहाँ मेटिएलान् र मेरो मानसपटलबाट !

हरिराज खेवा एउटा यस्तो रसिक व्यक्तित्व हो, जो अभिनयमा नकारात्मक भूमिका रोजे पनि वास्तविक जीवनमा सधैं सकारात्मक । चिया दोकानदेखि भट्टी पसलसम्मै उत्तिक्कै हाँसमुख । आफ्नो तलब झिक्ने समयको छेक पारेर सदरमुकाम आउने भएकोले खानपिनको अधिकांश बिल हरिजी नै तिर्दथे । म त बहालवाला विद्यार्थी, खर्च कम नै हुन्थ्यो । अरु-अरु पैसावाला दाइहरूलाई पनि बिल तिर्न उछिन्थे उनि । यदाकदा मैले बिल तिर्न खोज्दा हरिजी भन्ने गर्थे -तपाईं विद्यार्थी मान्छे, अहिले हामीलाई मौका दिनुस्, पछि कमाउने भएपछि तपाईंको पालो आइहाल्छ नि !

मलाई भावुक पार्दै गोजीतिर पर्स फर्काउन बाध्य पार्ने हरिजी एउटा कुशल रङ्गकर्मीका अलावा असल मित्र पनि थिए ।

हरिजीसँगका थुप्रै अविश्मरणिय क्षणहरूको लाममा केहि रोमाञ्चक किस्साहरू पनि छन् । जो स्मृतिका पाखाहरूमा घमाइलो झझल्को बनेर आउनेगर्छन् कहिलेकाही, जसले आफैलाई रोमाञ्चित पनि पार्छन् । जसलाई यहाँ उद्धृत गर्न जायज हुने हो कि होइन ? तैपनि एउटा रमाइलो प्रसँग चाहिं राख्छु -एकपटक हरिजीले मसँग एक दिनको लागि मेरो कोठाको चाबी मागे । परिक्षाको तयारी चल्दै गरेको भए पनि हार्न सकिनँ । कुनै कारण नै नसोधी कोठाको चाबी उनको हातमा थमाइदिएर म आफु चाहिं अन्तै साथीको कोठामा शरण लिन गएँ । अरुसँग धक मान्थे हरिजी, तर मसँग चाहिं खुल्थे । यद्दपि, त्यो दिन उनले मेरो कोठाको ऐकान्तिक प्रयोग कसरी र कुन प्रकृतिले गरे ? कस्तो प्रयोजनको लागि उनलाई प्राइभेट रुम चाहियो ? त्यो चाहिं उनले पनि खोलेनन्, मैले पनि खोतलिनँ ।

एकदिन सुनियो -हरिराज खेवाले शिक्षकबाट राजिनामा दिएर हात्तिखर्क गाविसको अध्यक्षमा उम्मेद्वारी दिए । एमालेले उनलाई टिकट दियो रे ! यो अचम्मको विषय थियो हाम्रो लागि । चुनाव प्रचार-प्रसारकै बिचमा एकदिन हरिजी धनकुटा बजार आए । दूर सञ्चार कार्यालय अगाडि गोकुल श्रेष्ठको पसलमा पोलियो थोपा पिलाए हामी सबलाई । पोलियो थोपा लाग्दै गएपछि उपेन्द्र दुःखीले बेस्सरी हकारे हरिजीलाई । भने -तिमी बिग्रियौ अब । कति राम्रो पेशामा थियौ । शिक्षण र कलाकारिता जस्तो पवित्र बाटो छोडेर राजनीति जस्तो फोहोरी र दुर्गन्धित नालीमा भासियौ । जवाफमा हरिजीली आफ्नो उही प्राकृतिक धोद्रे स्वरमा अट्टहास छोड्दै डायलग हाने -त्यहि राजनीति फोहोर नालीमा जाकिएकै कारणले त सफा गर्न जान लागेको म ।

चुनाव जिते हरिजीले । विजयोत्सवको एक हिस्सा हामीले पनि मनायौं । आए धनकुटा र पस्के अर्को पोलियो थोपा पार्टी विजयोत्सवको । उपेन्द्र दुःखीले पुनः अर्को ठट्टा पछारे -तिमीले चुनाव हारेको भए झन् धेरै गाली खान्थ्यौ मेरो । तर,

जित्यौ बधाई छ । अब कुनै दिन मन्त्री हौला र म बुढोलाई पनि प्राज्ञ बनाउला । हरिजीले अवश्य दाइ, त्यो दिन पनि आउनेछ भने र अर्को चरणको पोलियो थोपा अर्डर गरे । हरिजी अब नाटकमा भन्दा राजनीतिमा व्यस्त हुन थाले । बिचमा एमाले फुट्यो र माले-एमाले बन्यो । हरिजी मालेतिर लागे अध्यक्षबाट राजिनामा दिइवरी । राजनीतिमा एउटा सपना र अभिष्ठ हुन्छ । हरिजी त्यो पुरा गर्ने ध्याउन्नमा थिए सायद । फुटेर मालेमा आइसकेपछि हरिजी केहि फुर्सदिला भए क्यारे । फेरि हामीसँगको भेट बाक्लिन थाल्यो । एकाध नाटकमा सहकार्य पनि गरियो । तर त्यो भेट त्यत्ति लम्बिन सकेन । एकाएक हरिजी गायब भए । कताकता सुनियो -तत्समय शसस्त्र युद्ध गरिरहेको माओवादीमा आवद्द भएर भूमिगत पो भए रे हरिजी त !

म धनकुटाको पढाई सकेर काठमाडौँको सङ्घर्षपूर्ण जीवनमा रुमालिरहेको थिएँ । अझ भनौं -देशमा व्याप्त आशान्ति र अस्थिरताको कारण स्वदेशमा सबैखाले सम्भावनाका ढोकाहरू बन्द भएपछि लाखौँ युवाहरू विदेश पलायन हुने क्रमको तीव्रतासँगै म पनि त्यहि पङ्तिमा भौंतारिइरहेको थिएँ । के गर्ने, कसो गर्ने भन्ने अन्यौलग्रस्त समयको फन्दामा निस्सासिइरहेको थिएँ । एकदिन अचानक अनामनगरको गल्लीमा भेटिए हरिजी । मलाई देख्नेबित्तिक्कै केहि संसय र हतास मुद्रामा ठिङ्ग उभिए । साथमा एउटा मंगोलियन अनुहारको युवक पनि थियो । तत्कालै आफ्नो अनुहारको भयग्रस्त रङ्ग फेरेर फिस्स हाँसे हरिजी । अनि हठात् वाक्य फुटाए -ओहो गणेशजी ! भ्याप्पै अँगालो हाले मलाई । सामान्य हालखबरको विनिमयपश्चात मलाई यता आउनुस् भने आफू र अघि लागे । मैले पछिपछि उनको पदचाप पछ्याएँ लुरुलुरु । दिउँसै बत्ति बाल्नुपर्ने एउटा अँध्यारो कोठामा लगे मलाई ।  र, आफ्नो चोर औंला ओठमा पुऱ्याएर हल्ला नगर्नुस् है भन्ने भावमा मुख खोले -गणेशजी, तपाईं कता के गर्दैहुनुहुन्छ आजकल ? म त माओवादीतिर लागेँ नि ! खासमा अहिले भूमिगत नै हो म । गाउँतिर त जङ्गल पस्यो भनेका छन् ।  तर, यहाँ लुकेर बसेको छु । एउटा स्यानो मेनपावर पनि चलाइरहेको छु । के गर्नु, खानु त पर्यो नि ! यो कुरा कसैलाई नभन्नूहोला । म त व्यवस्था परिवर्तन गर्ने बाटोमा लागें ।

भरङ्ग भएँ म । दुवै कान बन्द भएजस्तो भयो । हरिजीलाई त कस्तोकस्तो अनौठो पो देख्न थालें । एकछिन कोठामा सन्नाटा छायो । कताकता डर-डर पनि लाग्यो । कतै हरिजीले मलाई पनि भूमिगत हुनको लागि कर गर्ने त होइन ? एउटा अज्ञात भयले बेस्मारी गाँजेजस्तो भयो । हरिजी कसैलाई कुनै पनि कुरामा जबर्जस्ती गर्ने खालको मान्छे त थिएनन् । तर, माओबादी भएपछि बिग्रे कि..... ? मनको सन्त्रासलाई च्यात्दै म बोलें -आफू त बेरोजगार छु, विदेश जाने चक्करमा काठमाडौँको धुँवा-धुलो खाँदै रन्थनिइरहेकोछु ।

मैले यति भन्दा पनि हरिजीले मलाई माओवादीमा लाग्न सल्लाह चाहिं दिएनन् । न त कुनै करकाप नै गरे । बरु त्यहाँ अर्को लघु चकमन्नता छायो । चिया-खाजा खाउँ भन्ने प्रस्ताव न उनले राखे, न मैले नै । खाटमुनिबाट एउटा तानेर खोले अनि किताबको बन्डलबाट एक थान निकालेर केहि शब्दका साथ् आफ्नो हस्ताक्षर गरेर मेरो हातमा थमाइदिए -'अपदस्त जिन्दगी ।'

हामीसँग छुटिकन एकाङ्की संग्रह पनि निकाल्न भ्याएछन् उनले । दुश्मनको तातो गोली यो छातीले खाएन भने यो कुकुर व्यवस्था फेरेर कुनै दिन भेटौंला है गणेशजी, भनेर उनले मसँग छुट्टिने अभिप्राय व्यक्त गरे । उनको पुस्तक हातमा च्यापेर म पनि फुत्त बाहिर निस्केर लामो सास ताने अनि फटाफट बाटो तताएँ । यो पचासको दशक आखिरी अर्थात २०५९ सालतिरको कुरा हो ।

जीवन धान्ने, बाच्ने-बचाउने र अभावको खाडल पुर्ने उपक्रममा कहिले मलेसिया र कहिले कहाँ हुँदै टापूहरूको एउटा सानो देश सेसेल्सको फ्रिगेट आइल्याण्डमा बनिबुतो गर्न आइपुगेको छु म । त्यहि बिचमा माओबादी शान्ति प्रक्रियामा आयो । २०६२/६३ को जनाअन्दोलन सफल भयो । संविधान सभाको पहिलो चुनाव सम्पन्न भयो । अनलाइन पोर्टलतिर ताजा मत परिणाम हेर्दैछु । धनकुटा- २ बाट सूर्यबहादुर थापालाई हराउंदै माओवादीका हरिराज खेवा निर्वाचित भएको समाचारले आश्चर्यचकित भएँ । साथमा खुशी पनि उत्तिकै । सभासद हरिराज खेवाको मोबाइल नम्बर पत्ता लगाइकन बधाई दिएँ । म कार्यरत देशको नाम

सेसेल्स सुन्दा उनि पनि तिन छक्क परे । हत्तपत्त नेपाली पुग्नै नसक्ने, कहिल्यै नाम नसुनेको देशमा पुगेर जागिर खान सकेकोमा आफूभन्दा भाग्यमानी र सफल मलाई ठाने हरिजीले । नेपाल कहिले फर्किने ? यता आएपछि भेट्नुपर्छ है ! नाटक गर्ने रहर अझै मरेको छैन गणेशजी, भनेर फेरि उही धोद्रे हाँसो छोडेर फोन काटे उनले ।

हरिराज खेवा अर्थाराज्य मन्त्री भएको खबरले एकपटक पुनः आश्चर्यचकित र खुशी दुवै भएँ म । अझ भनौं -हर्ष र गर्वले मेरा आँखा रसाए ।  हिम्मत, उद्देश्य, साहस, सपना र क्षमताको बेलगाम घोडा हो हरिराज खेवा । जसले आफ्नो गन्तव्य प्राप्तिको बाटोमा कुनै बाधा र अवरोध देखेन ।

हरिराज खेवा अलिकति महत्वाकांक्षी पनि हुन् जस्तो लाग्छ । त्यसो त महत्वाकांक्षाले नै मान्छेलाई सफल बनाउने हो । यदि उनमा त्यो स्तरको महत्वाकांक्षा नभईदिएको भए छोटो समयमा त्यति धेरै प्रगति गर्ने नै थिएनन् होला । सम्भावना र अवसरहरू चाँडो देख्थे उनि । रङ्गकर्म र शिक्षणका अतिरिक्त कुशल राजनीतिक खेलाडी पनि सावित भए उनि । र त छोटो समयमै मन्त्रीसम्म भए । हरिजी बहालवाला मन्त्री भएकै बेला म आफ्नो छुट्टी मनाउन नेपाल गएको थिएँ । काठमाडौँबाट फोन गरें, सम्पर्क हुन सकेन । पछि इटहरीबाट चाहिं सम्पर्क भयो । लामै कुराकानी भयो । अब एउटा राष्ट्रिय समृद्धिसम्बन्धि नाटक लेख्नुस् गणेशजी, म पनि अभिनय गर्न तयार छु ।  नाटकको तिर्खा मेटिएकै छैन नि यार ! तपाईं पनि धेरै विदेश नबस्नुस्, फर्केर आउनुस् । हामी ठाउँमा छौं, यतै केहि गर्नुपर्छ । भनेर बढो आशावादी कुरा कुरा बाँडे । छेउमा साक्षी थिए मेरा रङ्गसहयात्री मित्र किशोर अनुराग । हुन्छ नि मन्त्रीज्यू भनेर काठमाडौँमा भेट्ने बाचाकासाथ मैले टेलिफोन सम्वाद टुंग्याइदिएँ ।

पछि म आफ्नो छुट्टी सकेर कर्मथलो सेसेल्स फर्किने बेलामा हरिजीलाई भेट्ने प्रयास गरें । अफसोच, फोनधरी सम्पर्क हुन सकेन । त्यो पटकको भेट्ने रहर पनि तुहियो । म फर्किनु बाध्यता थियो, मन अमिलो पार्दै फर्कें । मन्त्री साथीलाई भेटेर उसकै कार्यकक्षमा फोटो खिचाउने चाहना स्थगित हुँदा नमिठो लाग्यो । समय घर्किंदै गयो । सरकारहरू परिवर्तन भईरहने नेपालको परम्पराले क्रमभङ्ग गरेन ।

हरिजीको मन्त्री पद पनि धेरै समयसँगै रहेन । उनि भूपू मन्त्री भैसकेका थिए । र पनि उनलाई अर्को पटक चाहि पक्कै भेट्नेछु भन्ने इच्छा मनमा सतिसालजस्तो जब्बर थियो ।

२०७३ को एक बिहान फेसबुक खोल्नेबित्तिकै पत्रकार मित्र देवेन्द्र खापुङको फोटो स्टाटसमा आँखा पुगे । सिधुवादेखी धनकुटा आइरहेको बस दुर्घटनामा परि पूर्व अर्थराज्यमन्त्री हरिराज खेवासहित दर्जनौको निधन । हरिजीको सम्बन्धमा अन्तिम पटक आश्चर्यचकित भएँ म । पहिला उनका विषयमा समाचार सुन्दा आश्चर्य संगै खुशी हुन्थें । यो पटक आश्चर्यसँगै दुःखी भएँ । दुखी मात्र होइन स्तब्ध र मर्माहत भएँ । श्रद्दाञ्जलीका शब्द गुच्छाहरू सामाजिक सञ्जालमार्फत चढाएँ । मैले गर्नसक्ने पनि त्यत्ति नै थियो । मनमा खड्किरहे तीन कुरा - एक : हरिजीले त्यत्रो राजनीतिक छलाङ्ग मारिसक्दा पनि मैले भेट्न सकिन । दुई : अझै पनि सँगै नाटक गर्ने उनको र मेरो समेत रहरमा पूर्णबिराम । तिन : देशले मेरो पुस्ताको एक होनहार युवा नेता गुमायो । उनि सम्बद्ध राजनीतिक दल आज उनले राजनीति थालेकै पुरानो दलसँग बिलय भएकोछ । उनको सपना साकार पार्न उक्त सरकारी दलले कत्तिको पहल गर्ला ? कत्ति सम्झेला वा नसम्झेला उनलाई ? त्यो त समयले क्रमश बक्दै जाला । तर, व्यक्तिगत रूपमा मेरो लागि हरिराज खेवा एउटा भुल्नै नसकिने सुमधुर अनि सुदूर सम्झनामा अजम्बरी भएर बाँचीरहने छन् ।

**इटहरी ४, सुनसरी**
**हालः फ्रिगेटआइल्याण्ड सेसेल्स ।**

# हरिजीलाई सम्झँदा

**राजकुमार दिक्पाल**

हरिजीको नाम अगाडि यति छिट्टै 'स्वर्गिय' थप्नुपर्छ भन्ने कल्पना कसले गरेका थिए होलान् ? तर उनको नाम अगाडि २०७३ साउन १३ गतेदेखि स्वर्गिय थप्न बाध्य भयौँ । अल्पायु बाँचेर एउटा अप्रिय सडक दूर्घटनाबाट उनी महायात्रामा निस्के । हो, जीवन अनित्य छ, तर हरिजी यति चाडै जानु हुँदैनथ्यो । उनको ठूलो आवश्यकता थियो, समाज रूपान्तरणका लागि । उनको अभाव खट्किरहनेछ ।

दूर्घटनामा परी हरिजीको ठाउँका ठाउँ मृत्यू भएको समाचार जब अनलाइन तथा सामाजिक सञ्जालहरूमा जब फैलियो, यसलाई पत्यार मान्न गाह्रो मान्दै यो समाचार असत्य सावित भइदेओस् भनी कामना गर्ने कैयौँ थिए । तीमध्ये म पनि एउटा थिएँ । तर त्यो अप्रिय सत्य थियो । हरिजी दिवंगत भएको त्यो अप्रिय समाचारले उत्पन्न गराएको पीडा सहन बाध्य भइयो ।

हरिजी यो संसारमा नहरेपछि उनीसँगका सम्झनाहरू ताजा भएर आए । पछिल्ला दिनकाभन्दा पुराना सम्झनाहरू झल्झली आँखाभरि नाचिरहे ।

मेरो ज्ञानको क्षितिज साँघुरो भए अर्कै कुरा हो । अर्थात् म गलत पनि हुनसक्छु । तर मेरो दावी के छ भने धनकुटा नगर क्षेत्रमा बसोबास गर्ने पहिलो लिम्बू परिवार हाम्रै हुनुपर्छ । पछि हाम्रो टोलभन्दा केही तल नन्दप्रसाद खेवा लिम्बूको परिवारको बसोबास सुरु भयो । ताप्लेजुङका मेरो बुवा कप्तान आशबहादुर लिम्बूको जागिरको शिलशिलामा धनकुटा बजारमास्तिर बसोबास भयो भने त्यसपछि तेह्रथुमका लप्टन

नन्दप्रसाद लिम्बूले पनि धनकुटामा बसोबास सुरु गरे, हाम्रो घरदेखि केहीमुनि । धेरैपछिसम्म धनकुटा नगर क्षेत्रमा हामी दुई घर मात्रै थियौं, लिम्बू ।

त्यसबेलाको धनकुटाको सान अहिलेजस्तो थिएन, साँच्चिकै पूर्वाञ्चलको क्षेत्रीय सदरमुकाम थियो । तर २०४६ सालको परिवर्तनपछि धनकुटाका अधिकांस क्षेत्रीय कार्यालयहरू गिरिजाप्रसाद कोइरालाले आफ्नै गृहनगर विराटनगरतिर सारेपछि धनकुटाको रौनक एकाएक हराएर गयो । द्वन्द्वकालमा सदरमुकाम सर्ने लहरले मात्र अहिले धनकुटाको मुहार केही फेरिएको हो ।

धनकुटा नगर क्षेत्रको मूलबाटोमै बसोबास भएकोले यिनै दुई लिम्बूको घरमा लिम्बू र अन्य बटुवाको बास लाग्थ्यो । बास बस्नेको संख्या गनेर साध्य हुँदैनथ्यो ।

सरकारी अड्डा अदालतको र अन्य कामले सदरमुकाम आउँदा हात्तिखर्कका सुब्बा हृदयमान लिम्बू बेला बेलामा हाम्रो घर आएको देख्थेँ । उनको नजिकका नातेदार नन्दप्रसादको घरमा बास परे पनि मेरो बुवालाई भेट्न उनी अनिवार्यजस्तै आइपुग्थे । अलि टाढाको साइनो पर्ने भएर हो वा कुराकानी मिलेर सुब्बा हृदयमान र मेरो बुवाबीच घण्टौं लामो कुराकानी हुन्थ्यो । दुवै पल्लो किरात लिम्बूवानका किपटियाका सन्तान भएकाले उनीहरू इतिहास र सँस्कृतिका कुरा गर्थे होलान् भन्ने मेरो अहिलेको अनुमान छ ।

**त्यो लज्जालु ब्यक्ति**

सुब्बा हृदयमान आफ्नो परिवारको उन्नतिप्रति सचेत थिए । त्यसैले उनले आफ्नो सन्तानलाई शिक्षा दिनु अनिवार्य ठाने र सदरमुकाममा राखेर पढाउने निश्चय गरे । धनकुटा बजारबाट आधा घण्टा दूरीमा रहेको हाम्रो घरमा राखे, उनले आफ्ना छोरा खगेन्द्र र हरिका साथै भतिज जगतलाई । त्यसबेला खगेन्द्र १०, जगत ७ र हरि ४ कक्षाका विद्यार्थी थिए । मैले त्यो बेला भर्खरै स्कूलको आगन टेक्न सुरु गरेको थिएँ । म कक्षा ४ मा पुगेपछि कक्षा ५ सम्म प्राथमिक तहको शिक्षा कायम भयो । तर हरिले पढ्दा कक्षा ४ देखि ७ सम्म निम्न माध्यमिक तहको शिक्षा कायम

थियो । त्यसैले हरि र जगत गोकुण्डेश्वर बालमन्दिर निम्न माध्यमिक विद्यालय र खगेन्द्र गोकुण्डेश्वर व्यवसायिक माध्यमिक विद्यालयमा पढ्थे । म चाहिँ आफ्नै टोलको गणेश प्राथमिक विद्यालयमा पढ्थेँ ।

खगेन्द्र, जगत र हरि तीनै जना असाध्यै बिनयी स्वभावका । कुन साइनो सम्बन्धले हो कुन्नि, तीनै जनाले हामी घरका दाजुभाईलाई "काका", दिदी बहिनीलाई "फुपु" र आमा बुवालाई "बाजे बोजु" सम्बोधन गर्थे । म आफू कक्षा १ मा पढ्नेलाई कक्षा ४ मा पढ्ने हरिले "काका" भन्दा मलाई बडो अप्ठ्यारो लाग्थ्यो । हरिजी पनि त्यसबेला बडो लजालु । बोल्दा बोल्दै उनको अनुहार लज्जाले रातो हुन्थ्यो । उनीहरू एक वर्ष हाम्रो घरमा बसेर पढे । त्यसपछि कता गए पत्तो पाइनँ ।

**मेरा सहपाठी**

त्यसको १० वर्षपछि हरिजीसँग फेरि भेट भयो । त्यसबेला हाम्रो भेट भएको थियो, सहपाठी रूपमा । धनकुटा बहुमुखी क्याम्पसका प्रमाणपत्र तहका विद्यार्थी थियौँ हामी । मभन्दा पढाईमा तीन वर्ष अगुवा उनको कलेजको पढाई किन ढिलो भयो, यसबारे मैले उनीसँग कहिल्यै पनि जिज्ञासा राखिनँ । अब यो जिज्ञासा राख्न पाइने पनि छैन ।

अब हाम्रो "काका-भतिज"को साइनो पनि बाल्यकालसँगै हराइसकेको थियो । हामी "जी" सम्बोधनमा परिणत भइसकेका थियौँ । भेटपछि मैले खगेन्द्र र जगतका बारेमा सोधेँ । उनले त्यसबेला एउटा दुःखद खबर सुनाएका थिए, आफ्ना जेठा दाइ खगेन्द्रको बारेमा । खगेन्द्र बेपत्ता भएको वर्षौं भएछ । कहाँ गए, मरिसके कि बाँचेका छन्, कुनै खुटखबर छैन । जगत चाहिँ गाउँमै भएको सुनाएका थिए ।

**इतिहासका ज्ञाता**

कलेज पढ्दा उनी गाउँमा शिक्षण गर्थे । त्यसैले उनी कक्षामा नियमित थिएनन् । दोस्रो वर्षपछि खासगरी प्रयोगात्मक परीक्षाका कारण उनी अलि नियमित हुन थाले । उनी र मैले भूगोल विषय रोजेका थियौँ । उनले किन भूगोल रोजे,

यसबारेमा मलाई थाहा छैन । तर मैले चाहिँ लहडबाजीमा भूगोल रोजेको थिएँ । अहिलेको रुची हेर्दा मलाई इतिहास विषय फाप्ने थिएछ । हरिजीले पनि इतिहास पढेको भए राम्रै हुने थियो ।

हरिजीका बुवा सुब्बा हृदयमान आफै इतिहासका महत्वपूर्ण स्रोत थिए । इतिहासकार शिवकुमार श्रेष्ठले आफ्नो पुस्तक "लिम्बूवानको ऐतिहासिक अध्ययन" (२०६२:१२३-१२९)मा सुब्बा हृदयमानको संग्रहमा रहेका लालमोहर छापेर आफ्नो पुस्तकको गहनता बढाएका छन् ।

हृदयमानको देहावसानपछि ती इतिहासका स्रोतहरू हरिजीको हातमा थियो । ती स्रोतसम्मको उनको पहुँचले उनी इतिहास बिषयमा राम्रो ज्ञान राख्थे । अहिले पनि उनको घरमा प्रशस्तै हस्तलिखित सामग्रीहरू छन् । हरिजीको महायात्रापछि ती स्रोतहरू कसरी सुरक्षित राख्ने हो, यसबारेमा हकवाला परिवारजन पक्कै पनि गम्भीर भएको हुनुपर्छ ।

**भूगोल विषयले नाटककार**

इतिहासको स्रोतमा पहुँच राख्ने र इतिहासप्रति ज्ञान भएका उनले भूगोल विषय लिए । तर भूगोल विषय पनि उनका लागि फलिफापसिद्ध भयो । भूगोल विषयले उनलाई सफल नाटककार बनायो ।

कुरा २०४८ सालको हो । भूगोल विषय लिनेहरूका लागि अनिवार्य बनाइएको भौगोलिक भ्रमणका लागि पोखरा जाने तय भयो । तर हामीसँग खर्च अभाव भएकोले हामीले नाटक प्रदर्शन गरेर अर्थ सङ्कलन गर्ने निश्चय गर्‍यौं । त्यसका लागि रोज्यौं, मोदनाथ प्रश्रितले लेखेको "पचास रूपैयाँको तमसुक ।" जेपी परदेशीले नाटक निर्देशन गरेका थिए । नायकको भूमिकामा लक्ष्मी निरौला (हाल नेपाल सरकारका उपसचिव) र नायिकाको भूमिका रेखा अर्यालले निर्वाह गरेकी थिइन् । तेह्रथुमको बसन्तपुर (हालः लालीगुराँस नगरपालिका)मा प्रदर्शन गर्दा अपर्झट अत्यन्तै सानो भूमिका हरिजीलाई दिइएको थियो ।

त्यसपछि हरिजीमा नाटकप्रति कति धेरै लगाव बसेछ भने उनले एकाङ्की सङ्ग्रह “अपदस्त जिन्दगी” प्रकाशित गरे । मञ्च र रेडियो नाटकमा उनी कतिसम्म छाए भने राष्ट्रव्यापी रेडियो नाटक महोत्सव-२०५५मा उनले स्वर्ण पदक जिते । पूर्वाञ्चलमा हरिजी नाट्य क्षेत्रको पर्यायवाची भइसकेका थिए ।

**तीव्र वेगको यात्रा**

उनी शिक्षण पेशा छाडेर २०५४ सालको स्थानीय निर्वाचनमा एमालेबाट हात्तिखर्क गाविसको स्थानीय निर्वाचनमा अध्यक्ष पदको प्रत्यासी बनेर सक्रिय राजनीतिमा होमिए । पञ्चायतकालमा प्रधानपञ्च र प्रजातन्त्रलगात्तैको स्थानीय निर्वाचनमा राष्ट्रिय प्रजातन्त्र पार्टीबाट गाविस अध्यक्षमा निर्वाचित आफ्नै दाजु लोकेन्द्र तिगेलालाई उनले हराए । यसरी एउटा सफल नाटककारका रूपमा स्थापित भए उनी । त्यसको लगात्तै विकासप्रेमी जनप्रतिनिधिका रूपमा धनकुटामा उनी उदाए ।

उनी महाकाली सन्धिको विरोधमा उत्रिए र माले भए । कार्यकाल बाँकी छँदै उनी धनकुटाबाट एकाएक अलप भए । पछि बुझिएअनुसार सुरुमा लिम्बूवान मुक्ति मोर्चाका अध्यक्ष भक्तराज कन्दङ्वासँग उनी नजिकिए । भक्तराज हरिजीका मामा हुन् । लिम्बूवानको मुद्दामा मामा-भान्जाको कुरो मिल्यो । भित्रभित्रै उनी माओवादीको सम्पर्कमा पुगिसकेका रहेछन् । शान्ति प्रक्रियापछि उनी जिल्ला फर्के ।

उनी निर्वाचन लडेको ठाउँ सूर्यबहादुर थापाको किल्ला हो । त्यहाँबाट उनले २०६४को संविधान सभाको निर्वाचन जिते । माथि नै भनियो, उनी असाध्यै लगाव भएका मानिस । उनले अर्थ राज्यमन्त्रीसम्मको कार्यभार बहन गर्न भ्याए । पछिल्लो समय उनी माओवादी केन्द्रका केन्द्रीय तहमै थिए ।

कुनै बेला धनकुटेली नेतामध्ये राजनीतिक उचाईको हिसावले उनको उचाई तेस्रो तहमा थियो । पहिले सूर्यबहादुर थापा, दोस्रो रकम चेम्जोङ र तेस्रो उनी । अहिले पूर्वमन्त्री सुनीलबहादुर थापालाई रकम चेम्जोङकै बरियतामा राख्ने हो भने हरिजीको तेस्रो बरियता सुरक्षित नै छ ।

हरिजीको गति तीव्र देखियो । राजनीति सुरु गरेको छोटो समयमै गाविस अध्यक्ष हुनु । संविधान सभा सदस्य जित्नु र राज्यमन्त्रीसम्म पुग्नु । यो तीव्र वेगको गतिमा उनले जिन्दगीको गन्तब्य पनि चाडै भेटे । अल्पायुमै उनको यात्राको वेग समाप्त भयो ।

अलविदा, हरिजी

# गरीब र सर्वहारा नागरिकका पक्षमा चट्टान झैं उभिने हरिजी

**गिरीश पोखरेल**

नजिकका दौंतरीहरू प्रायः प्रिय हुन्छन् त्यसमा पनि बालसखा अझ प्रिय हुने नै भए । यस्तै बालसखाहरूमध्येका मेरा एक बालसखा हरिराज खेवाहाङ । कक्षा चारदेखि एसएलसी दिउँन्जेल हामी एकै बेन्चमा बसेर अध्ययन गर्‍यौं । बाल सुलभअनुरूप हामीले पनि खालेखाले चकचक गर्‍यौं ।

उनी हिलेदेखि उत्तरतिर रहेको हात्तीखर्क भन्ने गाउँबाट धनकुटा बजारमा रहेको स्कुलमा पढ्न आउँथे । उनको डेरा कहिले देब्रेबास त कहिले कागतेतिर हुन्थ्यो । म कहिलेकाहीं डेरामा पुग्थें । मैले पहिलोपटक डबकामा कोदोको जाँड उनैसित बसेर चाखेको सम्झना हिजैजस्तो लाग्छ । त्यो जाँड पिएपछि पुनः जीवनमा हामी दुई भाइ बसेर मादक पदार्थ कहिले पिएनौ पनि ।

उबेला धनुकटा सुर्यबहादुर थापाको रजगज चल्ने समय हामी अलि ससानै थियौं तर पनि हामीमा राजनीतिक चेतनाको बास बसिसकेको थियो । सुर्यबहादुर थापा भनेको पञ्चायती शासकका कारिन्दा भन्ने ठान्थियौं । र, हरि र मेरो नजिक हुने अर्को कारण उनी थापाकाजीहरूको विरोध गर्थे म पनि थापाकाजीहरूभनेका शोषक सामान्त र यिनीहरूले गरिब निमुखाहरूलाई उनका हैकम र हुकुम नमान्नेहरूलाई दुःख दिन्छन् भन्ने बाल मस्तिष्कमा परेको थियो । धनकुटा बजारिया साथीहरू त्यस्ता कुरामा खासै ध्यान दिदैन थे ।

जब हामी हाइस्कुल प्रवेश गरेयौं त्यो बेला तल्लो गोकुण्डेश्वर भनेर चिनिने स्कुलमा ४ कक्षादेखि ७ कक्षासम्ममात्र पढाइ हुन्थ्यो भने त्यसपछि माथ्लो गोकुण्डेश्वर माध्यमिक विद्यालयमा आउनुपर्थ्यो त्यहाँ आठ कक्षादेखि १० कक्षासम्म पढाइ हुन्थ्यो हामी आठ कक्षामा आएपछि विद्यार्थी राजनीति लाग्न थालिसकेको थियो । यसैक्रममा नजिकैको क्याम्पसमा अखिल नेपाल राष्ट्रिय स्वतन्त्र विद्यार्थी युनियनको जगजगी थियो प्रायशः युनियनमा जो जो निर्वाचित हुन्थे उनीहरू स्थानीयभन्दा बाहिरि जिल्लाका विद्यार्थीहरूको वर्चश्व रहन्थ्यो । यसैक्रममा कलेजको राजनीतिले हामी माध्यमिक तहका विद्यार्थीहरूमाझ पनि चेतना जागृत भइसकेको थियो । हाम्रो स्कुलमा पनि स्ववियु निर्वाचन भयो । राजेन्द्र राईको प्यानल अर्थात् अखिलले जितेको थियो ।

यसैक्रममा हरिराज खेवाङ र म भने अखिलको प्रारम्भिक कमिटीमा रहेर काम गर्न हामी दुवै भूमिगत रूपमा नै प्रवेस गरेर मुठ्ठी उठाउँदै सपथ खाइसकेका थियौं । त्योबेलादेखिको राजनीतिक सहभागीता एसएलसी दिएर हिडेंपछि धनकुटा छाडें । बिस्तारै देशमा विभिन्नखाले राजनीतिक परिवर्तनहरू हुँदै आए त्यसपछि मैले स्कुले राजनीतिपछि २०४६ को जनआन्दोलनका क्रमममा काठमाडौंमै रहेर पत्रकारिता गर्न थालिसकेको थिएँ । त्यो बेला प्रायः पत्रकारहरू पनि कुनै न कुनै पार्टीका कार्यकर्ताकै रूपमा भेटिन्थे । सोही क्रममा मैले केही समय पत्रकारितासँगसँगै धनकुटाका बिभिन्न गाउँहरूमा पुगेर तत्कालिन मोहनविक्रम सिंहको नेतृत्वमा रहेको नेपाल कम्युनिष्ट पार्टी (मसाल)लाई बिउँझाउने काममा लागें । त्यसअघि धनकुटामा मसालको कुनै पहिचान नै थिएन । बहुँदल आएपछिको पहिलो आम निर्वाचनपछि त्यो राजनीतिक घनचक्करलाई चटक्क छाडेर पूर्णकालिन पत्रकार र आफ्नो पढाइलाई काठमाडौंमै रहेर निरन्तरता दिन लागें ।

पत्रकार भएर राजनीतिक झण्डा बोक्नु हुँदैन भन्ने पक्षमा त्यहीबेलादेखि निरन्तर रहेर म आफ्नो पत्रकारिता र पढाइमा रहें । त्यही क्रममा सन् १९९६ को अन्त्यअन्त्यतिर म अमेरिका हानिएँ । र, अमेरिकातिरै दुःखजेलो गर्दै यतैबाट नेपालका लागि नै पत्रकारिता गर्न थालें ।

म अमेरिका आउनु र माओवादीहरू जंगल प्रवेस गर्नु झण्डै एकै समय थियो । देशमा माओवादी जनयुद्द चरम रूपमा पुग्यो कहिले कति सरकारपक्षबाट आतंकवादी मारिए भन्दै समाचार आउँथ्यो त कहिले आतंककारीहरूबाट सरकार पक्षका मानिस मारिए भनेर समाचार आउँथे । गाउँबस्ती शहर जताततै माओवादी जनआन्दोलन उत्कर्षमा पुगेको थियो । सोही क्रममा हामी केही साथी मिलेर सन् २००१ सालमा अमेरिकाबाट नै नेपाली भाषामा अनलाइन पोर्टल नेपाली पोष्ट डटकम शुरु गऱ्यौं ।

यसैक्रममा सन् २००३ मा अमेरिकाबाट घरायसी कारणले गर्दा धनकुटा फर्कदाँ त्यो बेला माओवादी जनयुद्द उत्कर्षमा पुगेको थियो । धनकुटामा आफ्नै कपितय साथीहरू को कता कता छन् भनेर थाहा पाउन गाह्रो थियो । म अमेरिका बसेर अनलाइन पत्रिका चलाउने हुनाले त्यो बेला माओवादी जनयुद्दका समाचारहरू तिनका नेताका लेखहरू हामी अमेरिकाबाट प्रकाशित गर्ने गर्थ्यौं । किनकी नेपालमा त्यसरी प्रकाशित भएमा प्रकाशन गर्नेहरूलाई सरकारले दुःख दिन्थ्यो । यसैले गर्दा पढ्ने लेख्ने, बोल्ने सूचनाको स्वतन्त्राका निम्ति हामीले अमेरिकामा बसेरै भए पनि नेपालका समाचार लेखहरूलाई महत्वका साथ अनलाइनमा राख्ने गरेका थियौं । जसका कारणले नेपाली पोष्टलाई माओवादीहरूका केन्द्र र जिल्लाका नेताहरूले समेत अनलाइनमा निस्केका समाचार प्रिन्ट गरेर पढ्ने रहेछन् । नेपालमा भएका त्योबेलाका माओवादी जनयुद्दका जिल्लास्तरका हुन् वा केन्द्रस्तरका भूमिगत नेताहरूलाई भेट्न निक्कै गाह्रो थियो तापनि धनकुटा पुग्दा एक दिन एक जना साथीले धनकुटाका नेता भेट गराइदिन्छु भन्दै स्थानीय होटल परिचयमा पुऱ्यायो त्यहाँ पुग्दा को नेता रहेछ भन्दा त उही मेरो बालसखा हरिराज पो उभिएर दरोसँग हात मिलाउँछन् । म त तिन छक परें । उनले धनकुटा क्याम्पसमा रहेर आफूलाई नाटककार कवि साहित्यकारका रूपमा पनि परिचित गराइसकेको पाएर अझ खुशी लाग्यो । उनी केही वर्षदेखि पूर्णकालिन माओवादी भएर गाउँ बस्ती हिड्न थालिसकेका रहेछन् । हामीबीच त्यही होटल परिचयमा केही समय गफगाफ गऱ्यौं र पुराना कुराहरू भए त्यसपछि हामी छुट्टियौं ।

समय चक्रले त्यही एउटा युवा जसले स्कुले जीवनमा समेत सूर्यबहादुर थापाको विरुद्धमा आवाज उठाउँदथ्यो उनै हरिराजले माओवादी शान्तिपूर्ण राजनीतिमा प्रवेश गरेपछि राजा महेन्द्रको पालादेखि राष्ट्रिय राजनीतिमा पटक-पटक प्रधानमन्त्री

भइसकेका सूर्यबहादुर थापालाई पहिलो संविधान सभाको निर्वाचन २०६४ मा धनकुटा क्षेत्र नम्बर २ बाट पराजित गरेको समाचारले ज्यादै खुशी लाग्यो । पछि सन् २०१२ मा वर्षमान पुन अर्थमन्त्री हुँदा उनीसँग अर्थ राज्यमन्त्री भएर समेत काम गरेपछि लाग्यो राजनीति भविष्य खेवाङको उज्ज्वल छ ।

जिल्लामा रहेर जिल्लाबासीहरूसँग दैनिक रूपमा पार्टीकै काम गरिरहेको खबर पाउँथें खासै मेरो पुनः सम्पर्क नभए पनि एउटा साथीले गरेको उन्नत्ति प्रगतिका बारेमा हामी अरु साथीबीच पनि कुराकानी हुन्थ्यो । सायद राज्यमन्त्री भएपछि फेसबुकबाट नै बधाई दिएँ ।

यतिकैमा २०१६ जुलाई २८ तारिख एक दिन अचानक खबर आयो धनकुटा सिंधुवा नजिकै बस दूर्घटनामा परि पूर्व अर्थ राज्यमन्त्री हरिराज खेवाङ लगायत धेरैको निधनको त्यो सुनेपछि मैले केही छिन त पत्याउनै सकिन तर हुने हार दैव नटार भनेझैं जे नहुनु थियो आखिर भएरै छाड्यो मेरो मन छाँगाबाट झरेजस्तो भयो ।

मैले त मेरो एउटा बालसखा गुमाएँ गुमाएँ उता जिल्लाले मात्र हैन देशले नै एउटा उदीयमान नेता गुमायो । आज तिनै मित्रको सम्झनामा संस्मरण लेख्नपर्दा मैले तिनलाई अन्तिम पटक धनकुटाको होटल परिचयमा भेटेको याद मात्र झल्झली आउँछ । मलाई मित्र हरिको श्रीमतीजी गीता खेवाले हजुर र हरि साथी हो अरे भन्ने थाहा पाएँ वहाँको बारेमा केही लेखिदिनु न भनेर फेसबुक म्यासेज पठाउनुभयो उता लण्डनबाट विश्वदीप तिगेलाले पनि स्मृति ग्रन्थका लागि संस्मरण लेखिदिन आग्रह गर्नुभयो ।

मैले चिनेको हरिराजले कहिले साथीभाइसँग झगडा गरेको थाहा पाइन भने उनी बाल्यकालदेखि नै गरीब र सर्वहारा नागरिकका पक्षमा चट्टान झैं उभिने हरिको पक्षमा जति लेखे पनि कम हुन्छ त्यही पनि यिनै शब्दले उनलाई संझदै हरिको आत्मा शान्तिको कामना गर्दै परिवारप्रति हार्दिक समवेदना प्रकट गर्न चाहन्छु ।

(लेखक **वासिंङटन डीसीमा रहेर पत्रकारिता गरिरहेका छन् ।**)
gpokhrel@gmail.com

# अन्तिम भेट

**भरत थोक्लेन**

२०५५/५६ तिर रेडियो स्रोताहरूमध्ये म पनि एक थिएँ त्यो बेला। जुन बेला पकेट रेडियोहरूको असाध्यै चल्ति थियो। एफ एम बेण्ड (१० बेण्ड वाला रेडियो ) रेडियो खुब सुनिन्थ्यो। म विशेषगरि रेडियो नेपालका कार्यक्रमहरू बढिमात्रामा सुन्थेँ।

रेडियो नेपाल क्षेत्रिय प्रसारण केन्द्र धनकुटाका सबै कार्यक्रमहरू प्रायः सुन्ने गर्थें। त्यसैक्रममा रेडियो नाटकबाट चिनेको नाम हो हरिराज खेवा। एक समय रेडियो नाटकमा छुट्टै नाम र पहिचान राख्न सफल हरिराज खेवा 'अपदस्त जिन्दगी' नाटकबाट झन ख्यातिप्राप्त नामको रूपमा पाएँ।

मेरो लागि धेरै समय अगाडि नाटकबाट यसरी परिचित नाम भएपनि वास्तविक ठेगाना भने धेरैपछि मात्रै थाहा भयो। वहाँलाई देख्ने र चिन्ने अवसर भने राजनीति क्षेत्रमा सक्रिय भएपछि मात्रै मिल्यो। हरिदाइलाई चिनेको फेरि निकै लामो समयपछि मात्रै यसरी प्रत्यक्ष अनि पहिलो भेट थियो।

जुन बेला धनकुटाको पाख्रिवासमा किरात याक्थुङ चुम्लुङको अधिवेशनको तयारी चलिरहेको थियो। अधिवेशनमा सहभागी हुन किरात याक्थुङ चुम्लुङ जिल्ला शाखा धनकुटाका तत्कालीन सल्लाहकार खड्ग खोयाहाङको नेतृत्वमा गाउँले भाइ धनकुमार लिम्बू र म गरि तीन सदस्यीय प्रतिनिधि र पर्यवेक्षकका रूपमा त्यहाँ पुग्दा चुम्लुङमा आवद्ध पदाधिकारिहरू विभिन्न सजावटमा व्यस्त थिए। अधिवेशनका लागि सबै तयारी अन्तिम चरणमा पुगेको थियो। दिन ढल्किदै थियो। कार्यक्रम सञ्चालनको तयारिका लागि तत्कालीन कियाचु जिल्ला शाखा अध्यक्ष शिव ईङनाम

र सचिव तोपेन्द्र साँवा तयारी अवस्थामा रहेपनि प्रमुख अतिथिको अनुपस्थितले निर्धारित समयमा कार्यक्रम सञ्चालन हुन सकेन । त्यसैले कार्यक्रमको बारेमा बुझ्दा प्रमुख अतिथिका रूपमा निम्त्याईएको तत्कालीन माननीय अर्थ राज्यमन्त्री हरिराज खेवा रहेको थाहा भयो ।

हामी प्रमुख अतिथिको आगमन कतिखेर हुन्छ र कार्यक्रम छिटो सुरु गर्ने भन्ने मिठो प्रतिक्षामा थियौं । हाम्रो प्रतिक्षाको भित्ते घडि बाटोतिर घुम्दै गर्दा केही युवा दस्ताका साथमा उहीँ धनकुटाको चुवाको बोटमा पटकपटक देखेको मान्छे टाढाबाट मात्रै चिनेको मान्छे नजिक देखभेट गर्न नपाएको मान्छे हरिराज खेवा सबैलाई सेवारो, नमस्कार गर्दै हातमा हात मिलाउँदै आईपुग्नु भो र हामीले पनि हात मिलाई स्वागतका साथै हार्दिकता प्रकट गरि सकेर कार्यक्रम स्थल याने कि मञ्चतर्फ गयौं । त्यसपछि अधिवेशनको औपचारिक कार्यक्रम सुरु भयो । औपचारिक कार्यक्रमको समापनसँगै हामी प्रमुख अतिथिसँग पनि छुट्टियौं ।

त्यसपछि धेरै लामो समयसम्म वहाँलाई भेट्न त के देख्नसम्म पनि साईत जुरेको थिएन मेरो लागि । एक दिन अचानक धनकुटाको सिधुवामा बस दुर्घटना भयो । दुर्घटनामा राज्यमन्त्री खेवा पनि परेको हल्ला आयो । जुन समयमा म आफ्नै काम विशेषले धनकुटा गएको थिएँ । संयोगवश म बसेको घरमा हात्तिखर्कका विद्यार्थीहरू बसेका रहेछन् । उनिहरू हल्लाखल्ला गर्दै बाहिरिए । म पनि पछिपछि जिल्ला अस्पतालतर्फ दौडिएँ ।

कसैले के भन्थे कसैले के भन्थे । धेरै मानिसमा धेरै कुरा आउन थाले । त्यसैले म जिल्ला अस्पताल धनकुटाको परिसरमा पुगि सिधुवातिरका साथीहरूसँग फोन सम्पर्क बढाउने काममा व्यस्त भएँ । सुरुमा घाईते मात्रै भन्ने हल्ला आयो । केही समयपछि त घट्नास्थलमै मृत्यु भन्ने खबर आयो । घाइते तथा मृतकहरूको सनाखत हुन सकिरहेको छैन भन्ने समाचार पनि आउन थाल्यो । एकैछिनमा हेर्दाहेर्दै जिल्ला अस्पताल घाईते विरामीहरूले भरिभराउ भयो । कोहीलाई प्राथमिक उपचारपछि घोपा क्याम्प रिफर गर्दै थियो अस्पताल । साथै सुरक्षाकर्मी र अन्य मानिसहरूको भिडभाड बढ्दो क्रममा थियो ।

त्यसपछि मेरो प्रतिक्षाको विन्दु भनेकै हरिराज दाइलाई पर्खने । तर मृत्यु हुनेहरूको लास अस्पतालको पोष्टमार्टम कक्षसम्म आई पुग्न समय लाग्ने भएकोले म केही समयको लागि त्यो भिडबाट बाहिर निस्किएँ । त्यस्को केही समयपछि म फेरि अस्पतालतिर आएँ । अस्पताल आईपुग्दा अस्पताल परिसरका प्रायः मान्छे तल सडक छेउमा रहेको पोष्टमार्टम गर्ने स्थलतर्फ झरिरहेका थिए । म पनि ढिलो नगरी ओरालो नै झरेँ । पोष्टमार्टम गर्ने स्थल साँघुरो भएकोले सुरक्षाकर्मीले त्यहाँ नबस्न सल्लाह दिए बमोजिम त्यो भन्दा तल बस पार्क जाने बाटोमा झरेँ । म त्यहाँ पुग्दा मानिसहरूको घुइँचो कम्ता थिएनन । त्यहाँ धेरै चिनारु साथीहरू अगाडि नै पुगिसकेका थिए । शव आउन बाँकी रहेको जानकारी गराए साथीहरूले । बाटो पुरै जाम भएकोले सवारीसाधनहरू सुरक्षाकर्मीको ईशारामा चलिरहेका थिए ।

मृतकहरूको शव धमाधम पोष्टमार्टमपछि घरतिर लैजान थाले । सबै शव प्लाष्टिकले बेरिएका थिए । कुन कस्को ? कुन कस्को ? बाहिर बसेर हेर्नेहरूले चिन्नसम्म सकिने अवस्था थिएन । हरिदाइको शव कुन होला कुन होला भन्ने मात्रै थिए । गाडी नजिक शव बोक्ने बाहेक अरुलाई जान दिईएको थिएन । म लगायत अरु साथीहरू प्रतिक्षारत थियौं मलिन अनुहारका साथमा । केही समयपछि बलदिप राई लगायतले शव बोकेर पोष्टमार्टम कक्षतिर लगे । ठूलो र गह्रुगो भएकाले सबैले अनुमान गरे यहि होला हरि दाइको शव । यसरी सबै शव पोष्टमार्टम कक्षतिर लगिसकेपछि गाडिहरू र सबै मानिसहरू पनि आ-आफ्नो गन्तव्य स्थानतिर लागे । त्यो कोलाहलमय वातावरणमा केहिबेरपछि सन्नाटा छायो । समय पनि निकै घर्किसकेकोले म पनि साथीहरूसँग विभिन्न किसिमका गन्थन गर्दै मनमा आङ सिरिङ हुँदै आफ्नो गन्तव्यतिर लागेँ । त्यहिबेला लाग्यो मनमा हरिदाइ उदाउनु र अस्ताउनुमा हतार गर्नुभयो । तर वहाँले नचाहि जन्मिदाको साईतै उस्तो थिएछ । मनमा बेचैन भो पहिलो भेट पाख्रिबासमा अन्तिम भेट जिल्ला अस्पताल धनकुटाको शव पोष्टमार्टम गेटमा ।

अस्पतालको गेट अगाडि धनकुटाका प्रायः सबै छापा र मिडियाका साथीहरू, मृतकका आफ्ना आफन्त, चिनारु, शुभेच्छुक, समर्थक आदिहरूको नजर रमाइलो

घुम्तितिर मात्रै देखिन्थ्यो । कोहि फोनमा समाचार टिपाईरहेका थिए भने कोही मलिन आवाजमा एकापसमा कुराकानी गरिरहेका देखिन्थे । संयोग कस्तो अनौठो बनिदिएको, हात्तिखर्कको मान्छे कसरी माथि सिधुवाछेउको चर्च मुनिको घुम्तिमा भएको बस दुर्घटनामा पर्यो ? सबैको मनमा कौतुहलताले डेरा जमाएको थियो । कसैले  आफन्त भेट्न गएर फर्केका रे भन्थे कसैले पार्टीगत विषयमा कार्यकर्ताहरूसँग भेट्न बसन्तपुर गएर फर्किंदै गर्नुभएको पनि भने ।

यी र यस्तै माहौलविच शव बोक्ने गाडी साईरन र हरनका साथ आईपुग्यो । दुबैतिरका बाटोमा गाडीहरू ठप्प रोकिईयो । बाटो खचाखच भयो । म र केही साथीहरू एक छेउमा उभिरहयौँ । शव गाडि छेउसम्म जान सक्ने आँट पनि आएन । जाने ठाउँ पनि थिएन ।

# बहु-आयामिक व्यक्तित्वका धनी हरि खेवा

**भगिराज इङ्नाम**

१९८६ नोभेम्बरमा धनकुटा जिल्ला हात्तीखर्कमा जन्म भै २८ जुलाई १९१६ मा बस दुर्घटनामा परी अल्पआयुमै मृत्युवरण भएका पूर्व अर्थराज्यमन्त्री हरिराज खेवा शालिन व्यक्ति थिए । विद्यालयका प्राध्यापक, साहित्यकार, नाटचकलाकार, गीत रचनाकार समेत भएकाले उनलाई बहुप्रतिभाशाली व्यक्तित्वका धनी थिए भन्न सकिन्छ ।

विद्यार्थी जीवनबाटै मार्क्सवादी चिन्तप्रति आकृष्ट वि.सं. २०५४ सालमा स्थानीय तहको निर्वाचनमा एमालेबाट तत्कालीन हात्तीखर्क गाविसमा अध्यक्ष निर्वाचित भए । उनी परिवर्तनलाई सधैँ आत्मसाथ गर्ने विद्रोही स्वभावका थिए । यसैले एमालेबाट विद्रोह गरी माले पार्टीमा आबद्ध भए । नयाँ सोच विचारबाट समाजलाई रूपान्तरण गर्न सकिन्छ भन्ने मान्यताका साथ उनी जनयुद्ध अभियान सञ्चालन गरेको माओवादी पार्टीमा प्रबेश गरे । पछि, उनकै पार्टीको मूल्यमान्यतालाई स्वीकार तथा आत्मासात गर्दै माओवादी, एमाले, कांग्रेस पार्टीको संयुक्त जनआन्दोलनले राजतन्त्र समाप्त पारी देशमा गणतन्त्रको स्थापना भयो ।

वि.सं. २०६४ सालको आम निर्वाचनमा धनकुटा क्षेत्र नं. २ बाट राजनीतिका माहिर खेलाडी सूर्यबहादुर थापालाई पराजित गरी माओवादी पार्टीबाट संविधानसभाको सदस्य निर्वाचित भए । त्यतिबेला उनको पार्टी ठूलो दल हुनका साथै सरकार नेतृत्वकर्ता समेत बन्यो । उनी अर्थराज्यमन्त्री समेत भए । पार्टीमा उनको अतुलनीय योगदान रह्यो । फलस्वरूप उनी लिम्बूवान राष्ट्रिय मुक्ति मोर्चाको महासचिव, तत्कालिन धनकुटा जिल्ला एकिकृत माओवादी पार्टीको अध्यक्ष भई सफलताका साथ कार्य सम्पन्न गरे ।

वि.सं. २०७१ सालमा मलाई धनकुटा जिल्लाको प्रमुख जिल्ला अधिकारी हुने सौभाग्य मिल्यो । उनी सोही जिल्लाबासी भएकाले औपचारिक अनौपचारिकरूपमा सामिप्य हुने मौका मिल्यो । आफ्नो जिल्लाका बासिन्दाले बिना दु:खकष्ट सरकारी सेवा पाउनुपर्ने, शान्ति सुरक्षाको अनुभूति हुनुपर्ने, समग्र जिल्लाको विकासमा ध्यान दिनुपर्ने बारम्बार सुझाव र सल्लाह दिइरहन्थे ।

वि.सं. २०७१ साल पुस १३ गते खेवाको साविक गाविस हात्तीखर्क गाविसमा 'खुल्ला दिशामुक्त गाविस', 'पूर्ण खोपको सुनिश्चितता' र 'पूर्ण साक्षर गाविस' घोषणा गर्ने औपचारिक कार्यक्रम आयोजना गरेको थियो । कार्यक्रममा च्याब्रुङ नाच, हाक्पारे, ख्याली, सङ्गिनी नाच, हुर्रा नाच, पञ्चै बाजाले रौनकता छाएको थियो । कार्यक्रममा पूर्वमन्त्रीको सम्बोधनको क्रममा जनसहभागिताले गडगडाहट तालीले साथ दिएका थिए । कार्यक्रमको अन्त्यमा लिम्बू जातिको संस्कृति धाननाच पनि नाचियो । त्यो औपचारिक भेटघाट नै उनीसँग अन्तिम भेट भयो मेरो लागि ।

स्वर्गीय खेवाको घर परिवारमा हालसम्म उजागर नभएको सिङ्गो इतिहास लुकेको छ । उनको घरमा ऐतिहासिक पुरातात्विक वस्तुहरू अत्यधिक रहेको छ । पल्लोकिरात लिम्बूवानमा कानुनी रूपमा भूमिसुधार ऐन २०२१, पहिलो संशोधन २०२५ लागु नभएसम्म (पल्लो किरातमा वि.सं. २०२८/२९ बाट २०४८ सम्म नापी भएको) र व्यवहाँरिक रूपमा नापी नभएसम्म पिकटिया, सुब्बाङ्गी प्रथा थियो । सुब्बाहरूले आफ्नो किपटिया क्षेत्रमा अमाल चलाउथे । अमालबाट पञ्चखत बाहेकको मुद्दामामिलाको उजुर सुनी फैसला गर्ने, दण्डसजाय गर्ने, डिङ्ग्रा-मुङ्ग्रो ठोक्ने सम्मको कानुनी अधिकार थियो । सो बाहेक आफ्ना रैतिहरूबाट मालपोत उठाई राजस्व सरकारमा बुझाउने, विकास निर्माणको कार्य गर्ने र सरकारी आज्ञा, आज्ञप्ति जनतासामू पुऱ्याउने काम गर्दथे ।

नेपाल एकीकरण हुनुपूर्व तथा पछि पनि नेपालले पटक-पटक सिक्किम, तिब्बत, इष्ट इन्डिया कम्पनीसँग युद्ध गर्नुपऱ्यो । सन् १९१४–१६ मा नेपाल र इष्ट इन्डिया कम्पनीबीच युद्ध भयो । इष्ट इन्डिया फौजसँग मुकाविला गर्न नेपालले चार ठाउँमा सैनिक क्याम्प राखेको थियो । (क) महाली पारी नयाँ विजित क्षेत्रको सुरक्षार्थ, (ख)

बुटवलबाट शत्रुको मुकाबिला गर्न, (ग) मकवानपुर इलाकाबाट शत्रुको मुकाबिला गर्न र (घ) पूर्वीक्षेत्रमा इष्टइन्डिया कम्पनीसँग मुकाबिला गर्न काजी बख्तर थापाको नेतृत्वमा विजयपुरमा करिब २००० सेनाको डफ्फा थियो । सो युद्धमा पल्लो किरातका लिम्बू-राई थरी मुखियाले आफूसँग भएको घरेलु हातहतियार लिई झारा सैनिकको रूपमा उपस्थित हुन सरकारबाट उर्दी जारी गरिएको थियो । मधुवनी क्षेत्रमा नेपाल इष्टइन्डिया कम्पनीबीच युद्ध भयो । त्यस्तै वि.सं. १९१२ को तिब्बतसँगको युद्धमा पनि लिम्बू-सुब्बाहरूले आफ्ना किपटिया क्षेत्रका जवानहरू लिई सो युद्धमा भाग लिएका थिए । युद्धमा परम्परागत हातहतियारहरू खुँडा, तरवार, ढाल, कट्टी, भाला, तीर, क्रिज प्रयोग हुन्थ्यो । त्यस्ता परम्परागत हातहतियारहरू स्व. खेवाका घरमा भाइ भीमबहादुर खेवासँग अध्यावधि छ । ती हतियारहरूको चित्रसहितको सूचि हरिराज खेवाको माध्यमबाट मेरो ‘लिम्बू जातिको इतिहास’ नामक पुस्तकमा समावेश गरेको छु ।


श्रीदुर्गासहाय
स्वस्ति श्रीमन्महाराजाधिराजकस्यरुक्का

त्यस्तै २०० वर्षभन्दा अघिका शाह राजा, राणा शासकबाट लिम्बूवानका लिम्बू सुब्बाहरूलाई प्रदान गरेका लालमोहर, कास्यरुक्का, इस्तिहार र अन्य कागजातहरू स्व. खेवाका धर्मपत्नी गीता गुरुङ खेवा र भाइ भीमबहादुर खेवासँग धेरै छन् । ति मध्ये केही कागजाहरू मेरो पहलमा राष्ट्रिय अभिलेखालयमा अभिलेखीकरण गराएको छु । बाँकी दस्तावेजहरू पनि

अभिलेख राख्न जरुरी छ । नमूनाको रूपमा गीता गुरुङ खेवासँग भएको खेवा लिम्बूसँग सम्बन्धित बि.स. १८५१ सालको लालमोहर समावेश गरिएको छ ।

हरिराज खेवाका पूर्खाहरूले सुवाङ्गी प्रथा लागु भएदेखि नै हात्तीखर्कमा अमाल सञ्चालन गरेका थिए । उनका पिता हृदयमान लिम्बू खेवा अन्तिम अमाली सुब्बा थिए । अमालमा परेका फिराद पत्रहरू, फैसलाहरू उनका घरमा अनगिन्ति छन् । नमूनाको रूपमा हरिराज खेवाभन्दा पाँच पुस्तामाथि अर्थात् निजका जिज्यू बराजुको अमालमा परेको फिराद पत्रको छायाँकपि राखी गरिएको छ ।

यो फिराद पत्रमा हात्तीखर्क ओखे बस्ने नवलसिंह भोटे, गंगा भोटेनी, तिर्था भोटेनी र बाटुली भोटेनीले ऐ बस्ने पुर्ने भोटेलाई तापके लाठीले कुटपिट गरेको हुँदा हरिराज खेवाभन्दा पाँच पुस्तामाथिका पूर्खा अमाली सुब्बा ज्ञानबहादुर लिम्बूको अमाल कचहरीमा चढाएको फिराद पत्र हो । यस्ता ऐतिहासिक तथा पुरातात्विक कागजातहरूले नेपालको इतिहास जान्न, बुझ्न अनुसन्धान कर्ताको लागि प्राथमिक स्रोत हुन्छन् र ति सामग्री सुरक्षित राख्न सल्लाह दिन चाहन्छु ।

स्व. हरिराज खेवा प्रतिष्ठानले स्मारिका प्रकाशन गर्न लागेको रहेछ । प्रतिष्ठानले दीर्घकालीन गुरुयोजना तयार गरी क्रमशः लागू गर्दै निम्न कार्य गरी प्रतिष्ठानलाइ सधै क्रियाशिल, चलायमान बनाउनु पर्दछ ।

(१) हरिराज खेवा स्मृति पार्क निर्माण गरी शालिक निर्माण गर्ने । सम्भव भए दुर्घटना भएको स्थलमा, प्रतिष्ठानले आफ्नै भवन निर्माण गर्ने ।
(२) स्व. हरिराज खेवाले अङ्गालेको राजनैतिक, आर्थिक, सामाजिक क्षेत्रको प्रत्येक वर्ष विचार गोष्ठी आयोजना गर्ने ।
(३) निजको धर्मपत्नी वा घर परिवारमा भएको ऐतिहासिक कागजातहरू प्रतिष्ठानमा प्रदर्शन गर्ने ।
(४) वार्षिक खेलकुद (फुटबल, भलिबल आदि) आयोजना गर्ने ।
(५) हरेक वर्ष कवि गोष्ठी गर्ने ।
(६) हाजिरी जवाफ प्रतियोगिता गर्ने ।

अन्त्यमा अल्पायुमै स्वर्गारोहण भएका खेवाप्रति भावपूर्ण श्रद्धाञ्जली प्रकट गर्दै मृतात्माले चीर शान्ति पाओस् र शोकाकुल परिवारजनप्रति समवेदना प्रकट गर्दछु ।

(**लेखकः पूर्व प्रमुख जिल्ला अधिकारी हुनुहुन्छ**)

**सन्दर्भ सामग्री**


१. नेपालको सैनिक इतिहास २०२९

२. *शिवकुमार श्रेष्ठ* – लिम्बूवानको ऐतिहासिक अध्ययन, २०४२

३. *डा. नारायण प्रसाद संग्रौला* – पल्लो किरातको किपट व्यवस्था, २०४७

४. *भगीराज इङनाम* – लिम्बू जातिको इतिहास, २०७५

५. गीता गुरुङ खेवा र भीमबहादुर खेवासँग भएका सक्कल लालमोहर, फिराद पत्र ।

# अजङ्गका सभासद् हरिराज खेवा

**गणेश राई**

कालसँग चिच्च्याएर गुनासो गर्न मन लाग्छ, 'मान्छेहरूले चुनेर अजङ्गको मान्छे बनाएको मान्छे त्यति चाँडै नचुँडाएको भएहुन्थ्यो, काल महाराज ।' तर गइसकेको ज्यान फर्काउन नसकिने । र, हामीले चिच्च्याएको कालले कहिल्यै नसुन्ने भएपछि मनको थकथकीमात्रै बाँकी छ । उनै हरिराज खेवाको सम्झनामात्रै बाँकी छ ।

हरिराज खेवासित आधा सङ्योग छ मसँग । वहाँ २०६४ सालमा नेकपा माओवादीको तर्फबाट संविधानसभाको निर्वाचनमा धनकुटा क्षेत्र नं २ बाट शानदार मतसहित निर्वाचित हुनुभयो । त्यही पहिलो संविधानसभाको समानुपातिक सूचीमा नेकपा माओवादीको तर्फबाट मेरो पनि नाम परेको थियो । तर म पत्रकारितामै रमाउन चाहें । त्यसैले पार्टीको पहिलो सूची प्रकाशन भएको केही दिनभित्रै मैले मेरो नाम निवेदन दिएर झिकें । म त्यतिखेर पनि कान्तिपुर राष्ट्रिय दैनिकमा कार्यरत थिएँ र अहिले पनि यहीँ छु । म लोकतान्त्रिक गणतन्त्रमा विश्वास गर्छु । तर, पनि संविधानसभाको समानुपातिक सूचीबाट नाम झिक्नुको कारण केही थिए ।

पहिलो, जनयुद्धमा मेरो समर्थन भएर पनि प्रत्यक्ष संलग्नता थिएन । जनयुद्धमा होमिएका केही नेतालाई मैले पत्रकारिताको माध्यमबाट सहयोग पुऱ्याएको थिएँ । त्यसैले मेरो नाम समानुपातिक सूचीमा परेको थियो । दोस्रो, मैले पार्टीको कुनै सदस्यता लिएको थिइनँ । मलाई लाग्छ कि सिस्टमबाट पार्टी चल्नुपर्छ । मैले भन्दा

हजारौं गुना खरा योद्धाहरू छन् । यदि मैले मौका छोप्ने हो भने ज्यानको आहुति दिने सहिदहरूको अपमान हुनेछ । तेस्रो, म राजनीति गर्न नजान्ने मान्छे परें । लप्पनछप्पन गर्न नसक्ने मान्छे । राजनीतिको लागि साम, दाम, दण्ड, भेद गर्न सक्ने हुनुपर्छ । मसँग दाम छैन । दाम नभएपछि दण्डभेद गर्न आँट पलाउँदैन ।

चौथो, मेरो रुचि पत्रकारिता हो । अध्ययन, अनुसन्धान, लेखन कार्यमा लाग्नु हो । २०५० सालदेखि मातृभाषा, साहित्य, संस्कृति, परम्पराको संरक्षण अभियानमा प्रत्यक्ष होमिएको छु । मेरो जस्तो रुचि र समर्पण अबको पुस्तामा नहुन सक्छ । पैसा नकमाएर दुःख पाइएला तर नाम छ अमर रहन्छ । मातृभाषा बाँच्न सक्छ । समाजको स्तर माथि बढ्छ । म राजनीतितर्फ ढल्किएँ भने फेरि पत्रकारितामा फर्किन मुस्किल पर्नेछ । त्यसैले पत्रकारितामै रमाउन चाहेको प्रष्टिकरणसहित पहिलो संविधानसभा २०६४ को निर्वाचनमा मतदानमात्र गरें । कुनै पार्टी विशेष रहिनँ ।

पार्टीको नीतिअनुसार पत्रकारहरूको तर्फबाट समानुपातिक सूचीमा राखिएकामध्ये म पनि थिएँ । मैले नाम नझिकेको भए संविधानसभाको सदस्य बन्ने थिएँहुँला र सभासद हरिराज खेवासित पार्टीको ह्वीप मान्ने कित्तामा पर्थ्यौं होला । आदिवासी जनजाति सभासद्को ककसमा हाम्रो दह्रो जोडी जम्थ्यो होला । तर वहाँको पार्टीले मलाई समानुपातिक सूचीमा राखेको कुरा सायदै थाहा पाउनुभयो ।

जनमानसमा हरिराज खेवा साँच्चै एक अब्बल सभासद् थिए । धनकुटाका एक अब्बल चितुवा जसले कुनै बेला आफूलाई एक बाघको संज्ञा दिलाउन सफल पूर्वप्रधानमन्त्री सूर्यबहादुर थापालाई जनमतमा हराएर विजयी हुनभएको थियो । वहाँ सभासद् बन्नु भएपछि काठमाडौंको केही कार्यक्रमहरूमा अतिथिका रूपमा भेट भएको थियो । जनमानसले त्यसरी नै परिभाषित गर्थ्यो कि हरिराज त लोकप्रिय र खरो सभासद् हुन् । यद्यपि वहाँको स्वभाव सरल थियो । हँसिलो, मिजासिलो, कुनै कुरो सोधेपछि केही क्षण सोचेरमात्रै जवाफ दिनुहुन्थ्यो । पछि अर्थराज्यमन्त्री बन्नुभयो । आफ्नो सरलता उस्तै रह्यो । जनताले चाहेकाले, पार्टी मनपराएकाले

हरिराज खेवाले त्यो मत पाएका थिए ।

हामीले सम्झिने राजनीतिज्ञ हुन्, हरिराज । लिम्बूवानका एक नक्षत्र तर उनको कुलश राजनीतिक नेतृत्वलाई नियाल्ने अवसरै पाएनौं । सङ्घीय नेपाल प्रदेश नं. १ को मेहनेती, परिश्रमी सामाजिक कार्यकर्ता थिए । राजनीतिसित जोडिएर व्यक्तित्व निर्माण गरे । यदि उनी बाँचेका भए वर्तमान दुई तिहाईको सरकारको 'समृद्ध नेपाल, सुखी नेपाली' नारालाई प्रवर्द्धनमा जुझारु ढङ्गले जुटिरहन्थे होलान् । हामीले माग्दै आएको लिम्बूवान, खम्बुवान, किरात प्रदेश निर्माणमा समन्वयात्मक भूमिका निर्माण गर्थे होलान् । यद्यपि हरिराज खेवाको शालिन तर जुझारु व्यक्तित्वको छाप प्रदेश नं.१ म सधैँ अमर रहनेछ । इतिहासको पानादेखि राजनीतिक समाज वृत्तमा एउटा नमुना व्यक्तित्वका रूपमा सम्झिरहिनेछ ।


(**राई, कान्तिपुर दैनिकसँग आवद्ध छन् ।**)

**२०७६ वैशाख २८ गते**

raiganesh@gmail.com

# हरिराज खेवा नबोली नै विदा भए

## उनले पत्रकारिता पनि गरे

**ठाकुर बराल**

समय ठ्याक्कै चाहिं थाहा छैन, कहिलेदेखि हरिराजजीसँग भेटघाट भयो । तर जबदेखि भेट भयो त्यही समयदेखि उनीसँग निकटता र सौहार्द्रता नै रह्यो । निम्न माध्यमिक तहमा उनी धनकुटाको गोकुण्डेश्वर माध्यमिक विद्यालयमा पढ्दै गर्दा नै सायद भेट भएको हुनुपर्छ । धनकुटा बजारमा बस्दा उनको सङ्गत गिरीश पोखरेल, राजेन्द्र राईजस्ता कक्षा साथीसँग थियो । मैले त्यतिवेला भर्खरै विवाह गिरीशकी दिदी व्यञ्जनासँग गरेकोले गिरीश उनको साथी भएकाले पनि सायद म निकट भएँ हुँला ।

जनमत सङ्ग्रहको खुल्ला वातावरणले गर्दा निर्दलीय व्यवस्था विरोधी प्रशिक्षण पाए पनि उनको राजनीतिमा भन्दा नाटक लेखन र त्यसलाई मञ्चमा प्रदर्शन गर्नेतर्फ चाख वढी देखिएको थियो । राजकुमार राई, उपेन्द्र दुःखीजस्ता रङ्गकर्मीको साथ पाएर उनी रङ्गमञ्चतर्फ देखिन थाले । हरिले कैयौं नाटक आफैं लेखेर मञ्चन समेत गराए । उनको 'पचास रूपैयाको नोट' निक्कै राम्रो नाटक हो । म पनि नाटक लेखनमा त्यतिवेला सक्रिय थिएँ । मलाई नाटक मन पर्थ्यो । सायद ज्योति खवास, राजकुमार राई तथा हरिजीहरू त्यतिवेला नाटक मञ्चनका काममा लागि परेका थिए । उनले वि सं २०५३-५४मा नाट्य महोत्सवमा प्रशंसा पत्र पनि पाएका थिए । यिनले रेडियो नाटक प्रतियोगितामा वि सं २०५५मा देशव्यापी प्रतियोगितामा प्रथम पुरस्कार पनि पाए । उनको कलाकारिता, साहित्य र समाज सेवामा रुची थियो ।

उनको ‘अपदस्त जिन्दगी’ निक्कै राम्रो नाटक हो र उनको एउटा एकाङ्की सङ्ग्रह प्रकाशित छ भने, केही कथा, लघुकथा र गजलहरू पनि प्रकाशित भएका छन् । उनले केही समय पत्रकारिता समेत गरे । पत्रकारिता गर्दा उनीसँग मेरो विशेष निकटता हुन थाल्यो कैयौं पटक हामी समूहमा नै बसेर समाचारहरू तयार गरि पठाउँदथ्यौं । धनकुटा बहुमुखी क्याम्पसबाट स्नातक तहसम्मको शिक्षा प्राप्त गरे पछि उनी आफ्नै गाउँको विद्यालयमा ५ वर्षसम्म शिक्षकका रूपमा नियुक्ति लिई शिक्षण पेशामा लागे पनि हाम्रो नियमित जसो भेटघाट भइरहन्थ्यो ।

बहुदलीय व्यवस्थाको सूत्रपातसँगै एक्कासी उनलाई नेपाल कम्युनिष्ट पार्टी (एमाले)ले हात्तीखर्क गाविसको गाविस अध्यक्षको टिकट दियो । उनी हात्तीखर्क गाविसको निर्वाचनमा निर्वाचित भए तर एमालेको विभाजनपछि उनी नेकपा(माले) तर्फ देखा परे । म नेकपा एमालेको गतिविधिसँग असन्तुष्ट उनी पनि नेकपा माले तर्फ विभाजित भएपछि हामी राजनीतिक रूपमा पनि निकट भयौं । नेकपा (माले)ले निर्वाचनहरूमा राम्रो परिणाम लिन सकेन । मुलुकमा माओवादी द्वन्द्व शुरु भएपछि त्यस मौकाको फाइदा उठाउँदै केही प्रहरीहरूले यिनलाई पूर्व रीसइवीका कारण माओवादी हो भन्दै धरपकड गर्ने योजना बनाएको सुइँको पाए पछि यिनी भूमिगत भई माओवादी पार्टीमा साच्चै नै कार्यरत रही काठमाण्डौंतिर लागे ।

मुलुक शान्ति स्थापना भएपछि नेकपा (माओवादी) लाई उपयुक्त उम्मेद्वारको खाँचो महशुस भयो । जातीय सन्तुलन कायम राख्न पनि धनकुटाको २ नं क्षेत्रमा जनजाति उमेदवार दिनु पर्ने हुन पुग्यो र खेवाले संविधान सभासदको उमेद्वारी बन्न पऱ्यो । तत्कालीन माहौलको कारण पनि हरिराज खेवाले पहिलो संविधानसभाको सदस्यको निर्वाचन जित्न सफल भए । यसरी साधारण शिक्षक र गाविस अध्यक्षको पदबाट पटकपटक प्रधानमन्त्री बनिसकेका सूर्यबहादुर थापालाई पछार्दै सभासद भएपछि उनको कद आकासियो । उनी हिंसा तथा मारपिटको कुरामा सहमत थिएनन् । वालानन्द भूर्तेल तथा टीकाप्रसाद घिमिरेलाई कालो मोसो दल्ने काम उनले ठीक ठानेका थिएनन् । भीरगाउँका दिपक दाहालको हत्या भएकोमा पनि उनले मसँग विमति र असन्तुष्टि जाहेर गरेका थिए ।

उनी अर्थराज्यमन्त्री हुँदा पनि मेरो कुनै व्यक्तिगत लालशा नभएकोले होला सधैँ नै राम्रै सम्बन्ध रह्यो तर दोस्रो निर्वाचनमा भने उनको पराजय भयो र उनी नेकपा माओवादीको केन्द्रीय सदस्य, जिल्ला इन्चार्ज भएर धनकुटामा खटिएर गाउँतिर हिँड्न थाले । यही गाउँतर्फ हिंड्ने क्रममा नै चित्रेबाट धनकुटातर्फ आउँदा उनको सिधुवानजिकै बस दूर्घटनाका कारण निधन हुन पुग्यो । यसरी वायु गतिमा राजनीतिक उत्थान गर्न सफल देखिएका खेवाको वायु गतिमा नै राजनीतिक मात्र नभई शारीरिक अवसान पनि भयो । धनकुटाको राजनीतिमा जनजाातिको तर्फबाट सूर्यबहादुरलाई परास्त गर्दै उनकै क्षेत्रका राज्यमन्त्री बन्न सफल खेवाले केही काम गर्न बजेट तयार गर्दा गर्दै बजेट पारित गर्न सफल भए पनि खासै फलदायी काम भने गर्न पाएनन् । मिलनसार प्रवृत्तिका खेवा धनकुटाका लागि एक महत्वपूर्ण व्यक्तिका रूपमा उदय भई तुरुन्त अस्ताए ।

राजनीतिक रूपमा खासै भिन्न मत नभए पनि हरिजी र मेरो रायमा फरकपन आएको थियो । क्याम्पसको विषयमा उनले आफ्नो कार्यकर्ता बचाउनु पर्छ भनी दवाव दिएकोले मैले उनको निर्देशन मानिनँ त्यही विषयलाई लिएर हरिजी सँग मेरो उनको देहावसान हुनु केही दिन अघिदेखि बोलचाल बन्द भएको थियो । दुर्घटना हुनु एकदिन अघि उनी र मेरोबीच गोकुण्डेश्वर स्कूल अगाडि भेट त भयो उनी मतिर हेर्दै तल तिर लागे । म उनलाई हेर्दै आफ्नो घरतर्फ लागें । त्यही भेट नै हाम्रो अन्तिम भेट भयो । भोलिपल्ट उनलाई सधैँ नबोल्ने गरी सुनसान रूपमा चुवाको बोटमा मैले अन्तिम भेट गरेपछि अन्तिम विदाइका लागि मूलघाटसम्म पनि पुगेँ । उनी आफ्ना कुरा प्रष्ट राख्थे म पनि प्रष्ट राख्ने भएकाले एक अर्कोले हामीलाई मन पराउँथ्यौं । हामीबीच न प्रतिस्पर्धा थियो न दुश्मनी । अरूका कुरामा मात्र हाम्रो मतभेद थियो । अल विदा हरिजी ।

# हात्तिखर्केको माटोले जन्माएको होनाहार सपूत

**गोपाल रानामगर**

वि.स २०७३ (साउन १३) हात्तिखर्कबासीको लागि कालो दिन सावित भयो । हात्तिखर्कबासी मात्र हैन धनकुटा जिल्लाबासी अनि समग्र देशबासीको लागि एउटा दु:खद दिन रह्यो । उक्त दिन पूर्व अर्थराज्यमन्त्री हरिराज खेवा आफ्ना समर्थक र शुभचिन्तकहरू सँगको भेटघाट पश्चात फर्किने क्रममा बस दुर्घटनामा परी असामयिक निधन हुनपुग्यो ।

आजकाल सामाजिक सञ्जाल फेसबुकले सञ्चार माध्यमलाई यति दृत बनाई दिएको छ कि हरेक राम्रा, नराम्रा, घटना, दुर्घटनाहरू छिनभर मै देशविदेशसम्म पुऱ्याइदिन्छ। उक्तदिन बेलुका पख नाईट डिउटी जाने तर्खरमा थिएँ त्यहिबेला गाडी कुर्नुपर्ने खाली समयलाई सदुपयोग गर्दै फेसबुक लगअन गरे अलिकति मात्र भित्र के पसेको थिएँ मनै झसङ्ग बनाइदियो । शुरुमा त विश्वास पनि लागेन विश्वास गर्न मनले पटक्कै मानिरहेको थिएन । मनमा अझ धेरै कौतुहल जाग्यो र मनलाई भारी बनाउदै यो फेसबुके समाचार गलत साबित होस् है भन्दै हतार हतार गाउघरका आफन्तहरूलाई फोन लगाएँ तर सत्य त्यहि थियो । हरिराज खेवाको बसमा दुर्घटनामा परी निधन भएको कुरा सत्य रहेछ । यसरी हात्तिखर्केली माटोले जन्माएको एउटा होनहार सपुत, हात्तिखर्कको मात्र हैन धनकुटा जिल्ला अनि सिङ्गो राष्ट्रले एक राष्ट्रप्रेमी, देशभक्त होनाहार र ईमान्दार युवा नेता सदा सदाको लागि गुमाउनु पुग्यौं ।

आजको दिनमा हामीमाझ वहाँ भौतिक रूपमा हुनुहुन्न तर पनि वहाँले गर्नु भएका योगदानहरू हामीमाझ उदाहरणीय बनेर बसिरहने छ । वहाँले बोल्नु भएका केहि शब्दहरू अझै पनि मेरा कानमा गुन्जिरहेका छन् ।

कुरा २०५८ सालको हो । जुनबेला वहाँ गाविस अध्यक्ष हुनुहुन्यो र वहाँकै विषेश पहलमा हाम्रो गाविसमा ग्रामिण विद्युतिकरण कार्यक्रममार्फत हाउस वाईरीङ सम्बन्धि तालिम सञ्चालन गरिएको थियो । उक्त तालिममा प्रत्येक वडाबाट तीन-तीनजना गरी २७ जनाको सहभागिता रहेको थियो । सोही कार्यक्रमको उद्घाटन समारोहमा गाविस अध्यक्षको हैसियतले मन्तव्य दिने क्रममा वहाँले भन्नु भएको थियो -'हामी यो ठाउँमा पाच वर्षको लागि चुनिएर आउछौ र पाच वर्ष काम गरेर जान्छौ र यो ठाउमा तपाईहरू जो पनि आउनसक्नु हुन्छ भोलिको दिनमा । यसरी यो ठाउमा आएर पद मात्र ओगटेर बस्ने हैन त्यो पाच वर्षको अवधिमा हामीले यस्ता यस्ता कामहरू गरेर जानुपर्छ जुन आउने पिँढीले याद गरोस् ।'

पक्कै पनि आज हामीमाझ वहाँको भौतिक शरीर छैन तर वहाँले समाज र राष्ट्रलाई दिनु भएको योगदानको स्मरण गरिरहेका छौ र गरिरहने छौ ।

वहाँले राजनिती यात्रामा विविध वाधा अढ्चन, कठिनाइहरूको बाजबुद पनि दिन दोगुना, रात चौगुना छलाङ मार्नु भएको थियो भन्दा फरक पर्दैन । जुनबेला हात्तिखर्कको गाविस अध्यक्ष रहनुभएको थियो भने भित्री रूपमा माओवादी विचारसँग सरिक भैं सक्नुभएको थियो । उक्त हाउस वाइरिङको प्रशिक्षण समय (रेष्टटाईम)मा वहाँ बेला-बेला आउने गर्नु हुन्यो र भलाकुसारीहरू चल्दथ्यो यसै क्रममा एक दिन वहाँले केही युवा साथीहरूबिच गफगाफको क्रममा, पूर्व रक्षामन्त्री र हालका गृहमन्त्री रामबहादुर थापा 'बादल' जुनबेला वहाँ पूर्वको इन्चार्ज भएको बेला वहाँलाई भेटन गाउँमा जानु भएको र उक्तभेटमा करिब तीन घण्टाभन्दा माथि दुइजना बिच लगातार बहस चलेको कुरा खुब रोचक शैलीमा सुनाउनु भएको थियो र हामीले पनि खुब रोचक मानेर सुनेका थियौ । त्यस पछाडिका दिनहरूमा वहाँ बिस्तारै सेना र प्रहरीको खोजीको सुचिमा पर्नुभयो । वहाँ पनि बिस्तारै एक प्रकारले भूमिगत नै हुनु भयो ।

जब माओवादी शान्ति प्रक्रियामा आयो तब वहाँले धनकुटा क्षेत्र न. २ बाट प्रत्यक्ष चुनाव लड्नु भयो । ऐतिहासिक जित पनि हासिल गर्नु भयो त्यो जित सामान्य जित थिएन किनकी उक्तक्षेत्रमा सूर्यबहादुर थापा जस्ता पटक-पटक प्रधानमन्त्री

भइसकेका, देशकै राजनीतिक क्षेत्रको बुढोबाघको रूपमा कहलिएका राजनिज्ञलाई हराउनु आफैमा चानचुने कुरा थिएन । तर वहाँले त्यस्ता व्यक्तिलाई सजिलै गरी राजनीतिक मैदानमा पछारिदिनु भयो । र, पछि अर्थराज्यमन्त्री जस्तो पदमा बसी देश र जनको हितमा काम गर्नुभयो ।

हुन त धनकुटा जिल्लाको बिगत हेर्ने हो भने धनकुटा जिल्ला घर भई केन्द्र हल्लाउनेहरू पूर्वप्रधानमन्त्रीहरू नगेन्द्र रिजाल, टङ्कप्रसाद आचार्य र सूर्यबहादुर थापाजस्ता व्यक्तित्वहरू जन्माउने थलो हो धनकुटा । इतिहासमा धनकुटा जिल्ला घर भई केन्द्र वा समग्र राष्ट्र हाँक्ने नेताहरू भए पनि तत्कालिन अवस्था धनकुटा जिल्लाबाट केन्द्रको नेतृत्व तहमा बसेर केन्द्र हाँक्न सक्ने नेताको अभाव खड् किरहेको अवस्थामा वहाँको राजनीति छलाङ हेर्ने हो भने भोलिको दिनहरूमा केन्द्र हलाउने त्यो तहसम्म पुग्नसक्ने प्रवल सम्भावना वहाँमा थियो ।

वहाँ एक कुशल युवा नेता मात्र होइन, साहित्यकार पनि हुनुहुन्यो । २०५५ को राष्ट्रव्यापि रेडियो नाटक प्रतियोगितामा प्रथम भई गोल्डमेडल पाउनुका साथै अन्य कृतिहरूको उत्कृष्ट रचनाहरू प्रकाशनले साहित्य क्षेत्रमा पनि वहाँ उत्तिकै सबल व्यक्तित्व हुनुहुन्थ्यो भन्ने कुरा प्रष्ट हुन्छ । यस्ता एक कर्मठ, ईमान्दार, सक्षम युवा नेता हामीले गुमाउन पर्‍यौ । मेरो यो मानसपटलमा बेला-बेला उब्जिरहने सवालहरूः किन वहाँ त्यसरी यात्रामा जानु पर्दथ्यो ? त्यसै दिन त्यहि बस दुर्घटना हुनुपर्ने ? दुर्घटना त्यसभन्दा अगाडि या पछाडि नभई त्यसैदिन अनि त्यहि गाडी दुर्घटना हुनुपर्ने ?

सायद भगवानलाई पनि राम्रै मान्छे चाहिएको थियो होला र त त्यसरी उक्तदिन अकल्पनिया दुर्घटना हुनपुग्यो । खैर ! आज वहाँ हामीबिच हुनुहुन्न तर वहाँको योगदान हामीले भुल्नुहुन्न । अझ नयाँ पिढीहरूले विषेशगरी राजनीति र समाज सेवामा लाग्न चाहने युवाहरूले वहाँको जीवनीबाट धेरै प्रेरणा लिनु जरुरी छ । अन्तमा वहाँप्रति श्रदासुमन अर्पण गर्दछु ।'

gopalranamagar625@gmail.com

# सम्झनामा हरिराज खेवा दाइ

**प्रेम खजुम**

हरिराज खेवाको स्मृतिग्रन्थ प्रकाशन गर्ने कार्य ज्यादै महत्वपूर्ण भएको ठानेको छु । स्मृतिग्रन्थमा लेख लेख्न सम्बन्धित निकाय विश्वासदीप तिगेलामार्फत म्यासेन्जरमा (डिसेम्बर १०, २०१८) म्यासेज पाउँदा अन्तरआत्मादेखि नै हर्षविभोर छु । समाजमा कुनैपनि होनहार व्यक्तिको उजागर गराउनु भनेको भावी सन्ततिका लागि उदाहरणीय सामग्री प्रकाशन गरिदिनु, आगामी पुस्ताको विकास गर्न उत्प्रेरणा जगाउनु हो ।

इतिहासमा त्यस्ता वीर वीरङ्गना कमै मात्रमा जन्मन्छन् जसले आफ्नो जीवन व्यक्तिगत स्वार्थका लागि नभइ देश र जनाताको मुक्तिका खातिर जिउने प्रण गरेको हुन्छ । आफ्नो जीवनभन्दा पनि जनताको हितमा काम गर्नुलाई प्रमुख दायित्व ठान्दै जनताको दुश्मनसँग निरन्तर लडिरहने र आवश्यक परे जीवन बलिदान गर्न तयार हुन्छन् । तिनै मध्ये हरिराज खेवा पनि एउटा स्थान ओगट्न सफल हुनुभएको छ ।

खेवाले जहिले पनि आफ्नो ज्यानलाई हत्केलामा राखेर हिडे । जतिसुकै दुःखकष्ट भए पनि जनताको काम गर्न पाउँदा कहिले दुःखानुभूति गर्नुहुन्थेन । जनताको काम गर्नु समाजसेवा हो, हामी क्रान्तीकारीहरूको दायित्व हो । कर्तव्य पुरा गर्न कहिल्यै पछि हट्नु हुन्न । सबैभन्दा चेतनशील प्राणी मान्छे नै हो, ती मध्ये पनि प्रगतिशिल क्रान्तिकारीहरू हुन् । हामीले सधैं प्रगतिको बाटो रोज्नुपर्छ । मुक्ति र अधिकार मागेर पाइँदैन, लडेर लिनुपर्दछ भनेर भन्नुहुन्थ्यो । निराश हुन र हार्नै जानेनन् ती महान व्यक्ति एउटा अझै इतिहास हो । ती महान व्यक्तिको जन्म धनकुटा जिल्लाको छथर हात्तिखर्क गाविस वडा नं ६ मा आमा तीर्थमाया खापुङ

बुवा सुब्बा हृदयमान सुब्बाको माइला सुपुत्र हुनुहुन्छ । वहाँको जन्म ८ नोभेम्बर १९६८ मा भएको हो । पल्लो किरात लिम्बुवानका किपटिया हात्तिखर्कका सुब्बा हृदयमानका माइला सुपुत्र हरिराज खेवाका श्रीमती गीता गुरुङ खेवा दुई छोरी गुराँस र लाराक खेवा छन् ।

मानिसभित्र रहेको अभिनयको तिर्खा मेट्न साधना गर्ने माध्यम हो नाटक । नाटक बेच्नका लागि नभएर अभिनयको तिर्खा मेट्न र समाजका घटनासँग प्रत्यक्ष संवाद गर्न बनाइएको हुन्छ । यो विशुद्ध आनन्द प्राप्तिको लागि तयार गरिन्छ, जसले समाजलाई प्रत्यक्ष प्रभाव पार्दछ। यसरी मोदनाथ प्रश्रितले लेखेको 'पचास रूपैयाँको तमसुक' नाटक विजय परदेशीको निर्देशनमा तेह्रथुमको बसन्तपुरमा प्रदर्शन गर्दा सानो भूमिका खेवाले पनि निर्वाह गर्नुभएको थियो २०४८ सालतिर । त्यसपछि उनको नाटकप्रति यति धेरै लगाव बसेछ कि एकाङ्की नाटक संग्रह 'अपदस्त जिन्दगी' प्रकाशन गर्नुभयो । मञ्च र रेडियो नाटकमा कतिसम्म छाउनुभयो भने राष्ट्रियव्यापी रेडियो नाटक महोत्सव २०५५ मा स्वर्णपदक जित्नुभयो । पुर्वाञ्चलमा नाट्य क्षेत्रको पर्यायवाचीको रूपमा स्थापित भइसक्नुभइको थियो ।

वहाँ पारिवारिक दायित्व र मायामोह त्यागेर अन्याय, अत्याचार र शोषणका विरुद्धमा लडेर जीवन विताउने लक्ष्य साथ अघि बढेका राजनीतिक चेतनायुक्त व्यक्तित्व हुनुहुन्थ्यो । शिक्षण पेशा अन्तर्गत हरिराज खेवाले हेडमास्टर भएर श्री जनकल्याण प्राथमिक विद्यालयमा वि.सं २०५० देखि २०५४ सम्म गर्नु भयो । उनी शिक्षा पेशा छाडेर वि.सं २०५४ सालको स्थानीय निर्वाचनमा एमालेबाट हात्तीखर्क गाविस अध्यक्ष पदको प्रत्यासी बनी सक्रिय राजनीतिमा होमिए । पञ्चायतकालमा प्रधानपञ्च र प्रजातन्त्र लगत्तैको स्थानीय निर्वाचनमा राष्ट्रिय प्रजातन्त्र पार्टीबाट गाविस अध्यक्षमा निर्वाचित आफ्नै काकाको छोरा दाजु लोकेन्द्र तिगेलालाई उनले हराए । २९ वर्षको उमेरमा खेवा एमालेबाट विजयी भएलगत्तै विकासप्रेमी जनप्रतिनिधिको रूपमा उनी उदाए । महाकाली सन्धीको विरोधमा उत्रिए र माले भए । कार्यकाल बाँकी छँदै धनकुटाबाट एकाएक अलाप भए । पछि बुझिए अनुसार सुरुमा लिम्बुवान मुक्ति मोर्चाका अध्यक्ष भक्तराज कन्दङ्वासँग नजिकिए । यसरी भित्रभित्रै माओवादीको सम्पर्कमा पुगिसकेका रहेछन् । शान्ति

प्रक्रियापछि गृहजिल्ला फर्के । धनकुटा जिल्लाको तत्कालिन माओवादी पार्टीको स्थापना गर्ने पहिलो व्यक्ति भनेर चिनिनु हुने पहिलो पात्र वहाँ नै हुनुहुन्छ । वहाँको त्याग, तपस्या, र बलिदानीलाई भुल्नु हुँदैन । हामी एउटा परिवर्तनको मिसनमै छौ यो मिसनलाई पुरा गर्नु र आन्दोलनप्रति इमान्दार रहनु हरिराज खेवाप्रतिको सही सम्मान हुनेछ ।

वहाँ निर्वाचन लडेको ठाँउ धनकुटाक्षेत्र नं २ पूर्व प्रधानमन्त्री सूर्यबहादुर थापाको किल्ला हो । पूर्व प्रधानमन्त्री सूर्य बहादुर थापालाई पराजित गरी त्यहाँबाट २०६४ को पहिलो संविधानसभा निर्वाचन जित्नुभयो । सबैभन्दा कम उमेरमा संवैधानिक समितिमा सदस्य हुनुभयो । वहाँले मन्त्री माननीय अर्थ राज्यमन्त्री (अर्थमन्त्री वर्षमान पुन, सन् २०१२) सम्मको कार्यभार बहन गर्न भ्याउनुभयो । पछिल्लो समय माओवादी केन्द्रको केन्द्रीय तहमै हुनुहुन्थ्यो । पार्टी केन्द्रिय सदस्य नेकपा (माओवादी एकता केन्द्र) सन् २०१६, अध्यक्ष नेकपा (माओवादी केन्द्र) धनकुटा जिल्ला समिति । महासचिव, लिम्बूवान राष्ट्रिय मुक्ति मोर्चा केन्द्रिय समिति सन् २०१६, अध्यक्ष भक्तराज कन्दङ्वा स्मृति प्रतिष्ठान । राजनीति सुरु गरेको छोटो समयमै गाविस अध्यक्ष हुनु, संविधानसभा सदस्य जित्नु, अर्थ राज्यमन्त्रीसम्म पुगेका खेवाले जिन्दगीको गन्तब्य पनि चाँडै भेट्नुभयो । बहाल हुँदै यो यात्राको वेग पनि अल्पायुमै समाप्त भयो ।

गरिब दु:खीलाई शोषक सामन्तले गरेको अन्याय, अत्याचार, शोषण तथा धनी र गरिब बीचको असमानताबारे रमाइला कथा सुनाउनुहुन्थ्यो । कहिले चिनिया रुसी क्रान्तिको इतिहास, चेग्वेभाराको जीवनी तथा कहिले वाम राजनीतिका क्रान्तिकारी वीरगाथा सुनाउनुहुन्थ्यो । हामी आफै गरिब भएका होइनौ, बनाइएका हौ । हामी आफ्नै भाग्यले गरिब भएका हौ भनी शोषक सामन्तले भ्रुक्याएका छन् । यसरी भाग्यको पछि लागेमा हामी पनि पछि पर्छौ ।

माओको नेतृत्वमा चीनमा भएको जनवादी क्रान्तिको सफलता र त्यसपछि समाजवादी व्यवस्थामा भएको उन्नतिको वैभाव नेपालका शोषित उत्पीडित जनतामा स्वभाविक रूपमा परेको थियो । माओद्वारा गरिएको वर्गविश्लेषण र श्रमजीवी जनताको सत्ता हासिल गर्ने रणनीति र कार्यनीतिसम्बन्धि उक्तिहरूका

शिक्षाको गहिरो प्रभाव हरिराज खेवा मा मैले पाएँ । समग्रमा भन्नुपर्दा वहाँले विद्यार्थी जीवनदेखि कम्युनिष्ट पार्टीमा लागेर आजीवन कम्युनिष्ट पार्टीमा सक्रिय भूमिका निभाउनु भएको थियो । श्रमजीवि जनताको सत्ता कायम गर्ने सम्बन्धमा वहाँको प्रतिवद्धता र लगनशिलताले भावी पिँढीका प्रगतिशिल कार्यकर्तालाई प्रेरणा दिइरहनेछ भन्ने मलाई लाग्छ । वहाँका क्रियाकलाप श्रमजीवि जनताको मनमस्तिष्कमा सधैँ रहिरहनेछन् ।

हरिराज खेवाले कहिल्यै पनि कमाउन खोज्नु भएन । भाइ ! जिन्दगी भनेको पैसा कमाउनु मात्र होइन, बरु जनताप्रति समर्पित हुन सक्नु हो भन्नुहुन्थ्यो । वहाँ दुःखमा कहिल्यै रुनुभएन र सुख भयो भनेर कहिल्यै हाँस्नु पनि भएन । वहाँ भन्नु हुन्थ्यो सबैथोक हार्नु तर हिम्मत चाँहि नहार्नु, सबैथोक छाड्नु तर गति चाँहि नछाड्नु र सबैथोक खानु तर हरेश चाँहि नखानु । दाजु हरिराज खेवाबाट हामीले पाएको शिक्षा अनुसार समाज र जनतालाई कहिल्यै दोष दिनुहुँदैन भन्ने हामीलाई लाग्दछ र संसारमा असम्भव भन्ने वस्तु र पार नलाग्ने समस्या केही छैनन् भन्नेमा पनि विश्वास छ । धैर्य गर्न सक्नुपर्छ एकदिन अवश्य नै सफल होइन्छ ।

यस्तै यस्तै वहाँको प्रतिभा, क्षमता, प्रभावकारिता र प्रस्तुतिकरणले पारेको प्रभाव उल्लेखनीय छ । बोल्दा होस् पुऱ्याउनुपर्छ हामी राजनीति गर्नेले वर्गलाई सम्मान गर्न जान्नुपर्छ दुश्मनलाई घृणा र विरोध गर्न जान्नुपर्छ । हाम्रो वर्गमा वरिष्ठ, सर्वमान्य, सन्त, महन्त, लौह शिखर कोही हुँदैन । हामी सबैलाई महानता प्राप्त गर्ने र महान बन्ने पाठ सिकाउँछौ । किनकी हाम्रो लडाइँ भनेको पहिचानका आधारमा राज्यको पुनर्संरचना, स्वशासन र आत्मनिर्णयको अधिकारसहितको लिम्बुवान प्रदेशको प्राप्तिको लागि सङ्घर्ष हो ।

सादा जीवन र उच्च विचारका हरिराज खेवाको जीवनशैली ज्यादै सरल, परिश्रमी, कर्मशील र सधैँ मुस्कुराइरहने प्रकृतिको थियो । एक झुम्रो लाउन र एक पेट खानको मात्रको शोख भएका तर जनता र देशका निम्ति भने भारी चिन्ता र सोच बोकेका खेवाको प्रतिक्रियावादी र सामन्तहरूको थिचोमिचो सहन नसकी वहाँमा विद्रोही भाव पैदा भएको थियो । वहाँका ओजपूर्ण शब्दहरू मनमा राखेर वहाँको सम्झना मात्र गर्न सक्छौ आज हामी । भौतिक रूपमा वहाँलाई गुमाईसकेका छौं ।

उनको अनुपस्थिति मलाई पत्यार लाग्दैन अझैपनि । कहीँ, कतै छन् जस्तो लाग्छ ।

मानिस जन्मन्छ र मर्छ यो सामान्य प्रक्रिया हो । तर एउटा क्रान्तिकारी कम्युनिष्ट मरेर पनि बाँच्दछ । सगरमाथा झै उच्च शिर गरेर वहाँ बाँच्नुभएको छ, हरेक झुपडी र छाप्राहरूमा वहाँ हाँस्नु भएको छ । एउटा अटल आस्था र विश्वास भएर उता गाउँ र बस्तीहरूमा बाँसुरी र गितारको धुन भएर अहिले पनि गुनगुनाइरहनु भएको छ ।

मानव जातिको जन्मपछिको गन्तव्य भनेको मृत्यु हो । मृत्यु त स्वभाविक कुरा हो तर मृत्युको पनि आकार र तौल हुन्छ । यो कुरा निश्चित हो । दुनियाँलाई ठगेर, ढाँटेर, लुटेर, मिचेर तुच्छ र निजी स्वार्थमा मात्र लागि पर्ने मान्छेको मृत्यु प्वाँखभन्दा पनि हलुङ्गो र महत्वहीन हुन्छ भने आफ्नो निजी स्वार्थलाई तिलाञ्जली दिएर देश र जनताको लागि सम्पूर्ण जीवन समर्पण गर्ने व्यक्तिको मृत्यु सगरमाथा जस्तै उच्च, अटल र विशाल हुन्छ । गहन र महान हुन्छ । ती महान व्यक्तिहरू इतिहासको पानामा हुन्छन् । संसारमा थोरै कर्मवीरहरू मात्र मरे पनि युगयुगसम्म बाँचिरहन्छन् । ठीक त्यसरी नै वहाँ पनि जनताको न्यायपूर्ण आन्दोलनमा सदा अजर र अमर हुनुहुनेछ ।

दुःखको कुरा, अल्पायुमै निधन भएकाले वहाँका थुप्रै इच्छा, आकाङ्क्षा र सपना अधुरै रहे । सामन्तवाद, साम्राज्यवाद, दलाल नोकरशाही पुँजीवादका साथै समाजमा विद्यमान विकृति, विसंगतिविरुद्ध सङ्घर्ष गर्ने साहस हुँदा हुँदै पार्टीको निर्देशन अनुसार हिजो नेपाली जनता र क्रान्तिको सेवामा घर छाडेर हिँडेका थिए, आज त्यही काम पुरा गर्ने सिलसिलामा तेह्रथुमबाट फर्किने क्रममा, २८ जुलाई २०१६ सिधुवा धनकुटा बस दुर्घटनाका कारण मृत्युवरण गर्नु पर्‍यो ।

समाजसेवी साहित्यकार नाट्य कलाकार तथा राजनीतिज्ञ पूर्व राज्यमन्त्री स्व. हरिराज खेवाको सिधुवा धनकुटामा बस दुर्घटनामा परि भएको दुःखद निधनले अपुरणिय क्षति भएको छ । पूर्वले एउटा राम्रो कार्यकर्ता, नेता र श्रष्टा गुमाउनुपर्‍यो भन्ने मलाई लागेको छ । अब यो ऐतिहासिक घडीमा यी सबैबाट मुक्त नयाँ नेपाल निर्माण गरी हरिराज खेवाका अधुरा सपनालाई पुरा गर्नु नै हाम्रो प्रमुख दायित्व

हुन्छ । वहाँका निरन्तर अगाडि बढेका पाइलाहरूलाई अन्तिम लक्ष्यमा पुऱ्याउने, वहाँको विचार र आदर्शलाई जीवन्त राख्न वहाँको त्याग, तपस्या र निडरताबाट पाठ सम्पूर्ण क्रान्तिका पक्षधरहरूले सिक्न सक्नुपर्छ । वहाँले पुऱ्यानुभएको योगदानलाई नेपाली कम्युनिष्ट आन्दोलनको भण्डारमा सङ्ग्रह गर्दै तिनको विकास र विस्तारमा लाग्नु जरुरी छ । यसो भएमा मात्र हरिराज खेवा र वहाँका विचारप्रति सच्चा सम्मान भएको ठहर्नेछ, सच्चा श्रद्धाञ्जली हुनेछ ।

राष्ट्रिय स्वधीनता र सामाजिक मुक्तिको लामो र बलिदानीपूर्ण सङ्घर्षमा मृत्युलाई परास्त गर्दै अविराम अगाडि बढिरहने नेपाली कम्युनिष्ट आन्दोलनका मृत्युञ्जयी योद्धालाई पापी कालले टपक्क टिपेर लग्यो भन्ने स्विकार्न मलाई असाध्यै गाह्रो भएको थियो, जब वहाँको बस दुर्घटनाका कारण देहावसानको खबर सुनें । पार्टीको काम विशेषले पुगेर फर्किने बखतको अप्रत्यासित र अपत्यारिलो यो खबरले मलाई असाध्यै मर्माहत तुल्यायो त्यो दुर्घटनाले । हामी धेरै दुःखी भयौ । विधिको विडम्वना भनौ या दैवको खेल ।

अन्त्यमा वहाँले सर्वहारा वर्गको मुक्ति खातिर मृत्युको अवस्थामा नपुग्दासम्म दुःख, कष्ट र अभावका दिनलाई झेल्दै स्वाभिमानका साथ बिताउनुभयो । कैयौ व्यक्तिहरू अवसर र सुविधाका निमित्त दौडधुप गरेर अवसर लिए । तर, वहाँ त्यसबाट टाढै बसेर अभावको जीवन बिताउनु भयो । कसैसँग भिख माग्नु भएन । वहाँको दिवंगत आत्माको चिरशान्तिको कामना गर्दै, तपाई एक हुनुहुन्थ्यो, अनेक हुनुभएको छ, कसैको हुनुहुन्थ्यो, सबैको हुनुभएको छ अब केवल अन्तिम सम्झना, अन्तिम सलाम अनि भावपूर्ण श्रद्धाञ्जली आदर्णीय हरिराज खेवाप्रति । आजसम्म पनि जित्न बाँकी रहेकाहरूको विजयको सुनिश्चितताको लागि... ।

-khajum97@gmail.com

# हरिराज दाइः
# अल्पायुमै अस्ताएका एक हस्ती

**बेग आले मगर**

२०७३ साल साउन १३ गते । म जीवन निर्वाहको क्रममा क्रममा मलेसिया आएपछि पाँचतारे होटलमा काम गर्नुपर्ने भयो । ठूलो ठाउँमा ठूलै नियम, न मोबाइल चलाउन पाईन्थ्यो न त भने जस्तो आराम । यसरी नै होटलको डिउटी निभाईरहेको थिए । मेरो दिनको समुहमा आफ्नै गाउले पनि थियो । उनले एक्कासी वाकीटकी (सञ्चार सेट) मा खबर पठायो कि "हाम्रो हरिराज खेवा गाडी दुर्घट्ना भएर ज्यान गयो रे !"

म अपुष्ट समाचार सुनेर आफै रणभुल्लमा परे । वास्तविक्ता के हो ? यो हावा समाचार हुन सक्छ , मैले उनीसँग यसरी नै अपत्यारिलो जवाफ फर्काएँ । उनलाई घरबाट मेसेज आएको रहेछ । म छक्क परे यो हुन सक्दैन कसरी सम्भव छ ? उनी पूर्व राज्यमन्त्री हुन्, मनले पिटिक्क मानेन । आफ्नो डिउटीमै रहदै लुकिलुकी भए पनी समचारको सत्य तथ्य पत्ता लगाउन लागिपरेँ । विभिन्न अनलाइन पोर्टलहरू हेर्न थाले । नभन्दै पूर्वराज्यमन्त्री हरिराज खेवा सम्बन्धी समाचारहरू भटाभट आउन थाले । म नतमस्तक भए कतै केहि सोच्न सकिन कतै पूर्वमन्त्रीसहित १३ जनाको ज्यान गयो । कतै, रहेनन् युवा नेता हरिराज खेवा ! बिभत्स रूपमा फोटाहरू हेर्दा मन नै कहालीलाग्दो भइसकेको थियो । यो सब कसरी भयो ? आफैमा अनुत्तरित प्रश्नहरू खडा भए । सोँच्नै नसकिने सत्य अगाडि तेर्सियो ।

यद्दपी मृत्यु जो हामीले स्वीकार्नै पर्छ।  सम्झैं, एउटा होनहार व्यक्ति गुमायौ। आशालाग्दो किरणको समाप्ति भयो।

म धनकुटा बहुमुखी क्याम्पसमा भर्ना हुँदा बखत हरिराज दाइहरू स्नातकमा शूरु गर्दै हुनुहुन्थ्यो। म एसएलसी दिएदेखि चिनजान र साथी भएको विश्वासदिप तिगेला (हाल बेलायत) सँग देब्रेबासमा सँगै बस्थ्यौं। लोकसेवामाथी हाम्रो कोठा थियो। त्यो बेला हरिराज खेवा दाइको कोठा भने धनकुटा देब्रेबासस्थित आले लजमा थियो। म क्याम्पस पढ्दाको बेला राजनीतिमा निकै चासो राख्थेँ। त्यो बेला हामी विश्वासदिप म अन्य केही साथीहरू राष्ट्रिय जनमुक्ति पार्टीको भातृसङ्गठन नेपाल स्वतन्त्र विद्यार्थी मोर्चामा सामेल थियौ। यो बेला हरिराज दाइहरूको राजनैतिक पृष्ठभूमि बुझ्न सकिएको थिएन। वहाँ स्नातक अध्ययन गर्नुहुन्थ्यो हामी प्रविणता प्रमाण-पत्र तह अध्ययन गर्थ्यौं तर पनि हाम्रो राजनीतिक धारमा वहाँले न वाधा उत्पन्न गर्ने काम गर्नु भयो न कुनै सल्लाह नै दिनु हुन्थ्यो। अचम्म लाग्थ्यो मलाई। यद्दपी डर चाहीँ लाग्थ्यो। त्यो बेला वहाँ कुन राजनैतिक धारमा हुनुहुन्छ त्यो समेत थाहा पाउन सकिरहेको थिएन। बरु वहाँ राजनीतिभन्दा कला साहित्यतिर बढी झुकाव राख्नुहुन्थ्यो। म प्रविणता पढ्ने बेला वहाँले अभिनय गरेको नाटक 'अस्वथामा हतोःहत्त' हेर्ने अवसर पाएको थिएँ।  धनकुटा क्याम्पसमा ऐच्छिक नेपाली पढाउनु हुने प्राध्यापक इश्वर श्रेष्ठ 'इसदिप'द्वारा निर्देशन गरिएको नाटकमा सम्झनामा आए अनुसार जेपि भूजेल, हरिराज खेवा, गीता अधिकारी लगायतले अभिनय गरेको याद छ। त्यसपछि रेडियो नेपाल क्षेत्रीय प्रशारण केन्द्र धनकुटाबाट उत्पादित दर्जनौ नाटकमा वहाँको आवाज सुन्न सकिन्थ्यो। एकचोटी रेडियो नेपाल क्षेत्रीय प्रशारण केन्द्र धनकुटाद्वारा आयोजित रेडियो नाटकमा वहाँको लेखन तथा वहाँद्वारा अभिनित नाटक 'अप्रत्यासित' एकाङ्की नाटकले प्रथम स्थान ओगट्न सफल भएको थियो। यसकारण त्यो समयसम्म वहाँलाई राजनैतिकभन्दा पनि साहित्यिकार तथा कलाकारको रूपमा चिनिन्थ्यो। वहाँको एकाङ्की नाटक सङ्ग्रह अपदस्त जिन्दगी प्रकाशित छ।

करिब ०५१/५३ को अवधिमा वहाँको राजनैतिक धरातल मलाई यकिन गर्न पनि गाह्रो भयो। त्यसपश्चात म पनि प्रविणता सकेर रुमलिन थालेँ। धनकुटा

बसुन्जेल वहाँलाई कुन राजनैतिक धारमा हुनुहुन्थ्यो पहिल्याउन सकिनँ । कुनैले जनमुक्तिको नजिक भन्थे भने कोही परी थापाको पार्टी अखिल नेपाल आदिवासी जनजाति सम्मेलन (मशाल) तिर झुकाव राख्छन् भन्थे तर जनमुक्तितिर वहाँको झुकाव नभएको आंकलन हामी नेस्वविमोमा हिड्दा पनि वहाँबाट कुनै सल्लाह न प्रतिक्रिया, केही मिल्दैनथ्यो । ०५४ को स्थानीय निर्वाचनमा वहाँलाई नेकपा एमालेले गाविस अध्यक्षको लागि टिकट थमाएछ । ०५४ को स्थानीय चुनावमा भारी मतले धनकुटा जिल्ला हात्तिखर्क गाविस (हाल छथर जोरपाटी गाउपालिका) को गाविस अध्यक्ष भए । त्यसपछि वहाँ एमालेको नेता भएको देखियो । ०५२ बाट जनयुद्ध शुरु भएको थियो त्यसको असर दिन प्रतिदिन सबै क्षेत्र तह र तप्कामा पर्न थाल्यो । विशेष गरी द्वन्द्वको निहुँ गरी स्थानीय चुनाव हुन सकेन । गाविस संरचनाहरू पनि लथालिङ्ग हुनथाले । स्थानीय निकायहरू जनप्रतिनिधी विहिन हुनथाले जनप्रतिनिधीहरू माओवादीको निसानामा पर्न थाल्यो । यो अवस्थामा वहाँ काठ्माण्डु म्यानपावर व्यवसायतिर लाग्नु भएछ । कालान्तरमा वहाँ फेरि माओवादी केन्द्रतिर आउनुभयो र धनकुटा जिल्ला इन्चार्ज मात्र नभएर पहिलो संविधानसभा ०६४ को चुनावमा भारी मतले सूर्यबहादुर थापालाई हराई संविधानसभा सदस्य पनि भए । त्यसपछि उनी अर्थ राज्यमन्त्रीसम्म भए । जुनबेला प्रचण्ड नेतृत्वको सरकार थियो त्यो बेला वहाँ अर्थ राज्यमन्त्री हुनुभयो । पछि दोश्रो संविधानसभाको चुनावमा पनि लड्नुभयो तर राप्रपाका सुनिलबहादुर थापासँग पराजित हुनुभयो ।

एकदिन पार्टीको गाउ जागरण अभियान रहेछ म कृषक मान्छे । अम्लिसो घाँस बोकेर घर पुग्दा वहाँ र हात्तिखर्ककै तोर्णदिप तिगेलासहित गाउका माओवादी समर्थित कार्यकर्ताहरू घरको सिकुवाभरी बसिरहेका थिए । म त्यो बेला अक्क न बक्क भएको थिए, छाती ढक्क फुलेर आएको थियो । डर पनि लाग्यो कतै अपहरण चन्दा आदी इत्यादी मनमा शङ्का हुने नै भयो । ओहो कहिले नआएको मान्छेहरू त्यो पनि ठूला ठूला मान्छेहरू देख्दा के गरुँ के नगरुँ भयो । भारी बिसाएँ अभिवादन गरे केहीक्षण गफ गरेँ । मैले चियाको आग्रह गरे मान्नु भएन बरु बेलुकी ७/८ बजेतिर पर ८ नम्बर आउन निम्ता दिनुभयो ।

'भाइजस्तो व्यक्तिले कुनै न कुनै नेतृत्व लिनुपर्छ' भनेर सुझाउनु भएको थियो । तर मैले बैमान गरे झैं लाग्छ म वहाँहरूले आग्रह गरेको ठाउमा गइनँ । गएर कुरा सेयर गरे केहि नबिग्रिने रहेछ भन्ने चाही अहिले लागिरहेको छ ।

वहाँ सवार बसको दुखद खबरले धेरै मर्माहत बनायो । बस दुर्घट्नामा वहाँसहित १३ जनाको मृत्यु भएको खबरले झन पीडा थप्यो । एउटा जिल्लाको आशलाग्दो कसैलाई पनि च्वास्स घोचेर नबोल्ने हरिराज खेवा दाइको दु:खद निधनले मात्र नेकपा पार्टीले मात्र हैन समग्र धनकुटाबासीले एक होनहार व्यक्ति गुमाएको छ । धनकुटाले एक आशलाग्दो हस्ती गुमाएको छ । धनकुटाको यो अपुरणिय क्षति अब कहिले पुरा होला जस्तो लाग्दैन । मैले वहाँको राजनैतिक धार चाल नपाई नै हरिराज दाइ म बाट अस्ताउनु भयो । एक जुझारु नेता साहित्यकार, कलाकार युवा हस्ती हरिराज खेवाप्रति भावपूर्ण श्रद्धान्जली ।

**(लेखक मलेसियामा रहेर पत्रकारिता गरिरहेका छन् ।)**
**महालक्ष्मी नगरपालिका वडा नं. ७ ढोडे**
**धनकुटा प्रदेश नं. १ नेपाल** alebeg18@gmail.com

# सधैँ सबैको सम्झनामा रहिरहने एउटा नाम स्व. हरिराज खेवा

**मोहन राई परदेशी**

फूल पनि फुलेपछि एकदिन ओइलिएर जान्छ, त्यसरी नै जन्मपछिको मृत्यु एउटा पनि शास्वत नियम हो, हामी जन्मेका जति सबैले एकदिन मर्नैपर्ने हुन्छ । फरक यत्ति मात्र हो कि कोही कोपिला मै ओइलिजान्छ त कोही फक्रेपछि ।

हामीले देखेका छौं सुन्दर फूल नै सबैको प्यारो हुन्छ तर प्यारो हुँदाहुँदै पनि त्यो फूल एकदिन अवश्य ओइलिएर जान्छ भनौं त्यो प्यारो फूल अरुभन्दा चाँडै ओइलिन्छ। ठीक त्यसरी नै सबैमाझ इमान्दार, कर्तव्यनिष्ठ, प्रतिभाशाली र सर्वगुण सम्पन्न एक कर्मठ व्यक्ति जो जनताको दुःख-सुखको सहयात्री बनेर कर्तव्य पथमा लम्किरहनु हुन्थ्यो । हामी माझबाट दैवले पनि यत्ति छिट्टै चटक्क चुँडेर लग्नु भयो, सम्झिंदा पनि सपना पो हो कि जस्तो लाग्ने हो उनै व्यक्तित्व हुन् हरिराज खेवा ।

हुन त म वहाँसँग नजिकबाट त्यति धेरै परिचित छैन तर पनि वहाँको गीत सुनेको छु, वहाँको लेख-रचनाहरू पढेको छु । लाग्थ्यो आहा ! यो व्यक्तिसँग भेटेर भलाकुसारी गर्न पाए, त्यो चाहनालाई अलिकति र छोटो भएपनि मिलाइदियो दोस्रो संविधान सभाको चुनावले । त्यही क्रममा भेटघाट र परिचयको आदान-प्रदान भने दोस्रो संविधानसभा निर्वाचनको बेला वहाँसँग धनकुटाको पाखिबासमा भेट भएर भलाकुसारी गर्ने छोटो मौका मिलेको थियो ।

वहाँ साँच्चिकै पढेको र सुनेको भन्दा नि प्रतिभाशाली, प्रभावशाली पाएँ। दुर्भाग्यवस वहाँ दोस्रो संविधान सभाको निर्वाचनमा सुनिलबहादुर थापासँग पराजित हुनु भएको थियो । जनचाहना अनुसार निमुखा, बेसहारा र गरिब वर्गको नेतृत्वमा अग्रपंक्तिमा रहेर सदैव काम गरिरहनु हुने जनतामाझ निक्कै लोकप्रिय नेताको रूपमा चिन्ने मौका पाएँ त्यतिबेला ।

सायद त्यही भेट हाम्रो लागि पहिलो र अन्तिम भेट बनिदियो । म प्रायः वैदेशिक रोजगारीको क्रममा परदेशमा रहनु परेकोले पनि होला सायद तर त्यो हाम्रो छोटो भेट मेरो लागि एक अमिट भेट भएर सम्झनामा सधैँ रहिरहनेछ। वहाँ हामी माझ नरहनु भएपनि वहाँको त्यो आदर्श, मान्यताले हामीलाई घच्घचाइ रहनेछ पर्यन्त सम्म ।

मैले पढे र सुने अनुसार वहाँको बारेमा एकदुई शब्द लेख्न यत्ति जमर्को गरेँ । वहाँ वि.सं. २०२५ साल कार्तिक २७ गते धकुटा हात्तीखर्क (६ ज्योतिनगरमा बुबा हृदयमान र आमा तिर्थमाया लिम्बूको कोखमा जन्मिएका लिम्बूले अर्थशास्त्रमा स्नातक तहसम्मको अध्ययन गर्नुभएको थियो ।

बिद्यार्थी जीवनदेखि नै हरेक क्षेत्रमा सक्रिय र रुचि राख्ने लिम्बूले २०४२ सालमा विद्यालयको अनेरास्ववियुको प्रारम्भिक कमिटिको सदस्य भएर राजनीति सुरु गर्नुभएको थियो ।

त्यसपछि २०५० सालमा आएर गाउँकै जनकल्याण प्राथमिक विद्यालयमा शिक्षकसमेत भएका उनी छोटै समयमा सोही विद्यालयको प्रधानाध्यापकसमेत बनेका थिए । अध्यापनकै क्रममा उनी २०५४ सालको स्थानीय निर्वाचनमा तत्कालिन नेकपा एमालेका तर्फबाट आफ्नै स्वयं काकाको छोरा भन्दा दोब्बर मत प्रप्त गर्दै हात्तिखर्क गाविसको अध्यक्षमाको रूपमा विजयी भएका थिए ।

त्यसपछि वहाँले राजनैतिक उतारचढावमा कहिल्यै पछाडि फर्केर नहेरी जनताको सेवामा सधैँ लगन र समर्पित भइ निश्वार्थ सेवामा लागिरहनु भयो र २०५४

सालको पहिलो संविधानसभा निर्वाचनमा एकिकृत नेकपा माओवादीको तर्फबाट धनकुटा क्षेत्र नम्बर २ बाट १२ हजार २ सय ९९ मत प्राप्त गरी धनकुटाबाट पटक पटक विजयी भएका पूर्व प्रधानमन्त्री तथा राष्ट्रिय जनशक्ति पार्टीका अध्यक्ष सूर्यबहादुर थापालाई पराजित गर्दै सबैभन्दा कम उमेरमा संवैधानिक समितिका सदस्यसमेत बन्नु भएको थियो ।

पहिलो संविधानसभापछि बनेको तत्कालिन नेकपा (माओवादी) अध्यक्ष पुष्पकमल दाहाल नेतृत्वको सरकारमा वर्षमान पुन अर्थमन्त्री रहंदा उनी अर्थराज्यमन्त्री समेत भएका थिए भने दोस्रो संविधानसभा निर्वाचनमा भने उनी पराजित भएका थिए ।

लामो समय एमालेमा राजनीति गरेका खेवा माओवादी सशस्त्र द्वन्द्वको अन्तिम समयमा माओवादीमा प्रवेशसँगै काठमाडौं उपत्यकामा निक्कै क्रियाशील रहे ।

सायद दैवलाई पनि राम्रै मान्छे चाहिन्छ, २०७३ साउन १३ गते धनकुटाको सिधुवा बजारनजिकै बिहीबार दिउँसो साढे १२ बजेतिर बा २ ख ७३६६ नम्वरको बस दुर्घटना हुँदा वहाँलाई पनि मृत्युले टिपेर लानुभयो ।

१३/१४ वर्षको उमेरदेखि नै राजनीतिमा लागेका खेवा माओवादी केन्द्रका केन्द्रीय सदस्य तथा धनकुटा जिल्ला अध्यक्ष र लिम्बूवान मुक्तिमोर्चाको केन्द्रीय महासचिव र भक्तराज कन्दङ्वा स्मृति प्रतिष्ठानका अध्यक्ष रहँदै दुर्घटनामा परि ज्यान गुमाउन पुगेका हुन् ।

राजनीतिसँगै नेपाली साहित्य विधामा पनि उत्तिकै पोख्त खेवाको 'अपदस्त जिन्दगी' (एकाङ्की नाटक सङ्ग्रह २०६४) पनि विश्वासदीप तिगेलाको सम्पादन/प्रकाशनमा प्रकाशित भइसकेको छ ।

त्यसका साथै जन्म जिल्ला धनकुटाको वर्णन गरिएको गीत 'धनकुटाको बजारमा हावा सरर' गीत रेकार्डिङ समेत गरेका थिए । झण्डै एक दर्जन नाटकहरूमा अभिनय समेत गरेका खेवा २०५५ सालमा भएको नेपाल अधिराज्यव्यापी रेडियो नाटक प्रतियोगितामा गोल्ड मेडालिष्ट समेत हुन् । यसका साथै वहाँका थुप्रै लेख

रचनाहरू प्रकाशित छन् ।

वहाँ हामी न्यायप्रेमी, विकासप्रेमी देशका जनताले त्यो बस दुर्घटनासँगै एक स्वच्छ, वफादर र इमानदार नेता जो देश र जनताको लागि लागिपर्थे । जसलाई गुमायौं । वहाँ हामी माभ्क नरहनु भए पनि वहाँको काम, नीति र वहाँका अमर कृतिहरू हामीमाभ्क सधैं रहिरहनेछ । जनताले सधैं-सधैं सम्भिmरहनेछन् । मरेर गएपनि देश र जनताको लागि सधैं सम्भmनामा अमिट छाप भएर सधैं मुस्कुराई रहनुहुनेछ ।

युगौं युगसम्म पनि के राजनीतिज्ञ, के साहित्यकार, के गीतकार/संगीतकार/गायक-गायिका, के विद्यार्थी, के शिक्षक, के गरिब-के धनी सबै सबै सर्वहारा वर्गले अनि धनकुटाले मात्र होइन मातृभूमिले सम्भिmरहनेछ । हामीमाभ्क कतै नेता भएर, कतै दिनदुःखी बनेर त कतै शिक्षक, साहित्यकार बनेर पर्यान्तकालसम्म रहिरहनु हुनेछ अजर-अमर बनेर ।

अन्तमा वहाँप्रति श्रद्दा-सुमन सहित वहाँले चाल्नु भएका पाइलाहरू पच्छ्याउँदै, ती गोरेटोहरू खोज्दै हिंड्न सक्यौं भने वहाँप्रति सच्चा श्रद्धान्जली हुनेछ ।

**(लेखक नेपाली समाचारडटकमका सम्पादक हुन् ।**
**हालः यएईमा रहेर पत्रकारिता गरिरहेका छन् ।)**
**पाखीबास ४, धनकुटा**

# मेरो स्मृतिमा स्वर्गिय हरिराज खेवा

**उत्तरमान लिम्बू (तिगेला)**

सानो छँदा हामीलाई सुनाईन्थ्यो, तिगेलाहरू तेह्रथुम जिल्लाको छथर ओखेमा भन्दा धनकुटा जिल्लाको हात्तीखर्कमा धेरै सङ्ख्यामा बसोबास गर्दछन् । एउटै दाजुभाइ भएको भएता पनि हामी टाढा-टाढा बसेका कारण्ले हामी ओखे र हात्तीखर्के तिगेलाहरू बिच भेटघाट नहुने हुनाले कहिले काँही हाटबजारतिर एकाध हात्तीखर्के तिगेलाहरूसँग भेट भई हालेता पनि साईनो छुट्याउन हम्मे पर्दथ्यो । त्यतिखेर प्राय: सबैको लागि साईनो छुट्याउने आधार हुने गर्दथ्यो सुब्बा हृदयमान तिगेला । सुनिए अनुसार हृदयमान तिगेला हात्तिखर्कको सुब्बा, सबैका लागि गन्यमान्य साथै लोकप्रिय व्यक्तित्व हुनुहुन्थ्यो । अझ के पनि सुनिन्थ्यो भने हृदयमान तिगेला त्यो गाउँभरिमै धनी हुनुहुन्छ र उँहाको परिवारमा छोरा छोरीहरू सबै पढेलेखेका छन् र गाउँमा निकै लामो समयसम्म प्रधानपञ्चसमेत चलाउनु भएको थियो र समाज सुधारकका रूपमा पनि परिचय बनाउनु भएको थियो ।

मेरो मानसपटलमा भए अनुसार मैले ओखेमा पढुन्जेलसम्म कुनै पनि हात्तीखर्के तिगेलासँग भेट भएको थिएन । धरानस्थित महेन्द्र क्याम्पसमा बि.एल. पढ्दैताका हुनु पर्दछ, मैले पहिलोपल्ट भेटेको हातिखर्के तिगेलाहरूमा लोकेन्द्र तिगेला (हृदय मान तिगेलाकै साक्खै भतिज, साइनोमा मेरो दाजु र वहाँ दिवंगत पनि भइसक्नु भएको छ) हुनुहुन्थ्यो । वहाँसँग  सायद् खेवा वंशावली लेखन र संकलनको क्रममा धरान (१६ स्थित काका भुपु क्याप्टेन गजरधन तिगेलाको घरमा आउनु भएको बेला क्षणिक भेट भएको थियो । त्यसपछि विश्वाशदीप भाइसँग धरानस्थित मेरो काका भूपू लेफ्टीनेन्ट इन्द्रधन तिगेलाको घरमा र धेरै वर्षपछि विश्वाशदिप भाइको अन्य

दाजुभाइ (टेक जङ र थर्कदीप) हरूसँग काठमाडौंमा भेट भएको थियो ।

देशभित्र अवसर र रोजगारीको कुनै सम्भावना नदेखेर सन १९९७ तिर हङकङ गएर त्यतै व्यवसाय चलाएर बसिएको थियो । माओवादी जनयुद्धको अन्त्यपश्चातको पहिलो आम निर्वाचनमा धनकुटा निर्वाचन क्षेत्र नम्बर २, जसलाई सूर्यबहादुर थापाको आधार ईलाकाको रूपमा चिनिन्थ्यो, मा  माओवादीको तर्फबाट हरिराज खेवाले चुनाव लड्ने समाचार सुनियो र हरिराज खेवा को होलान ? भन्ने कौतुहल्ता भयो । केही समय पश्चात नै उनी हृदयमान तिगेलाको छोरा हुन भन्ने थाहा पाइयो । उनले भारी मतले सूर्यबहादुर थापा (जसले नेपालकै इतिहासमा सबैभन्दा धेरै पटक र लामो समयसम्म प्रधानमन्त्री भएर शक्ति, साधन र सम्पत्ति सञ्चित गरिसकेका थिए) लाई अत्याधिक मत अन्तरले पराजित गरेर चर्चाको शिखर चुमेको सुनियो ।

हरिराज खेवासँग मेरो पहिलो भेट उनी सांसद भइसके पश्चात म नेपाल नोटरी पब्लिकको परिक्षा दिन नेपाल जाँदा काठमाडौंमा तेह्रथुम लसुने निवासी तेजिन्द्र कुरुम्बाङमार्फत भएको थियो । चिनापर्चीको क्रममा उमेर सोधासोध गरियो, म भन्दा उनी केही महिनाले कान्छो रहेछन् र म उनको दाजु पर्न गएँ । काठमाडौंमा भएको त्यो पहिलो भेट अन्य थुप्रै मान्छेहरू सँगको संयुक्त भेट भएको करणले हामीबिच त्यति धेरै कुराकानी हुन पाएन । अलिपछि म फेरि नेपाल गएको बखत काठमाडौं बस्ने सबै तिगेलाहरूलाई एक आपसमा भेट गराएर चिनजान गराउने हेतुले कोटेश्वरस्थित मेरो घरमा एउटा भेटघाट कार्यक्रमको आयोजना गरेको थिएँ र हरिराजसँग मेरो दोश्रो भेट भएको थियो । त्यसपछि माओवादीको हङकङ इकाइ कमिटीको अधिवेशनको क्रममा टङ्क आङ्बुहाङ र रमेश लिङ्देनसँगै उनी पनि हङकङ आएको बेला उनको भाषण सुन्ने र हङकङको चर्चित मनोरन्जनात्मक उद्यान (ओसियन पार्क) घुमाउने तथा मेरो घरमा खाना खुवाउने अवसर पाइएको थियो । त्यहीबेलाको हङकङ भ्रमणमा हङकङस्थित तत्कालिन माओवादीसम्बद्ध भातृसङ्गठन लिम्बूवान राष्ट्रिय मुक्ति मोर्चा र शाखा कार्यालयलगायत केन्द्रिय कार्यालय सबै नै हङकङमै सिमित रहेको ५, ७ जना साथीहरूले चलाउँदै आएको

'लिम्बूवान् राष्ट्रिय मोर्चा' नामक् मोर्चासँग एकिकरण गर्ने भनेर मेरै सहजकर्तामा एउटा सम्झौता गरिएको थियो तर लिम्बूहरूको अपुङ्गी स्वभावकै कारणले पनि हुन सक्छ, त्यो सम्झौता कार्यान्वयन् भएन ।

हरिराज खेवा अर्थ राज्यमन्त्री भई सकेपछि भने हाम्रो प्रत्यक्ष भेट हुन पाएन र कहिले काहीं फोनमार्फत सम्पर्क हुन्थ्यो । वि.सं. २०६८ साल फाल्गुन १ देखि ३ गते सम्म सम्पन्न पहिलो छथर महोत्सवको लागि बेलायतबाट आर्थिक सहयोग सन्कलनको लागि हरिराज खेवा भाइले फोन गरेर बेलायतबासी छथरेहरूबाट आर्थिक सहयोग संकलन गर्नको लागि अनुरोध गरे अनुरूप मैले बेलायतबाट सबै भन्दा धेरै सहयोग रकम पाउन्ड स्टर्लिङ £९७० (नेरु १२१,०००) संकलन गरेर नेपाल पठाएको थिएँ । स्मरणीय छ, बेलायत लगायत ब्रुनाई, हङकङ र नेपालमा बसोबास गर्ने छथरेहरूबाट आर्थिक सहयोग संकलन गरेर स्वर्गिय हरिराज खेवाको प्रमूख आतिथ्यमा तेह्रथुम जिल्लाको साविक ओखे गाविस (हाल छथर गाउँ पालिका वडा नम्बर ५) वडा नम्बर ७ तुरुम्बा गाउँमा अवस्थित खेवाहरूको यक (गढी) ताक्लुङमा पहिलो छथर महोत्सव भब्य रूपमा सम्पन्न भएको थियो ।

स्वर्गिय हरिराज खेवा सुर्यबहादुर थापालाई चुनाव हराएर सांसद पदमा निर्वाचित हुने पहिलो तिगेला सांसद मात्र नभएर पहिलो खेवा सांसद, छथर क्षेत्रकै पहिलो लिम्बू सांसद र सम्पूर्ण तिगेला, खेवा र समग्रमा छथर क्षेत्रकै पहिलो लिम्बू राज्य मन्त्री थिए । यद्यपी, उनलाई पार्टी र सरकारमा आफ्नो कुरा प्रभावकारी रूपमा राख्न र कार्यान्वयन् गराउन नसक्ने व्यक्तिका रूपमा पनि यदाकदा चित्रण गरिएको थियो । एउटा दृष्टान्त, हङकङमा म र अन्य २ जना साथीहरू मिलेर एउटा Travel Agency खोलेका थियौ । नियमतः कुनै पनि Travel Agency ले नेपाल एयरलाइन्सको टिकट बिक्री गरेबापत कमिशन पाउनु पर्ने प्रावधान् थियो । तर हामीलाई नेपाल एयरलाइन्सको टिकट बिक्री बापतको कमिशन प्राप्त गर्ने अधिकारबाट बन्चित गराएर आफ्नो प्रतिस्पर्धी हुन नदिनको लागि हङकङस्थित Sunrise Travels का तत्कालिन मेनेजर (जो चाकरी, चाप्लुसी र खुराफाती गर्नमा बेजोड थिए) ले तत्कालिन नेपाल एयरलाइन्सको प्रबन्ध निर्देशक केबी

लिम्बू सँग नजिकको साँठगाठ राखेर हामीलाई नेपाल एयरलाइन्सको टिकेट बिक्री गरेर कमिसन लिन सक्ने travel agent को अनुमति (जसलाई exchange order भनिन्छ) प्राप्त गर्ने अधिकारबाट गैर कानुनी र अनियमिततापूर्वक लामो समयसम्म बञ्चित गरेका थिए । जब एनेकपा माओवादीले संविधान सभाको चुनावमा सबै भन्दा धेरै सिट जितेर एकलौटी सरकार बनायो मैले हरिराज खेवालाई हामीमाथि नेपाल एयरलाइन्सले exchange order नदिएर अन्याय गरिरहेकोले यो बारेमा बुझेर हाम्रो निवेदनमाथि शीघ्र निर्णय गराउनको लागि पहल गरी दिन आग्रह गरेको थिएँ । तर धेरै आग्रह र 'पहल गरी दिन्छु' भन्ने उनको आश्वाशनको बाबजुद लामो समयसम्म हाम्रो निवेदनको कुनै सुनवाई भएन ।

अर्को दृष्टान्त, पहिलो र ऐतिहासिक छथर महोत्सवको तयारी भइरहेको बेला हरिराज खेवा अर्थ राज्यमन्त्री थिए र उनले छथर महोत्सव आयोजक समितिलाई सो महोत्सव आयोजना गर्नको लागि नेपाल सरकारको पर्यटन प्रवर्द्धन कोषमार्फत कम्तिमा २ लाख रूपैया उपलब्ध गराई दिने आश्वाशन् दिएका थिए रे तर एक रूपैन्या पनि उपलब्ध गराउन नसकेको मात्र होईन सो महोत्सवको बेला तत्कालिन तेह्रथुम जिल्लाबाट मनोनित सभासद सीता गुरुङले उनकै सामुन्ने आफ्नो व्यक्तिगत तर्फबाट ५०,००० रूपैयाको सहयोग घोषणा गर्दासमेत अर्थ राज्यमन्त्रीजस्तो व्यक्तित्वबाट कुनै सहयोगको घोषणा नगरिएको र सहयोग नदिएकोमा छथरेहरू आश्चर्यचकित भएको गुनासोहरू पनि सुन्नमा आएको थियो ।

हरिराज खेवालाई मैले नजिकबाट चिन्ने र लामो सङ्गत गर्ने मौका नपाए पनि मेरो बुझाईमा उनी एउटा आदर्श र मर्यादित परिवारमा जन्मेर हुर्केका थिए । उनी इमान्दार, स्पष्ट वक्ता, क्रान्तिकारी र कर्तव्यनिष्ठ थिए । उनले लेखेका केहि गीत तथा नाटकहरूको आधारमा के भन्न सकिन्छ भने उनको राजनीति र समाज सेवाको अलावा नेपाली साहित्यप्रति पनि गहिरो अभिरुचि थियो । यसको अतिरिक्त वि.सं. २०५५ को नेपाल अधिराज्यव्यापी रेडियो नाटक प्रतियोगितामा स्वर्ण पदक जित्न सफल भएबाट हरिराज खेवा अभिनय कलामा समेत अद्वितीय थिए भन्ने प्रस्ट छ । छोटो समयमै राजनैतीक सफलताको उचाईमा पुग्न र चर्चाको शिखर

चुम्न सफल हरिराज खेवा तिगेला र खेवाहरूको मात्र नभएर पुर्बी नेपालकै सम्पूर्ण लिम्बू, गैर-लिम्बू र समग्रमा समस्त नेपालीकै लागि आशा तथा भरोसा गर्न लायक एक उदियमान तथा अझ बढि राजनैतिक सफलताको सम्भावना भएका ब्यक्तित्व थिए ।

अपसोच, १३ श्रावण २०७३ को बिहान ९:३० बजे म अफिस जाँदै गरेको बेला कमल तिगेला भाइले मेसेन्जरमा 'दाजु, हरि खेवा दाइ बस दुर्घटनामा पर्नुभएको छ भन्ने खबर आएको छ' भनेर मेसेज पठायो । सुरुमा त मलाई विश्वाश गर्नै गाह्रो भयो र अत्यन्तै भाव विह्वल पनि भएँ । तर 'हुने हार दैब नटार', समाचार सत्य नै रहेछ । केही समयपछि प्राय: सबैको फेसबुक भित्ताहरू र अनलाइन खबरहरूमा हरिराज खेवाको धनकुटाको सिन्धुवा बजार नजिक भएको बस दुर्घटनामा निधन भएको समाचारहरू आउन थाल्यो । निष्ठुरी कालले हरिराज खेवालाई अल्पायुमै खोसेर उनको राजनैतीक यात्राालाई यतिमै सिमित मात्र राखेन उनको दुई छोरीहरूलाई नाबालक अवस्थामै टुहुरो पार्दै, श्रीमतीलाई खाउँखाउँ लाउँलाउँकै उमेरमा विधुवी बनाउँदै र छथरबासी सम्पूर्ण जनताहरूको आशा र भरोसाको त्यान्द्रोलाई समेत चुडाई दिएकोमा गहिरो खेद प्रकट गर्दै हरिराज खेवाको असामयिक् मृत्युप्रति गहिरो दु:ख व्यक्त गर्दछु । साथै उनको मृत आत्माप्रति चीर शान्तिको कामना गर्दै शोक सन्तप्त परिवारलाई धैर्य धारण् गर्ने, यो अपुरणिय क्षतिको सामना गर्ने र स्वर्गिय खेवाको अधुरो सपनाहरू पुरा गर्ने प्रेरणा र शक्ति प्राप्त होस् भनी कामना गर्दछु ।

**(लेखक नेपालको अधिवक्ता र युकेका सोलिसिटर हुन् ।)**

# अनुरोध

**रोशन परियार**

असार जोतिरहँदा
खेतका गह्रा गह्रामा
अड्किएछ हलो र जाकिएछ बर्षौंसम्म यदि भने
म त्यही हलोको फालीमा उनिएर
जमिन मुनी लम्पसार सुतिरहेको कुरा
मेरी आमालाई हरेक असारमा सुनाइदिनु होला ।

सालका पातहरूले भित्ता बनाएर
चोयाका जुइनाहरूले धुरी कसेर
मुसलधारे पानीमा एउटा पातलो घुम ओढ्दै
पटुकाको छेउमा मकै भटमासको पोको बाँध्दै
सिलबरे थालमा भोक बोकेर
यदि कसैले माङ्माया खोला तर्दै गरेको देख्नुभयो भने
म त्यही माङमाया खोलाको चिसो छालमा
उसैको सिन्दुर बनेर बगिरहेको कुरा
मेरी श्रीमतीलाई हरेक पटक ऐना हेर्दा सुनाई दिनु होला ।

मंसिरमा धानका बालाहरूसँगै
आली भरी लहलह झुलेर
प्रत्येक दानाहरूमा सुनौलो भविष्य साँचेर

धानका मुठाहरूबाट मोती झारिरहेको देख्नु भयो यदि भने
म त्यही धानका दानाहरूमा टाँसीएको
र नाङ्लाले बत्याउँदा बत्याउँदै धुलो झैं फूङ्ग उडिरहेको कुरा
मेरा बा लाई हरेक मंसिरमा नबिर्सीकन सुनाई दिनु होला ।

कहिलेकाँही बादलहरूको माझमा
आधा जति मात्रै पनि जून देखिएछ यदि भने
भनिदिनु छोरालाई
तुवाँलो पन्छाएर आकाशबाट झरेको प्रखर उज्यालो तिम्रै बाबुको हो
जो तिम्रो आँखामा हरदम चम्की रहन चाहन्छन् भनेर ।

कहिलेकाँही आँगनमा एक धर्को मात्रै पनि
इन्द्रेणी पोखिएछ यदि भने
भनिदिनु छोरीलाई
त्यही एक धर्को इन्द्रेणीमा देखिने अनगिन्ति खुशीका रङ्ग तिम्रै बाबुको हो
जो तिम्रो ओठमा हरदम मुस्कुराई रहन चाहन्छन् भनेर ।

खोजेछ देशले
सोधेछ इतिहासले यदि भने
राष्ट्रिय झण्डा छातीमा टाँसेर
सगरमाथाभन्दा निकै अग्लो साहस बोकेको
आँशुको सुनामी मोडेर खुशीको बिहानी खोज्ने
एक योद्धा
जो एउटा नयाँ युगको परिकल्पना गर्दागर्दै
जन्म जिल्ला मै शहादतको सास बिसाउन बाध्य भएको
एक अमर नेपाली हो
जसलाई उसका गाउँबासीहरूले
हरिराज खेवा भन्थे भनिदिनु होला ।

**पाख्रीवास, धनकुटा**

# अपदस्त जिन्दगीले चिनाएको नाम हरिराज खेवा

**पञ्च विस्मृत**

पचासको दशकमा मेरो सबैभन्दा प्रिय वस्तु केही थियो भने त्यो रेडियो थियो । अहिले जसरी मोबाइल फोन हातमा बोकेर घुम्ने गरिन्छ त्यो समय प्रायको साथमा रेडियो हुने गर्थ्यो । धनकुटा जिल्लाबासी भएको हुनाले रेडियो नेपाल क्षेत्रीय प्रसारण केन्द्र धनकुटाका हरेक कार्यक्रमहरू छुट्दैनथे । म आफैँ पनि साहित्य सृजना गर्थें । आफ्नो परिवारको सामू रेडियोबाट आफ्नो नाम आउँदा खुब आनन्द लाग्थ्यो । त्यतिबेला मैले लेखेको 'हस्ताक्षर' शीर्षकको गीतिकथा अत्यन्तै चर्चित भएको थियो । त्यो गीतिकथा दुईपल्ट प्रशारित मात्र भएन, त्यही गीतिकथा सुनेर डेढ दर्जन पत्रहरू समेत आए ।

आफ्नैबारे नलेखी नहुने भयो । किनभने म त्यति 'प्रडक्टिभ' हुनुको श्रेय धनकुटा जिल्ला आसपासका स्रष्टाहरूलाई जान्छ । वस्तुतः पचासको दशकसम्म पुस्तक, पत्रपत्रिका, कागज-कलम र रेडियोको जमाना थियो । सोशल मिडियालाई दिने सम्पूर्ण समय तिनलाई दिएर त्यतिबेलाका मान्छे आजका भन्दा बढि प्रडक्टिभ थिए भन्ने लाग्छ । मैले स्व. हरिराज खेवालाई न देख्न पाएँ, न त भेट्न नै तर मेरो साहित्यिक सक्रियताका पछाडि कहीँ न कहीँ 'अपदस्त जिन्दगी' र स्व. सर्जक हरिराज खेवा पनि थिए भन्ने लाग्छ ।

वि. सं. २०५५ सालमा नेपाल अधिराज्यव्यापी रेडियो नाटक प्रतियोगिताको आयोजना भएको थियो । र, त्यसमा उच्च स्थान ओगट्ने सबै नाटकहरू प्रसारित भएका थिए । सबैभन्दा मन छुने नाटक थियो 'अपदस्त जिन्दगी' । र, त्यो नाटकले प्रथम स्थान हासिल गरेको थियो । त्यसपछि त हरिराज खेवा नाम मजस्ता लेखनप्रेमी, रेडियो नाटक प्रेमीहरूको मनमा सदाका लागि ठाउँ ओगट्न सफल भयो ।

त्यो समय वास्तवमा नाटक लेखन, प्रकाशन-प्रसारण र प्रदर्शनको लहर नै चलेको थियो । गाउँगाउँमा जनचेतनामूलक नाटकहरू प्रदर्शन गरिन्थ्यो । नाटक नै जनतासामु जाने एक प्रभावकारी माध्यम बनेको थियो । त्यसले साहित्यको 'उत्पादकत्व' राम्ररी नै सतहमा देखाएको थियो । अपदस्त जिन्दगीजस्ता रेडियो नाटकहरूबाट प्रेरित भएर मैले पनि केही नाटकहरू लेखेको थिएँ । सडक नाटकमा त खेलेको पनि थिएँ । 'जमुनाको रुख' शीर्षकमा लेखेको रेडियो नाटक धनकुटाको रेडियोमा पठाएँ पनि । तर त्यतिखेर नाटक रेकर्ड हुन छोडिसकेको थियो ।

पछि अचानक अपदस्त जिन्दगी नाटक पुस्तकको रूपमा पढ्न पाइयो । वि.सं. २०५८ मा एकाङ्की सङ्ग्रहको रूपमा प्रकाशित भएको रहेछ । टेकवीर मुखियाको अत्यन्तै आकर्षक आवरणकलामा प्रकाशित अपदस्त जिन्दगीको प्रकाशकको भूमिका अत्यन्तै सक्रिय र समाजसेवी साहित्यकार विश्वासदीप तिगेलाज्यूले निभाउनुभएको रहेछ । वहाँले नै स्व. हरिराज खेवाको अपदस्त जिन्दगीको समिक्षा गरिदिनु पर्‍यो भन्नुभएको हो । तर यो समीक्षाको लेखन भने भएन । मेरो प्रेरणाका एक श्रोत हरिराज खेवाको नाममा दुई शब्दको श्रद्धासुमन मात्र हो यो ।

अपदस्त जिन्दगी कृति चार एकाङ्कीहरूको सङ्ग्रह हो । अन्यमा अप्रत्यासित, गोलार्द्धभित्र र सपना अन्त्य भएको रात शीर्षकका नाटक रहेका छन् । अपदस्त जिन्दगी सर्वश्रेष्ठ देखिन्छ । गाविस अध्यक्ष, हेडमास्टर, सभासद् र संवैधानिक समितिका सदस्यहुँदै देशको अर्थराज्यमन्त्रीसम्म बन्न सफल स्व. हरिराज खेवाको नाटककारको व्यक्तित्व या परिचय साहित्य र कलानुरागीहरूलाई निक्कै प्यारो छ ।

यसमा अपदस्त जिन्दगीको ठूलो हात छ । अर्कातिर नवीन थापाको सङ्गीत, शुभ तामाङको स्वरमा रेकर्ड गरिएको 'धनकुटाको बजारैमा' बोलको गीतले उनलाई एक गीतकारको रूपमा समेत चिनाएको छ ।

अपदस्त जिन्दगी शीर्षकको नाटकमा नाटककारले चेलिबेटीबेचबिखनको मुद्दालाई उठाएका छन् । उक्त नाटक लेख्दाताका त्यस विषयसँगै एड्स रोगको बारेमा पनि गाउँघरमा जनचेतना फैलाउने काम गरिन्थ्यो । नाटककारले पनि ती दुवै विषयलाई एकसाथ उठाउने काम गरेका छन् । यस नाटकमा एड्स रोग पीडित रेश्माको स्वाभाविक प्रतिशोध देख्न सकिन्छ । रेश्माबाट अवशेषलाई एड्स रोग सारेर समाजका खल पात्रहरूलाई ठूलै चेतावनी दिएका छन् नाटककारले । समाजका शोषित पीडित महिलाको समस्यालाई यस नाटकमार्फत् उठाएर नाटककारले आफूमा निहित नारीवादलाई प्रस्ट्याएका छन् ।

'अप्रत्यासित' एक पारिवारिक नाटक हो । यस नाटकमा पति र पत्नीबीच उत्पन्न हुने शङ्का र अविश्वासले कसरी लङ्का जलाउँछ भन्ने कुरा प्रस्तुत गरिएको छ । अवशेषको आफ्नो बहिनीप्रतिको प्रेम आदर्श प्रेम हो । लेखकको हातमा नै हुन्छ नारीलाई गिराउने कि पुरुषलाई, नारीको सपोर्ट गर्ने कि पुरुषको भन्ने । नारीलाई सीता र पुरुषलाई रावणको रूपमा प्रस्तुत गरेर नाटककारले यस नाटकमार्फत् पनि नारीवादलाई रोजेका छन् ।

'गोलार्द्धभित्र' आकारले सबै भन्दा लामो नाटक हो । तर नाटक पढिसकुन्जेल यो कुन र कहाँको समाजमा आधारित हो भन्ने कुरा मनमा खेलिरहन्छ । किनभने नोकर बस्ने चलन आज कहीँ देख्न पाइन्न । घरज्वाइँ बस्ने संस्कार त अझ हाम्रो पुस्ताले कतै देखेको छ जस्तो लाग्दैन ।

घरज्वाइँ बस्ने संस्कारमा आधारित यो नाटकमा भने पुरुषको पारिवारिक पीडालाई उजागर गर्ने काम गरिएको छ । हरेक महिला र पुरुषबीचको सङ्घर्षमा पुरुषको मात्रै हात हुन्न, महिला पनि उतिकै दोषी हुन सक्छन् भन्ने कुरा यस नाटकबाट बुझ्न सकिन्छ । हेमन्तको भलादमीपन, सोझोपन उसकै पत्नीलाई राम्रो जँच्दैन ।

'वीमेन डन्ट लाइक नाइस गाइज' भनेजस्तो स्वभावको आधारमा आफ्नो पतिको नालायकीपन साबित गर्न खोज्छिन् रश्मी । सरोजको विन्दास जिन्दगीमा खुसी खोज्छिन् उनी । दोस्रो बिहे समेत गर्छिन् । स्वभावतः तर चाँडै नै पछुताउँछिन् पनि । यही नै आजको समाजको वास्तविकता पनि हो । धन दौलत र रूपरङको पछि लाग्दा फसेका, समाजबाट घृणित भएका रश्मीजस्ता पत्नी आजको समाजमा खोज्न त्यति टाढा जानु पर्दैन । त्यसैले घरज्वाइँको पाटोलाई निकालिदिने हो भने यो नाटक आज पनि समसामयिक देखिन्छ ।

'सपना अन्त्य भएको रात' एक प्रतीकात्मक नाटक हो । र, दुर्भाग्यतः एक पात्र युवक आजका युवाको प्रतिनिधि पात्र हो, जो आफ्नो जन्मदिने मातापितालाई केही दिन चाहन्छन् तर असमर्थ हुन्छन् । रोजगारदाताहरूले कामको लागि विज्ञापन दिनु पैसा कुम्ल्याउने मेलो गर्नु मात्र हो भन्ने सत्य हिजो थियो आज पनि छ । नातावाद, कृपावाद र घूसखोरी प्रवृत्ति त्यसको पृष्ठपोषक संस्कार हो । यिनै तँवहरूसँग लड्दै जिउनु युवक पात्रहरूको नियति हो ।

'अपदस्त जिन्दगी' कृति पढ्दै जाँदा अपदस्तको ठाउँमा अपदस्त हुनुपर्ने हैन र भन्ने त लाग्छ, तर पनि यो एक सुन्दर, पठनीय र सङ्ग्रहणीय कृति हो भन्ने कुरा यसभित्रको 'कन्टेन्ट'ले प्रमाणित गर्दछ । दुर्भाग्यको कुरा त 'अपदस्त जिन्दगी' हामीलाई सुम्पेर यसका लेखक स्वयम् जिन्दगीबाटै अपदस्थका छन् । श्रद्धासुमन ।

**११ फेब्रुअरी, २०१९, केएसए**

# हरिदाइ साथ र सहयोगलाई सधैं सम्झनु हुन्थ्यो

## खडग बहादुर आले

स्व. हरिखेवा दाइ र म महिनाले मात्र फरक यद्यपी वहाँको भाई भीमसँग पढे । त्यो वेला वहाँलाई देखिनँ । पछि बुझ्दा वहाँ सानैदेखि धनकुटा पढनु भएछ । दाइसँग पटकपटक गरेर धेरै उठवस भयो । वहाँसँग रहदा रमाइलो, उल्लासमय रहन्थ्यो । वहाँ भूमिगत रहेको वेला वहाँको काठमाडौं कोठामा म, टेकजङ्ग, शान्त समाल र एकजना लामो कपाल भएको कलाकार थिए । दाइ सबैलाई मज्जाले जिस्काईरहनु हुन्थ्यो । हाँस्नको लागि दाइकै सेरोफेरो जानुपर्थ्यो । अहिले सम्झन्छु साह्रै मज्जाले भन्नुहुन्थ्यो र हामीलाई हँसाउनु हुन्थ्यो ।

वहाँ भूमिगत हुनुभन्दा अगाडि गाविसको अध्यक्ष जित्नु भएको थियो । पछाडि माओवादी शान्ति वार्तामा आएपछिको चुनावमा वहाँ सभासदको उम्मेदवार बन्नुभयो । मलाई वाइसिएल (योङ्ग कम्युनिष्ट लिग) गाउको संयोजक बनाउनु भयो । हामीले जोडतोडले सहयोग गर्‍यौं र विजयी पनि हुनुभयो । चुनाव जितेको २ दिन पछाडी वहाँ जितपुर आउनु भयो म पनि पुगे र म सँग हात मिलाएर धन्यवाद भनी आभार ब्यक्त गर्नुभयो । त्यसपछि धन्यवाद दिन सान्नेतर्फ हान्निनुभयो ।

अर्को रोचक घटना चाहि हिले नजिकको त्रिशुलेबाट जितपुर गाडी बाटो लैजाने की सिधुवाबाट जितपुर लैजाने भन्ने बैठक जितपुरमा हुँदैथियो । दाइले फोन गरेर आउनुपर्छ भन्नुभयो र म र हिमा तिगेला पुग्यौ । वहाँ पुगिसक्नु भएको रहेछ र

जितपुर बजारको वरको फेदमा पार्टी कार्यालय जस्तो घरमा बैठक चल्यो सबैजना गाडिबाटो सिधुवाबाट जितपुर ल्याउने पक्षमा बोले । अन्तमा हरिदाइले मज्जाले सबैलाई सम्झाउनु भयो । त्यो वेला हात्तिखर्क, मूर्तिढुङ्गा, जितपुर र लेगुवा इलाका न ४ पर्दथ्यो र उक्त बाटोले चारवटै गाँउलाई छुनुपर्दछ । त्रिशुलेबाट जितपुर जोड्दा छोटो बाटो पर्छ र बाँकी ५ किमी जितपुरबाट लेगुवा तर्फबाटो बनाउन सकिन्छ भन्ने तर्क राख्नु भएपछि अन्ततः सबै सहमत भए । लाग्छ प्रष्टाउने र तर्क गर्ने पनि कला हुनुपर्दो रहेछ जुन हरिदाइमा थियो ।

त्यसपछि म विदेश हान्निए । मलाई विदेश मै फोन गरेर खड्ग जी अब हात्तिखर्क जितपुरको बाटो राम्रो बनाईने भयो भनेर फोन गर्नुभएको थियो । वहाँ साथ र सहयोगलाई सधै सम्झनु हुन्थ्यो ।

**हात्तिखर्क सुन्तले, हालः साउदी**

# अनेक अविस्मरणीय पल हरि दाजुसँग

**विश्वास दीप तिगेला**

हरिराज खेवा दाजु अर्धभूमिगत रहनु भएको बेला अनामनगर नजिक चेपबाट छिर्दैछिर्दै जाँदा पुगिने भित्ताको घरमा वहाँको डेरा थियो। एकदिन बिहानैदेखि हामी सँगै हिडडुल गऱ्यौ र अनामनगर भित्रिचोकमा धनकुटा हात्तिखर्क मगरगाँउका एकजना युवा मित्रसँग जम्काभेट भयो। अध्यक्ष (खेवा) ज्यू मेरो त काठमाडौंमा सोचेको कामै बनेन र खर्चपनि छैन केही सहयोग गर्नुपऱ्यो भनी ति मित्रले आग्रह गर्नुभो। त्यसबेला हरि दाजु गाविस अध्यक्ष हुनुहुन्थ्यो र कष्टपूर्णको राजनैतिक भूमिगत। वहाँको गोजीमा केही दिनदेखि १२० रूपैया थियो र ती सबै पैसा माग्ने गाँउको भाईलाई दिनुभयो। म आफैलाई चाहि माग्ने ब्यक्ति पनि गजब लाग्यो र दिनेले पनि अलिकति राखेर दिएको भए हुनेथियो वा नदिएको भएपनि हुनेथियो लाग्यो। माग्ने मित्रलाई मैले राम्ररी चिनेको थिइनँ र हिमचिम पनि थिएन। सम्भवतः ती माग्ने युवाको भन्दा खराब हालत हरि दाजुको थियो। वहाँ मेरो वढाको छोरा त्यसैले दाजुभाई त्यसदिन बिहानदेखि बेलुकीसम्म सँगै हिड्यौ। त्यो पैसा दिएको रोचक लाग्यो। हरि दाजु परेको बेला अरुलाई पैसा दिनुहुन्थ्यो र खुवाउनु हुन्थ्यो आफैचाहि बरु भोकभोकै हिड्नु हुन्थ्यो।

हात्तिखर्क ६ को एक प्राथमिक विद्यालयमा हेडमाष्टर गर्दैगर्दा बेलाबखत काठको लकडी पनि धरान झार्नु हुन्थ्यो। त्यो बेला ५ लाख, ८ लाखको काठ बेच्यो रे आदि सुनिन्थ्यो। वहाँले हिलेमा खेवा फर्निचर उद्योग पनि खोल्नु भयो। निरन्तर शिक्षक काम गर्दागर्दै नेकपा एमालेको तर्फबाट गाविस अध्यक्षमा चुनाव लड्

नुभयो । आफ्नै काकाको छोरा लोकेन्द्र तिगेला दाजुसँग चुनावमा लड्दा दोब्बर मत ल्याई जित्नु भयो र एमाले फूटेपछि वहाँ मालेमा जानुभयो र त्यसको केही समयपछि माओवादीसँग नजिकिनु भयो । हरिदाजु एक्लै एकदुइजना साथी लिएर माओवादीको नेपाल बन्द कार्यक्रममा हिले बजार बन्द गराउदै हिड्नु हुन्थ्यो । त्यो बेला माओवादीको त्रासदी थियो । स्व. दाजुकै अनुसार धनकुटा प्रहरी कार्यालयको प्राङ्गणमा एक इन्स्पेक्टरसँग राजनैतिक विवाद भयो । हरि दाजुले राजनीति गर्ने भए वर्दी फ्याँकेर हामी जस्तै बाहिर आउनुहोस् भनेर हप्काए पछि ती इन्सपेक्टरले द्वन्द्वकालमा दाजुलाई मार्न खुबै पछ्याए ।

छातीमा कोठी हुनेले गोली खाएर मनुपर्ने हुन्छ भन्दै छातीको कोठी देखाएको याद छ । लडदै जाँदा मरिन्छ भने मरौला भन्दै जनयुद्धमा होमिनु भयो । वहाँले भक्तपुरका खेततिर भएको गोठतिर धेरै रात बिताएर राजनीति गरेको सुनाउनु भयो । वहाँले चाहेर पनि जनसेना हुने सङ्गत पाउनु भएन तर राजनैतिक रूपबाट खटनु भयो । द्वन्द्वकालमा जितपुर ढोडेका एक मगर परिवारले जो काठमाडौं जावलाखेलको टेलिकम कार्यालय नजिक डेरागरी बस्नु भएको मगर परिवारले आश्रय दिएको कुरा दाजुभाई जुनबेला त्यो इलाकामा पुग्थ्यौ । सधैं हृदयबाटै उक्त कुरा सुनाउनु हुन्थ्यो । ति दाइ र भाउजुको नाम मैले सम्झन सकिनँ ।

वि.स. २०५० ताकाको कुरा हुनुपर्छ । हामी धनकुटा देव्रेबासको आले लजको एकै कोठामा बस्थ्यौ । इटहरीबाट भेट गरौं भनी डा. बाबुराम भट्टराईको फोन आले लजको टिभी कोठामा आयो । त्यतिबेला डा. भट्टराईहरूले जनयुद्ध शुरु गरिसकेका थिएनन् । हरिदाजु देब्रेवासबाट बेलाबखत हात्तिखर्क वहाँकै घरनजिकको स्कुलमा पढाउन बस चढेर जानुहुन्थ्यो । त्यस बिहान वहाँ के गर्ने नगर्ने दोधारमा पर्नुभयो र मैले पढाउन स्कुल जान दबाब गरे र वहाँ पढाउनै जानुभयो । डा. भट्टराई धनकुटा आएर सञ्जय श्रेष्ठ सरलाई भेटेर फर्कनु भएको कुरा सुन्नमा आयो । त्यो वेला भूमिगत शब्द सुन्दै डर लाग्थ्यो । धनकुटाका त्यसवेलाका माओवादी नेता मानिन्थ्यो ठाकुर बराल भेष बदली-बदली हरि दाजुको कोठामा आईरहेका हुन्थे ।

लिम्बूवान मुक्ति मोर्चाका संस्थापक मध्येका एक भक्तराज कन्दङ्वा हात्तिखर्क हरि दाजुकै घरमा झण्डै एक हप्ता बसेका थिए र मोर्चाको अवधारणा र विधान वहाँले नै बनाइदिएका थिए । त्यसैले पनि हरिदाजु र कन्दङवाको सम्बन्ध सधैं गाढा रहयो । भक्तराज स्मृति प्रतिष्ठानका अध्यक्ष वहाँ नै हुनुहुन्थ्यो । नाटक लेख्ने र खेल्ने हरि दाइ २०५५ को अधिराज्यव्यापी रेडियो नाटकमा त नेपाल प्रथम नै हुनुभयो । पचास रूपैयाको तमसुक नामक नाटकको अभ्यास धनकुटाको माथिल्लो कोप्चेमा गर्दैगर्दा हरि दाजुको अभिनय अरुले सिको गर्न सक्दैन थिए र उनीहरू रोचक मान्थे । कोठा आएर झण्डै एकपेज डाइलग कण्ठ बनाउनु पर्ने । वहाँले कण्ठ बनाउदा सुनेकै भरमा केही डाइलग मलाई पनि कण्ठै हुन्थ्यो ।

एक बिहानको कुरा हो म घर फर्कनु पर्नेभयो । देब्रेवासबाट त्रिशुले पुग्न ८ रूपैया लाग्थ्यो तर म सँग एक पैसा पनि थिएन । मेरो केही सिप लागेन । कोठामा हरि दाजुको निलो जिन्सको पाइन्ट झुण्डिएको थियो । पाइन्टको पछाडिपट्टिको गोजीमा २ रूपैया भेट्टाए । त्यो पैसा लिएर देब्रेवासबाट बसको हुटमा चढेर घर फर्किए । त्यो घटना खुबै यादगर रहयो र म जागिर गर्न बाहिर मुलुक पुगेर फर्किएपछि धनकुटाको कोरली चोक नजिकको दाजुको डेरा घनेन्द्र श्रेष्ठको घरमा पुगे र त्यहि एकरात सुते अनि वहाँको नाटकहरू भेला गरेर अपदस्त जिन्दगी नामक एकाङ्की नाटकको प्रकाशक बने त्यो मैले २ रूपैया लिएको प्राश्यचित स्वरूप पनि थियो ।

त्यहि वर्ष किरात याक्थुङ चुम्लुङको चौथो राष्ट्रिय सम्मेलन इलाममा थियो । हरि दाजु चुम्लुङ जिल्ला सचिव र म चाहि पर्यवेक्षक भएर इलाम पुग्यौ र इलामको बस स्टेशन नजिक खड्काको होटलमा बस्ने ब्यवस्था रहेछ । महाधिवेशनमा प्रगति प्रतिवेदन प्रस्तुत गर्ने पालो आयो । प्रतिवेदन लिएर ड्यासमा चढ्नु भयो र प्रत्येक पेज पढ्दै पल्टाउदै पढेर सिध्याउनु भयो र कार्यक्रम संचालन गरिरहनु भएका महासचिवले त्यो प्रतिवेदन यता दिनुहोस भनेर माग्नु भयो । हरि दाजुले -'हैन एकछिनपछि दिन्छु' भनेर प्रतिवदन नदिई उम्कनु भयो । वास्तवमा त्यो फुलिसकेपमा केही लेखिएकै थिएन, तर कसैले थाह पाएनन् खाली भनेर । म स्वयं सहभागी थिएँ देख्दा हरि दाजुले लेखिएको प्रतिवेदन झैं गज्जबले दिनुभयो । सबैले

उस्तै देखे सायद तर त्यो नलेखिएको खाली फुलिसकेपको पानाहरू मात्र थिए । वहाँले प्रतिवेदन प्रस्तुत सक्नुभए लगतै हामी दुवैजना होटल गयौ । वहाँ रफ गर्ने, म सफ सार्ने ४५ मिनेटमा ९ पेजको प्रतिवेदन बनाएर बुझायौ । त्यो घटना पनि अविस्मरणीय रहयो ।

इलामबाट इटहरी आईपुगेपछि हामी दुई रात्री बस चढ्यौ । एक कन्टक्टरले गाँउबाट आएका निमुखा यात्रुलाई अभद्र ब्यवहार गर्दै थियो । हामीले देख्दै थियौ । हरि दाजुले त्यो दुर्व्यवहार गर्ने कन्टक्टरलाई एक झापड हान्नु भयो । उ तेरो ग्राहक हो, यात्रु हो किन यस्तो व्यवहार गर्छस् भनी हप्काउनु पनि भयो । अरु यात्रुहरूले पनि साथ दिए । विशेषतः गरिब दुःखीहरू माथिको अन्याय सहन नसक्ने दाजुलाई कन्टक्टरले माफै माग्नु पऱ्यो । कन्टक्टरको व्यवहार सह्य थिएन ।

हरि दाजु हेडमाष्टर हुँदैको कुरा हो । हाम्रा गाउँकाले गाई, गोरु बेच्न दमक (दोभान) लैजान्थे । गोरु व्यापारीहरूले साँझपख हिले बजारमा लोकेन्द्र तिगेला (पूर्व प्रधानपन्च तथा गाविस अध्यक्ष)लाई भेटे । वहाँसँगै हरिदाजु, म र लोकबहादुर मादेन लुङ्गा थियौ । गोरु ब्यापारी खेवाङ् कार्की र अर्का एकजना थिए उनीहरूले खाजा खाउ भनी अनुरोध गरे । हिलेमै रातको लगभग ११ बज्यो र हिड्दै हिड्दै त्रिशुलेबाट हात्तिखर्क तर्फबाटो लाग्यौ । अलिलि जुनेली रात थियो । त्रिशुलेबाट हात्तिखर्क लाग्दै गर्दा लोक लुङ्गा कट्टुसको बोटतिर चिप्लिएर झर्नुभयो । अध्याँरोमा अप्ठयारो बाटोहुँदै घरनजिक पुगेपछि हरि दाजु र म चाहिँ घर मास्तिरको बारीमा राखेको हिउँदे छाप्री गोठमा सुत्यौ । थाँकेको र निन्द्रा धेरै लागेको हुनाले एकछिन त दुवैजना निदायौं तर केहीछिन पछि त यति जाडो भयो की वरिपरिको पराल र घाँस तानेर ओड्यौ तातो भएन । गुन्द्रीको टुक्रा समेत ओड्यौ । तर, माघ महिनाको जाडो थाम्न सकिएन । त्यो क्षण सधै हामीमा रमाइलो गर्ने घटना थियो ।

हरि दाजुको जवानीको कथा पनि सम्झन लायक नै थियो । सिधै भन्न नसक्ने तर वहाँको 'वडि ल्याङ्वेज'ले बोल्ने । साह्रै भद्र व्यक्तित्व । केटी मगनीको मेसो चल्दै गर्दा, एकजना सोल्टिनी तर्किनुभयो र गाँउमा केहीले कुरा पनि काटे तर भएको चाहि के

भने जसलाई मगनी गर्ने कुरा हुँदै थियो । उनैले उनीको साथीसँग गफ गरेको देखेकी थिइन रे । यो कथा हरिदाजु र मलाई बाहेक सम्भवतः कसैलाई थाह छैन ।

पहिला गाविस अध्यक्ष हुँदा पनि कानुन मुताबिक कडिकडाउ गर्नाले निक्कै चर्चित र लोकप्रिय हुनुभयो । र, अर्थराज्य मन्त्री हुँदा पनि प्रक्रिया नपुगेको भनी दुइचार वटा महत्वपूर्ण फाइलहरू अस्वीकृत गरिदिनु भएपछि वहाँ अर्थमन्त्रालयमा पनि चर्चित हुनुभयो ।

वहाँ राजनीतिमा ज्यादै इमान्दार । मुलघाटबाट टनल बनाएर धरानमा मोटर बाटो झिक्ने र तमोरै तमोर गाडि बाटो बनाउदा ताप्लेजुङको माथिल्लो भागमा बसोबास गर्नेलाई पनि धरान नजिक हुन्छ त्यसैले यो काम ढिलोचाडो गर्नुपर्छ वहाँको सपना थियो । त्यस्तैगरि धरानलाई लिम्बूवानको राजधानी र खम्बुवानले पनि दावी नछाडे धरान नै राजधानी बनाउनुपर्छ भन्ने वहाँको स्केच थियो । र, एकै सहरमा दुई राज्यको राजधानीको अभ्यास छ भन्नुहुन्थ्यो ।

विश्वास मैले मलाई साह्रै मनपर्ने गीत लेखेको छु । रेकर्ड गर्नुछ, धनकुटा डाँडागाँउका नविन थापा जीले त्यो शब्द लैजानु भएको छ । त्यसलाई राम्रो स्टुडियोमा रेकर्ड गर्नु छ । दाजुभाईको सल्लाह भइरहेको थियो । उसो त म दोस्रो छुट्टि जाँदा काठमाडौमा एउटा ट्रान्जिट घर चाहिन्छ भनेर सल्लाह र दबाब दिने पनि हरि दाजु नै हुन् र जग्गा किन्ने अन्तिम चरणमा बढि नै दाम लगाएपनि केही फरक नपर्ने सुझाउनु भयो र भयो त्यस्तैपनि ।

पहिलो संविधान सभाको प्रत्यक्ष निर्वाचनमा पूर्व प्रधानमन्त्री सूर्यबहादुर थापालाई पराजित गरि विजयी बन्नुभयो र संविधान सभाको संवैधानिक समितिमा उमेरका आधारमा सबैभन्दा कान्छो सदस्य बन्नुभयो । अर्को चुनाउ राज्य र निर्वाचन क्षेत्रको पूर्नसंरचना भएर मात्र हुने भएकोले कुन क्षेत्रमा खट्ने द्विविधा रहयो । धनकुटाको छथर र तेह्रथुमको छथरलाई मिलाएर एक छथर जिल्ला बनाउनु पर्ने वहाँको सपना थियो । त्यसपछि वहाँ पार्टी प्रति झनै कटिबद्ध भएर नेकपा (माओवादी केन्द्र) को केन्द्रीय सदस्य, पार्टीको जिल्ला अध्यक्ष, लिम्बूवान मुक्ति मोर्चाका केन्द्रीय

महासचिव, भक्तराज कन्दङ्वा स्मृति प्रतिष्ठानका अध्यक्ष बन्नुभयो र वहाँ अत्यन्तै सक्रिय तथा लोकप्रिय बन्नुभयो ।

दोस्रो संविधान सभा २०७० को चुनावमा वहाँ एनेकपा (माओवादी) बाटै दोस्रो पटक सभासदको उम्मेदवार हुनुभएको थियो । वहाँसँगै जितपुर आन्द्रुङ पुगेका थियौ । वहाँको गुणको असाध्य प्रसंसा गर्नुभयो त्यहाका जनताले र सँगै पाखीवास कसेनी राती अबेरसम्म पुगेर फर्कियौ । तर यसपटक धनकुटा क्षेत्र न २ को माहोल अर्कै थियो जुनकुरा अगावै वोध भइसकेको थियो । वहाँको वरिपरि सधै जनताहरू वाक्लो भईरहने, प्रायजसो समय हसाएरै कार्यकर्ता र साथीहरूलाई खुसी बनाइरहेका हुन्थे हरिदाइले । वहाँको सपनाहरू साह्रै धेरै थिए । देश बनाउने, राज्य (प्रदेश) बनाउने र राजधानी बनाउनेमा वहाँको तर्क साच्चै गजब लाग्थ्यो । वहाँले देशबिदेशमा हुनुभएको याक्थुङहरूलाई जोड्ने प्रयास स्वरूप याक्थुङ सोसाइटीडटओआरजी भन्ने डोमेन पनि दर्ता गरि शुरु गर्नुभएको थियो । वहाँका फूटकर कथा, लघुकथा, कविता र एक एकाङ्गी नाटक संग्रह अपदस्त जिन्दगी पुस्तक पनि प्रकाशित छ । वहाँको रचनाहरू पनि अन्यको तुलनामा निक्कै उत्कृष्ट मानिन्थ्यो । वहाँ नाटक क्षेत्रकालाई विशेष श्रद्धा गर्नुहुन्थ्यो । धनकुटाकै अशेष मल्ल दाइलाई वहाँले आदर्श पात्र मान्नुहुन्थ्यो । वहाँले नाटक लेख्नुभन्दा पहिला सुनाउनु हुन्थ्यो । कस्तो लाग्यो भनी सोध्नुहुन्थ्यो तब मात्र त्यो कथालाई नाटक लेख्नुहुन्थ्यो ।

उसो त वहाँले ब्लु मुन ओभर्सिज कम्पनी पनि केही महिना चलाउनु भयो । ब्लु मुन के हो ? लामो अन्तरालमा मात्र उदाउने नीलो जुन भाग्यमानिसले मात्र देख्न सक्छ आदि वहाँको वर्णन आजै जस्तो लाग्छ । तर चाडै त्यो ओभर्सिज कम्पनीको काम छोड्नुभयो ।

हरिदाजु मन्त्री हुने हल्ला थियो । मन्त्री बन्नु भन्दा दुईरात अघि मैले वहाँलाई अनुरोध गरेर ठमेल लगे तर ज्यादै सतर्क हुँदै केहीबेर अलमल गरेर फर्कियौ । त्यसैको पर्सिपल्ट वहाँ अर्थराज्य मन्त्री बन्नुभयो । वहाँ मन्त्री हुनुभएको केही महिनापछि हङकङमा एमाओवादी पार्टी अन्तरर्गतको लिम्बूवान मोर्चाको अन्तरक्रिया कार्यक्रम थियो । त्यहि

कार्यक्रमको निम्ति म ब्रुनाईबाट हङकङ पुगेको थिए। राजनैतिक कार्यक्रम पछि हामी हङकङको प्रसिद्ध ओसन पार्कको पानीबोटमा चढदा भाग्यमानीलाई मात्र पानीको फोहोराले भिजाउछ भन्दै पानीमा बग्दैथियौ फोहोराले हरिदाजुलाई नै एकपटक मात्र होइन दुईपटक भिजायो। खुबै रमाइलो भएको थियो।

गत १३ साउन २०७३ का दिन पार्टी कार्यकर्ताको आफन्तको शुध्याईको कामको लागि धनकुटाको मारेककटहरे पुगेर फर्कनेक्रममा चित्रेबाट बस चढ्नु भएको र लगभग १५ मिनेटमै सिधुवा नजिक ब्रेक फेल भयो। त्यसबखत पनि ड्राइभरलाई देब्रेपट्टि भित्तामा बस ठोक्काउ भनी निर्देशन दिईरहनु भएको थियो रे। वहाँको सल्लाहलाई ड्राइभरले मानी दिएको भए यात्रुहरू सामान्य घाइते हुन्थे होलान् तर त्यत्रो खति पक्कै हुने थिएन। ड्राइभरले चाहिँ अलितल तेर्सो बाटो आउने भएकोले त्यहा बस रोकिएला भनी, त्यो नरोकिने बसलाई भिरालोमा विस्तारै लैजान्दै थिए रे तर अफसोच घुम्तिमा स्टेरिङ नघुमेको कारण शिधै भिरमा खस्न गयो र भयानक दुर्घटना हुन पुग्यो। नेता खेवा अप्ठ्यारो अवस्थामा पनि नेतृत्व गर्दागर्दै बित्नु भयो। जेहोस् हुनेहार दैव नटार यस्तै भयो। भगवानलाई पनि राम्रा र असल मान्छे नै चाहिने। त्यसैले हामी माझबाट पूर्वका नक्षत्र अस्ताउनु भयो सधैंको लागि।

अन्तमा, वहाँको भौतिक स-शरीर हामी माझ नभए पनि वहाँका सपनाहरू हामी सँग छ। वहाँका मुटुको दुई टुक्रा सन्तान गुराँस, लारक अनि भाउजु गीता लगायत हामीलाई छोडेर सधैंको लागि जानु भयो। वहाँको आत्माले सधै शान्ति पाउन सकोस् कामना गर्दछौ। वहाँको सपनालाई पुरा गर्ने वाचा गर्दछौ। यो शोकलाई उर्जामा बदल्ने प्रण गरौ।

(**६ अगष्ट २०१६, युके, दुर्घटना लगतै लेखिएको**)

# काका हरिराजप्रति समर्पण

**कमल दीप तिगेला**

राष्ट्र परिवर्तनको सपना बोकी
हिडेको एउटा गाँउले ठिटो
घर छोडदा एकजोर लगाएको
कपडा बाहेक खाली रितो
महान सपनाको पोको बोकी
शहर छिरेको एउटा गाँउले ठिटो
आँधिहुरीसँग लडाई लड्दै
खोला नाला, भीर पाखासँग
पौठजोरी खेल्दै
दुश्मनीको निशानीमा पनि कति नझुकी
शहर पसेको एउटा गाँउले ठिटो
हरेक बाँधा अडचनसँग जुध्दै
जस्तोसुकै परिस्थितीमा पनि लड्दै
कहिल्य नझुक्ने गाँउले ठिटो
परिवर्तनको सपनामा भौतारिएको
स्वच्छ स्वाभिमान निडर कर्मठ योद्धा
हंसिलो मुहार चम्किलो ती आँखा
हरेक मान्छेसँग बोल्ने भाका

युवाहरूको मनमष्तिकमा
अटाएको गाँउले ठिटो
परिवर्तनको सम्भाव्यताको खानी
सादा जीवन उच्च विचारका धनी
आज
एक्कासी अस्ताउदा
उसको भौतिक शरीरमाथि
चित्तामा दनदनी आगो दन्काउदा
सारा युवायुवतीको मन विछिप्त भएको छ
बुढापाकाहरू आफैलाई धिकार्दै रोईरहेका छन्
आज उसको परिवर्तनको सपना पनि
उसैसँग जलिरहेछ
सम्भाव्यताको खम्बा ढलेको छ
बलिरहेको दियो निभेको छ
गाँउ नै अन्धकारमा रोएको छ
सारा युवाहरूको ढुकढुकी नै
बन्द भएको छ ।

(**तमोर घाटमा जल्दै गर्दा लेखिएको कविता**)

# मेरो स्मरणमा स्व. हरिराज खेवा

**खडगबहादुर खेवा (तिगेला लिम्बू)**

धनकुटा जिल्ला छथर जोरपाटी गाउँपालिका वडा नं. १ हात्तिखर्क देविनगरका बडाबाबु हृदयमान खेवा तिगेला लिम्बू र बडीआमा तिर्थमाया खापुङबाट जन्म भएका छोरीहरूमा जेठी छोरी मेनुका खेवा तिगेला लिम्बू, माईली मञ्जु खेवा तिगेला लिम्बू, साईली सिर्जना खेवा तिगेला लिम्बू र कान्छी पवित्रा खेवा तिगेला लिम्बू, छोराहरूमा जेठा खगेन्द्र बहादुर खेवा तिगेला लिम्बू, माईला हरिराज खेवा तिगेला लिम्बू र कान्छा छोरा भीम बहादुर खेवा तिगेला लिम्बू हुन् । जेठी छोरी मेनुका तिगेला लिम्बू उमेरले मेरो दिदी पर्नु हुन्थ्यो र अरू सबै छोराछोरीहरू भने मेरो भाई बहिनी पर्छन् । हरिराज खेवा उनको श्रीमती गीता गुरुङ र दुई छोरीहरूमा जेठी गुराँस खेवा तिगेला र कान्छी लाराक खेवा तिगेला छन् । अहिले उनको श्रीमती गीता गुरुङ उनको मृत्यूपछि उ संलग्न भएको राजनितिक पार्टीमा आबद्ध छन् । भाइ भीमबहादुर खेवा तिगेलाको श्रीमती र दुई छोरा छन् । भीमबहादुर खेवा तिगेला छथर जोरपाटी १ हात्तिखर्कमा श्री भारती उच्च माध्यामीक विद्यालय का प्रिन्सिपल छन् ।

हरिराज खेवाको परिवार शिक्षीत र आर्थिक सम्पन्न परिवारमा पर्छ । गाउँ टोल र वडा नं. एउटै भए पनि हरिराज खेवासँग बेलाबखत संयोगले मात्र भेट हुने गर्थ्यो । जतिबेला म धनकुटा गोकुण्डेश्वर माध्यामिक विद्यालयमा कक्षा १० मा पढ्दा धनकुटा टुँडिखेल नेरको गोकुण्डेश्वर निम्न माध्यामिक विद्यालयमा कक्षा ८ मा पढ्ने गर्थे । अध्ययनको क्रममा म, खगेन्द्र, हरिराज र जगत खेवा तिगेला एउटै

डेरामा बस्ने गथ्यौं । केहि वर्षपछि म काठमाण्डौ बसें । हरिराजबाट अध्ययनलाई निरन्तरता दिने काम भयो । स्नातक तह पुरा गरेपछि गाउँकै एक विद्यालयमा शिक्षण पेशामा उनि लागे । एक समय हात्तिखर्क गाविसमा अध्यक्षको जिम्मेवारी पनि सम्हाले । म गाउँमा जाँदा कुनै शुभकार्य, दुःखको कार्य र कुनै कार्यक्रहरूमा मात्र भेट हुने गर्थ्यो । पछि काठमण्डौ आए, म्यानपावर सञ्चालन गरे, ट्राभल एजेन्सी खोले । काठमाण्डौ आएपछि भने भेटघाट बाक्लो भयो । हरिराज खेवामा राजनीतिक प्रतिभा मात्र नभएर उनि साहित्यिक विधामा पनि उत्तिकै कलम चलाउने गर्थे । उनले लेखेका पुस्तकमध्ये अपदस्त जिन्दगी पनि एउटा हो जुन मैले पढेको छु ।

हरिराज खेवा राजनितिक पृष्ठभूमिको ब्यक्ति पनि भएकोले मेरो अनुमानमा राजनिति उनको रगतमै थियो । शुरुवातमा वामपन्थी तथा प्रगतिशिल बिचारधाराप्रति आस्था राख्ने गरेको थियो भन्ने अनुमान छ । तर सक्रिय राजनितिमा भने वि.सं. २०६३, २०६४ सालमा नेकपा माओवादीले जनयुद्ध बिसाएर शान्ति वार्तामा आएपछि सो पार्टीमा बढि सक्रिय भए । उनी लिम्बुवान राष्ट्रिय मुक्ति मोर्चाका अध्यक्ष स्व. भक्तराज कन्दङवाबाट प्रभावित भएको बताउने गर्थे । छोटो अवधिमा नै पार्टीलाई आफुप्रति विश्वास दिलाउन सके । त्यतिमात्र नभएर पहिलो संविधानसभाको चुनावमा सभासद पदको लागि समेत टिकट पाए र निर्वाचित समेत भएपछि अर्थ राज्यमन्त्री समेत भए । अर्थराज्य मन्त्री हुँदाको समयमा नै उनले आफ्नो पहलमा एशियन डेभलपमेण्ट बैंकको आर्थिक सहयोगमा त्रिशुले जितपुर सडक निर्माण समपन्न भएको गाउँलेहरू बताउँछन् । उनि आत्मविश्वासी, प्रभुत्ववादी, क्षमतावान र प्रभावशाली ब्यक्ति थिए । महत्वपूर्ण एजेण्डाहरू कार्यन्वयन गर्न सम्बन्धित निकायहरूमा र उपल्लो तहका प्रमुखहरूसित सहजका साथ आफ्नो पहुँच राख्न सक्थे । धनकुटाको सिधुवामा बस दुर्घटनामा परि भएको असामयिक निधनले तिगेला खेवा समाज, गाउँ समाज र हरिराजसँग सम्बन्धित आबद्ध राजनितिक पार्टीले एक जना योग्य व्यक्ति गुमाएको छ र यस्तो योग्य ब्यक्तिको अभाव महसुस भएकै छ । *(छथर जोरपाटी गाउँपालीका १ हात्तिखर्क धनकुटा, हाल: काठमाडौं)*

# क. हरिराज खेवाको सम्भनामा

**श्रीप्रसाद जबेगु**

गौतमीऋषिद्वारा अभिशप्त अहिल्या झैं म निर्जीव र निशब्द थिएँ । जीन्दगीमै सबैभन्दा धेरै विश्वास गरेको मेरो मातृसंस्थाबाट प्रहार भएको अपमानको नङग्राले कोपरिएको थिएँ । चिथोरिएको थिएँ । मेरो राजनीतिक इतिहासको मृत्युशैयामा नेतृत्वद्वारा गरिने आफ्नै मुल्याङकनसँग भीख माग्दै छटपटिरहेको थिएँ, चाहे त्यो नेतृत्वका सामु मेरो अरण्यरोदन नै किन नहोस् । ठिक त्यतिबेला स्वर्गीय कमरेड हरिराज खेवाको विषयमा केहि लेखिदिनु पऱ्यो भन्ने अनुरोध पत्र कविता कन्दङ्वामार्फत मलाई प्राप्त भयो । मलाई लेख्न खासै पारा आउँदैन र म कुनै लेखक पनि होईन । नलेखी धर नपाइने, आफुलाई लेख्न नआउने बीचको अन्योलतामा निक्कै समय पिङ खेलीरहेँ, अल्मलिरहेँ । मनमनै सोचेँ, अब के लेखौं त ? श्रमिक सर्वहारावर्गका ढुकढुकी एवं नेपाली जनवादी सांगीतिक आकासमा कहिल्यै नअस्ताउने ताराको रूपमा स्थापित छ, जुठबहादुर खडगी (श्रद्धेय क. जे. वी. टुहुरे ।) वहाँले मदन भण्डारीको अकल्पनीय अवशान भएकोबेला "मृत्युपनि मान्छेपिच्छे फरक हुँदोरहेछ । देशको छोरो मर्दाखेरी देशै रुँदोरहेछ ।" भन्ने गीत गाएर जनवादी गीत संगीतको उचाइलाई अझ थपेका थिए । जुन गीत मर्मस्पर्सीमात्र रहेन, कालजयी पनि बन्न पुग्यो । जसले गर्दा विशेष विशेष समयहरूमा अझैपनि त्यो गीत राष्ट्रिय स्तरमा घन्कीरहेको हुन्छ ।

२०७३ साल श्रावन १३ गत्तेका दिन यहीं गीतलाई व्यवहारिक रूपले अनुभूत गर्नु पर्ने भयानक लाचारीको क्षण आईपऱ्यो । त्यो घडीलाई अभिशप्त क्षणको रूपमा लिए, सबैले आ-आफ्नै स्मृतिपटलबाट । तेऱ्हथुमदेखि धरानतिर आउँदै गरेको बस

धनकुटाको सिधुवामा दुर्घटना हुँदा ९ जना यात्रुहरूको अकालमा मृत्यु हुनपुग्यो । त्यहीं दुर्घटनामा चित्रेबाट चढ्नु भएका माननीय संविधानसभा सदस्य एवं पूर्व अर्थराज्यमन्त्री क. हरिराज खेवाको समेत मृत्यु भएको थियो । वहाँको असामयिक र अप्रत्यासित निधनले सिङ्गो लिम्बूवानक्षेत्रको अविचल पहाड ढल्यो मानौ, भुकम्पले ढलेका धरहरा झैं । अब कहिल्यै पनि त्यो पहाडको आकार देख्न सम्भव छैन, केवल एक विक्षिप्त सम्झनामा चित्त बुझाउनु पर्नेछ । हामीले फोटोहरू हेरेर चित्त बुझाउनु पर्नेछ ।

क. जे.वी. टुहुरेले गाउँनु भएको गीतलाई त्यो दिन मूख्यतः या लिम्बूनवासी र आममा नेपाली जनताले फेरि एकपटक सम्झन पुगे । क. हरिराज दुर्घटनामा परेको खबर सुन्ने बितिकै ब्रेक लगाएको गाडी जस्तै धेरै मान्छेहरूको सास तलको तलै र माथिको माथि नै अड्किएको महसुस भयो । मान्छेहरू चुक्चुकिए । रोए । कराए । यी सबै कुराहरू, यथार्थको सामु केवल अरण्य रोदन भएर गयो, अन्ततः तितो सत्यलाई स्वीकार्नु सिवाय कुनै उपाय भएन । ढुङ्गाको चेपबाट रसिएको पानी जस्तै आँखाभरी अटेस-मटेस आँसु लिएर अन्तिम श्रद्धाञ्जलीमा सामेल भए । जुन पीडामय क्षणको प्रत्यक्ष अनुभूतिकर्ता म पनि एक थिएँ ।

प्राकृतिक नियमानुसार संसारका जुनसुकै मान्छेले पनि मृत्युको शर्तमामात्र जन्म पाएको हुन्छन् । यो अकाट्य सत्यलाई बदल्न सकिदैन । तैपनि मानवीय स्वभाव अनुसार अपवादवाहेक जोसुकै मृतकहरूको आफन्त, नातागोता र इष्टमित्रहरूले कहिल्यै मर्नु नपरोस्, अजम्बरी भइरहनु परोस् वा अझै एकाधवर्ष बाँच्नु परोस् भनेर सोच्नु अस्वभाविक होईन । किनकी यो कल्पनामा सबै मान्छेहरू दौडिरहेका हुन्छन् तर विडम्वना ! महाभारत कथाको भनाइ अनुसार यो दुनियामा भिष्म पितामहबाहेक अरु कसले पो इच्छामृत्यु पाएको थियो र ?

मैले व्यक्तिगत हिसावको जोड घटाउबाट भन्नुपर्दा मेरो हकमा भने, स्व. हरिराजसँगको सङ्योग पनि अचम्मकै छ । यस अर्थमा की, चिनजान वहाँकै घरबाट भएपछि श्रद्धाञ्जलीकै बेलामात्र वहाँको घरमा पुग्न पाइयो त्यो पनि १६ वर्षपछि ।

लिम्बूवान राष्ट्रिय मुक्तिमोर्चा नेपाल गठनको लागि २०५७ साल भदौ अन्तिम हप्ता अर्थात २५ गत्ते लुक्दै छिप्दै भूमिगत शैलीमा धनकुटाको मारेकटारे पुगेका थियौं । २६ गत्ते मेची कोशी उपक्षेत्रिय व्यूरो स्तरीय पार्टी प्रशिक्षण र २७ गत्ते लिम्बूवान स्वायत्तता र आत्मनिर्णयको अधिकार प्राप्तिको लागि लिम्बूवान राष्ट्रिय मुक्तिमोर्चा गठन गर्ने कार्यक्रम तय भएको थियो । त्यो कार्यक्रमबारे प्रहरी प्रशासनमा सुराक परेछ । पार्टी प्रशिक्षण सकेपछि प्रहरीद्वारा हामीमाथि घेरा हालियो । गोली चलाइयो । गर्नसक्ने सबै हर्कतहरू प्रहरीद्वारा भएपछि छापामार शैलीले प्रतिरोध गर्दै तितर वितर हुनुको विकल्प रहेन ।

म पाँचथर, भक्तराज कन्दङ्वा र प्रेम कन्दङ्वा तेह्रथुम, र बद्रिहाङ लिङ्गथेप संखुवासभा हामी चारजनाले मारेकटारेबाट सिधै ओरालो भाग्दै झरेपछि अरुणनदीको किनार भेटाएका थियौं र त्यसैलाई पछ्याएका थियौं, खालीपेट केवल त्यसक्षेत्रमा फलेका अम्बकको भरमा हिड्न परेको थियो त्यो दिन । त्यतिबेला एक पटकमात्र हिडेकोले होला, हिजआज ती ठाउँहरू मेरो विस्मरणमा परेका छन् । सम्झन खोज्दा पनि खासै मेसो आउँदैन । अरुणको बगरबाट उकालो लागेपछि जितपुर बजार आईपुगेको सम्झना छ । त्यहाँबाट तेर्सिएपछि कुनै एउटा खोला भेटिएको थियो । त्यहाँबाट उकालो लागेपछि साँझपख भक्तराज कन्दङ्वाको पहलमा कुनै घरमा बास बस्न पुगेका थियौ । त्यो घर नै हरिराज खेवाको घर थिएछ । भक्तराज कन्दङ्वा र वहाँबीच अगाडि नै चिनजान रहेछ ।

त्यो दिनको घटनालाई भोलिपछि विगत भईहाल्ने वर्तमानको अथाह तरेलीबाट हेर्दा लाग्छ, अरुण नदीको सुसाइमा शालीनता थियो । बल्ल बल्ल प्रहरीको घेरा तोड्न सफल हाम्रा हिडाइ र सास फेराइमा भने, आतेसहरू थिए होलान् । आक्रोसहरू थिए हेलान् । सायद त्यसैले गर्दा त त्यसक्षेत्रका हावापानी, जनजीवन, प्राकृतिक बनावट र संरचनाहरू स्मरणयोग्य हुन नसकेर केवल धुमिल सम्झनामा सिमित हुन पुग्यो । ती ऐतिहासिक दिन र घडीहरू सम्झना वाहेक दैनिकीमा टिप्पोट हुनै सकेनन् । साथै लाग्छ त्यसबेला हामीसँग अभावहरू उतिकै थिए । दुर्भिक्षताहरू पनि र, न हरिराज खेवाको घरमा साँझपख खाएको भातले दिनभरीको लागि चित्त बुझाउनु परेको थियो ।

हरिराज त्यसबेला हात्तिखर्क गाविसको अध्यक्ष जस्तो गरिमामय पदमा समेत आसिन थिए । बिहान घटेका घटना विवरण र दिनभरका पीडाहरूबारे आदान प्रदान भयो । राजनीतिक छलफलहरू चल्यो । पाडा होस् की पाडी, गोठालोलाई बिगौतीसँगमात्र सरोकार हुन्छ भने जस्तै त्यसबेला चिनजान र राजनीतिक छलफलहरूले मेरो लागि खासै अर्थ राखेन । अर्थ राख्थ्यो त दिनभर भोको रहेको पेटमा खाना र थकाइ मेट्ने बिश्रामले मात्रै । ती सबै प्राप्त भयो । हामी चारैजना आराम गरेर भोलिपल्ट बिहान बिदावरी लिएर धरान झरेका थियौ । जहाँ प्रहरीको घेरा तोड्ने बेलामा हतार हतार सम्पर्क गर्न सकिने स्थान भनेर भवानी बरालको घरलाई तोकिएको थियो ।

त्यो दिनदेखि हरिराज खेवासँग भेट हुन सकेन । मलगायत धेरै मान्छेहरू महान जनयुद्धको यात्रामा उत्पिडीत, दमितहरूको अधिकार खोज्दै थियौं । धनकुटामा कार्यरत जिम्मेवार साथीहरूसँग कुनै बैठक र कार्यक्रमहरूमा भेट हुँदा हरिराज खेवाको बारेमा मैले अनिवार्य सोध्ने गर्थे । किनकी संकटको बेला गुण लाएको महसुस भएरपनि होला, एकै पटकको भेटले पनि कहिल्यै नबिर्सने पात्रको रूपमा सजिएका थिए ऊ मेरो मनमन्दिरमा । प्रशासनसँगको अन्तरविरोधले गाउँघरमा नभएर काठमाण्डौंतिर रहेका जवाफ साथीहरूले दिन्थे । यसरी नै मृत्युसँग प्रत्यक्ष खेलवाड भईरहने जनयुद्धका क्षणहरू बिते । हाम्रो पार्टीले सात राजनीतिक दलसँग १२ बुँदे समझदारी गऱ्यो । त्यसैको बलमा २०६२/६३ को जनान्दोलन हुँदै देश शान्ति प्रक्रियामा आयो ।

शान्ति प्रक्रिया लगतै पार्टीको निर्देशन अनुसार किरात मोर्चाको काम लिएर जीवनमै पहिलो पटक म काठमाण्डौ गएँ । कोहिसँग चिनजान थिएन । सम्पर्क थिएन । हिमचिम थिएन । उपत्याकामा रहेका कैयौं मसिना चौक र गल्लीहरू अहिले पनि चिनेर साध्य छैन तर त्यसबेला त मूख्य मूख्य चौकहरू पनि चिन्दिनथें । कताबाट जाँदा कहाँ पुगिन्छ ? कुन ठाउँ जानलाई कुनबाटो हिड्नु पर्ने हो ? सवारी साधन कहाँ पाइने ? केहि थाहा थिएन । केही साथीहरूको भरमा आफ्नो जिम्मेवारीहरू पुरा गर्नुपर्दाको असहजता र अप्ठ्याराहरूको घिस्राइमा वामे सरिरहेको हुन्थें ।

नयाँबानेश्वर स्थित बालकृष्ण सम भवनमा एकदिन गायिका बेनुका राईको एकल साँझ रहेछ । दमिनीभीरका लेखक एवं मदन पुरुस्कार विजेता राजन मुकारुङ्गको पहलमा त्यो कार्यक्रमको प्रमूख अतिथि मलाई बनाइयो । राजन जी र म त्यहाँ पुगेर आराम गरी रहेको बेला चिने जस्तो लाग्ने मान्छे छेउमा आएर मलाई निक्कै बेर हेऱ्यो । मैलेपनि हेरेँ । होइन चिन्या-चिन्या जस्तो लाग्छ त ! भन्दै हात मिलायौं । परिचयको नविकरण गर्दा हरिराज खेवा हुनुहुँदो रहेछ । त्यसपछि हाम्रो सम्पर्क कहिल्यै टुटेन । वहाँको डेरापनि मेरो आपतकालीन आवास (सेल्टर) भयो । राजनीतिक सहयात्रा सँगै अगाडि बड्यो । २०६४ सालमा भएको पहिलो संविधानसभाको निर्वाचनमा सँगै चुनाव लड्यौं । हेमराज भण्डारी र हरिराज खेवा धनकुटाबाट म पाँचथर क्षेत्र नं. एकबाट । वहाँहरूले चुनाव जित्नु भयो, म हारेँ ।

चारवर्षसम्म रहेको पहिलो संविधानसभाको क्रममा बाबुराम भट्टराईको मन्त्रीमण्डल रहेको बेला क. हरिराज खेवा अर्थराज्य मन्त्री जस्तो गरिमामय पदमा नियुक्त भएर एक कशल नेतृत्वको भूमिका निर्वाह गर्नु भएको थियो । सर्वहारा वर्गीय दृष्टिकोण र निष्ठाप्रति अविचल योद्धा र लिम्बूवान स्वायत्तता प्राप्तिका एक होनहार खम्बा भएर उभिएका हरिराज खेवाको बाँकी सपनाहरू पुरा गर्ने प्रतिवद्धता र कार्यन्वयन नै वहाँप्रतिको सच्चा श्रद्धाञ्जली हो भन्ने कुरामा दुईमत छैन । श्रद्धेय नेतृत्वगणको बोली र व्यवहारले गर्दा सर्वहारा वर्गीय निष्ठाको राजनीति, कम्युनिष्ट आदर्शको कार्यशैली, मालेमावादी शिद्धान्तको समाप्ति नै हुन लागेको पो हो की भन्ने शंकास्पद परिस्थिति भएपनि हरिराज खेवाको असामयिक निधनले जवरजस्त थुपारेका शोकहरूलाई विवेकपूर्ण ढङ्गले शक्तिमा बदल्नुको विकल्प अब हामीसँग छैन भन्ठान्दै श्रद्धासुमन अर्पण गर्न सक्नु पर्दछ ।

**(लेखक पूर्व राज्यमन्त्री हुन् ।)**

# स्व. हरिराज खेवाप्रति श्रद्धा सुमन

**– झमक घिमिरे**

आफ्नो जीवनकाल भरीमा हाम्रो व्यक्तिगत रूपमा कहिल्यै भेटघाट हुन सकेन त्यसमा वहाँको पनि एउटा सीमा थियो होला मेरो पनि आफ्नो खालको व्यस्तता र बन्धन थियो । अब त एक दुर्घटनामा परि वहाँको जीवनलीला समाप्त भएको पनि निकै समय वितेको छ । अब कहिल्यै हाम्रो भेट हुने छैन । हो, हरिराज खेवा दाइको बारेमा केही शब्द लेखिदिनुहोस् भनेर वहाँकी श्रीमती गीता गुरुङ्ग खेवाले आग्रह गर्नुभयो । नलेखूँ त हरिराज दाइ एक राम्रा सर्जक पनि हुनुहुन्थ्यो एक समय धनकुटाको साहित्यिक विशेष गरेर नाट्य जगतमा निकै ठूलो योगदान गर्नुभएको थियो, लेखुं त कसरी ? हरिराज दाइसँग कहिल्यै भेटघाट सामिप्यता हुन पाएन । यो सामिप्यता हुन नपाए पनि म वहाँको साहित्यिक, राजनीतिक, वैचारिक व्यक्तित्वसँग अपरिचित थिइनँ । त्यसैले वहाँको शरीरसँग भन्दा पनि वहाँका सिर्जना र विचारहरूसँग निकै नजिक प्रत्यक्ष रूपमा पनि रहेँ ।

जब धनकुटाको साहित्यिक गतिविधीहरूको चर्चा हुन थाल्दछ, तब धनकुटाले हरिराज दाइको साहित्यिक योगदान सम्झिन पुग्दछ । समय पनि कस्तो निर्मम् ? वहाँको उर्जावान् समयमा नै वहाँले साहित्यिक, राजनीतिक, वैचारिक योगदान मात्र होइन, वहाँकी प्राणप्रिय श्रीमती र छोराछोरीसँग सदाका लागि विछोडिनु पऱ्यो । धन्य, वहाँकी श्रीमती ! वहाँको अभिभावकत्वबाट बञ्चित भएका बालिका छोरीहरूको सम्पूर्ण जिम्मेवारी उठाएर उनीहरूलाई आमा र बाबु दुवैको अभिभावकत्व प्रदान गर्दै दाइका शुभ चिन्तक र शुभेच्छुकहरूको सहकार्यमा स्मृति

प्रतिष्ठानको स्थापना गरेर वहाँको योगदानहरूलाई संरक्षण र जनमानसमा प्रकाश पार्दै विभिन्न सामाजिक कार्यहरू गर्दैहुनुहुन्छ । वहाँकी जीवन संगीनी गीता गुरुङ्ग खेवाले आफ्नो जीवनलाई सामाजिक कार्यमा समावेश गर्ने यस पंक्तिकारसँगको भेटमा बताउनु भयो । म शुभकामना व्यक्त गर्दछु ।

स्व. हरिराज दाइको जे जति योगदान गर्नुभयो नेपाली समाजले सधैँ सम्झिरहने छन् । दाइको स्मृतिमा हार्दिक श्रद्धाञ्जली व्यक्त गर्दछु ।

**धनकुटा–६, कल्चिडे**

# स्मृतिमा हरि खेवा

**सूर्य चापागाईं**

२०२५ साल कार्तिक २७ गते धनकुटा हात्तीखर्क–६ ज्योतिनगरमा जन्मेका हरि खेवाले धनकुटा बहुमुखी क्याम्पसबाट मानविकीमा सङ्कायतर्फ स्नातक तह सम्मको औपचारिक अध्ययन पूरा गरेका हुन् ।

हरि खेवासँग धनकुटा बहुमुखी क्याम्पसमा अध्ययन गरेका बेला खुबै उठबस भयो । उनको मानविकी सङ्काय र मेरो शिक्षाशास्त्र भए पनि कलेजका प्रत्येक कार्यक्रमहरूमा हाम्रो भेट भइरहन्थ्यो । मैले स्टेजमा गरेका गायनका प्रत्येक प्रस्तुतिपश्चात् उनी मुक्तकण्ठले प्रशंसा गर्थे । इमान्दार र निर्भीक हरि खेवा असल मित्र थिए । प्रेरणा र उत्साह दिन कुनै समयमा पनि पछि पर्दैनथे । उनको आवाजमा त्यो स्पष्टता थियो र त्यो नाभिमण्डलबाट खुलेर आउँथ्यो । क्षेत्रीय प्रसारण केन्द्र धनकुटाको रेडियो नाटकमा उनले रेकर्ड गराएका सम्वादहरू प्रायः सुनेको छु । हृदय झङ्कृत् गर्ने आवाज थियो उनको ।

रङ्गकर्ममा उनको राम्रै दखल थियो। परिणामस्वरूप साहित्य र कलाको परिवर्तन गर्ने क्रममा उनले अपदस्त जिन्दगी (२०५८) नामक नाटक पनि लेखेका छन् । उनी रङ्गमञ्चमा वेजोडको कलाकारिता गर्थे । हामीले इशदीवद्वारा निर्देशित नाटक ‘रूख अझै नाङ्गो छ’ २०५० सालमा अनि अर्को साल ‘जेमन्त’सामुदायिक भवनमा प्रस्तुत गर्‍यौं । दुबै नाटक दर्शकहरूबाट सर्वाधिक रुचाइए ।

पछिल्लो पल्ट २०६९ साल ताका चाबहिलमा सहकर्मी हेमराजसँग आएका बेला साहित्य, गीत, सङ्गीतबारे गरिएको कुराकानी नै अन्तिम रहेछ । धनकुटाबाट

पटक पटक विजयी भएका पूर्व प्रधानमन्त्री तथा राष्ट्रिय जनशक्ति पार्टीका अध्यक्ष सूर्यबहादुर थापालाई पराजित गरेका हरिराज खेवा विगतमा नेकपा एमालेको तर्फबाट हात्तिखर्क गाविसका अध्यक्ष भए । २०५७ सालमा माओवादीमा प्रवेश गरी उनले भूमिगत राजनीति सुरू गरेका थिए। उनी माओवादीको धनकुटा जिल्ला समितिका अध्यक्ष तथा लिम्बूवान मुक्तिमोर्चाको केन्द्रीय कोषाध्यक्ष समेत भए ।

क्षेत्र न.२ का भूतपूर्व सभासद तथा अर्थ राज्यमन्त्री समेत बनेका हरि खेवाको २०७३ साल साउन १४ गते शुक्रबारका दिन धनकुटाको सिधुवा हिलटप होटेलछेउमा भएको उनीसहित एक दर्जन दाजुभाइ तथा दिदिबहिनीहरूको अकल्पनीय बस दुर्घटनामा निधनले नेपाली राजनीतिमा अपूरणीय क्षति भयो।

हरि, तिम्रो निधनले जीवन र जगतप्रति सोच, शक्ति, दायित्व, भूमिका र क्रान्तिकारी सपनाप्रति फेरि सोच्न हामी सबैलाई प्रेरणा मिलोस् भन्दै तिम्रो आत्माको चिरशान्तिको कामना गर्दछु ।

अन्त्यमा, महाभारतमा भनिएको छ, 'जीवले गरेको कर्म कहिल्यै नाश हुँदैन, केवल उसले छाडेको शरीर मात्र यहाँ नष्ट हुने हो ।' **धनकुटा** (हालः **काठमाडौँ**)



**दोस्रो लहरमा बायाँबाट पाँचौँमा हरि खेवा**

**'रूख अझै नाङ्गो छ' नाटक मञ्चनपश्चात् २०५० साल फागुन १० (सामुदायिक भवन, धनकुटा)**

# म कांग्रेस वहाँ एमाले तर सधैं सामिप्यमा थियौ

## हेमबहादुर तामाङ

म पल्टनबाट २०४२ मा पेन्सन आउदा मेरो उमेर ३६ वर्षको मात्र थियो त्यसपछि राजनीतिमा होमिए। त्यो बेला जोस भएको युवा नै थिए लाग्छ। २०४५ साल चैत्र २६ गतेको बहुँदलको आन्दोलनमा पनि सहभागी थिए । वि.सं. २०५०/५१ को चुनावमा धनकुटा नगरपालिकाको उपमेयरमा नेपाली काँग्रेसको तर्फबाट चुनाव लडे र जिते पनि। मेयर शुशिल कर्माचार्य जीले भन्दा मैले नै बढि अफिसको काम हेर्नुपर्ने स्थिति थियो। अलि पछाडि कर्माचार्य जीको निधनपछि मेयरको जिम्मा मैले नै निक्कै लामो समय गर्नुपरयो।

म उपमेयर निर्वाचित भएकै बखत हिलेको छिमेकी गाँउ हात्तिखर्कको गाविस अध्यक्षमा अत्यधिक बहुमत ल्याई हसिलो, इमान्दार युवाले चुनाव जित्नु भएको रहेछ। मैले चिनेको थिइनँ तर एकदिनको भेटमा उनले त मेरो बुबा धनबहादुरलाई समेत राम्ररी चिन्नुहुँदो रहेछ र मलाई साह्रै नजिकबाट नियाली रहनुभएको रहेछ। वहाँले मेरो कामको धेरै प्रसंसा गर्नुभयो त्यसदिनदेखि मैले हरिराज खेवालाई चिन्न शुरु गरेको थिए। खेवा एमालेका र म काँग्रेसको तर भेट हुँदा पार्टी इतरको कुरा कहिल्यै भएन सधैं विकास निर्माण र संमृद्धि आदिका हितैषी गफहरू हुन्थे।

माओवादी जनयुद्ध ताका खेवा जीले हिलेमा निक्कै बन्द हडताल गराए । धेरै माओवादीहरूले मलाई फोन गरे तर हेमबहादुर तामाङ सहि काम गरिरहेका छन्

भनेर माओवादीलाई सम्झाउने गर्थेछन् उक्तकुरा पछि थाह पाए, त्यसैले पनि मलाई माओवादी जनयुद्ध कालमा कुनै समस्या भएन ।

मन्त्री बनेपछि हङकङको कार्यक्रममा आउनु भएको बेला हाम्रो अचानक भेट भयो त्यसवेला पनि धनकुटाको विकास संमृद्धिकै बारेमा गफ गरयौ । हाम्रो पार्टी मिल्दैन थियो तर विकास र सम्मृद्धिको लागि हामी दुई खुबै नजिक थियौ । असाध्य राम्रो सोचका खेवाको निधनले धनकुटाले मात्र होइन देशले नै अपुरणिय क्षति ब्यहोरेको छ । वहाँको निधनले किन हो किन म धेरै दुखेको छु । उनका सपनाहरू हामीले पूरा गर्नुछ ।

(**लेखक धनकुटा नगरपालिकाका पूर्व कार्यवाहक मेयर हुन् ।**)
yonzon.hem@gmail.com

# सम्झनामा मन्त्री हरिराज खेवा (तिगेला)

**कमल तिगेला लिम्बू (खेवाहाङ)**

१) **परिचय** :

पल्लो किरात लिम्बुवानको धनकुटा जिल्लास्थित हात्तिखर्क गाविस (हाल छथर जोरपाटी गाउँपालिका) मा वि.सं. २०२६ सालमा पिता हृदयमान तिगेला (खेवाहाङ) माता तीर्थमाया खापुङको कोखबाट जन्मिएका चार दाजुभाइ र तीन दिदीबहिनीमध्ये हरिराज तिगेला खेवा परिवारको माइलो छोरा हुन् । वहाँको श्रीमती गीता गुरुङ (खेवा) दुई छोरी गुराँस खेवा (तिगेला), लाराक खेवा (तिगेला) छन् । स्नातक तह उर्तिण गरेका हरिराज खेवा राजनैतिक व्यक्तित्वको रूपमा मात्र नभएर शिक्षक र साहित्यकारको रूपमा पनि चिनिनु भयो । उनले लामो समयसम्म शिक्षण पेसामा समेत संलग्न हुनुभयो । वहाँको 'अपदस्त जिन्दगी' नाटक पुस्तकको रूपमा प्रकाशित छ । कविता, लघुकथा, नाटक लेखनको रूपमा अगाडि बढी रहनु भएको हरिराज खेवाको नाटक वि.सं. २०५३ सालमा प्रज्ञा प्रतिष्ठानले धनकुटामा आयोजना गरेको 'क्षेत्रीय नाटक महोत्सव' मा मंञ्चन भएको थियो । यसैगरी स्व. हरिराज खेवा वि.स. २०५४ सालमा हात्तिखर्क गाविसका गाविस अध्यक्ष हुन भयो । माओवादी दश वर्षे द्वन्द्वकालमा हात्तिखर्कबाट राजनैतिक रूपमा माओवादीलाई संरक्षण दिएको अभियोगमा निगरानीमा परेका हरिराज खेवा कालान्तरमा नेकपा माओवादीमा प्रवेश गर्नुभयो । यसपछि धनकुटाका प्रभावशाली नेता १४ वर्ष प्रधानमन्त्री भएका सूर्यबहादुर थापालाई २०६४ सालको पहिलो संविधान सभाको निर्वाचनमा धनकुटा क्षेत्र नं. २ बाट हराउँदै वहाँ पहिलो सभासद एवम् प्रतिनिधी

सभाका सांसद पदमा अत्याधिक मतले विजयी हुन भयो । वहाँ छथर क्षेत्रकै पहिलो मन्त्री वि.सं. २०६७ मा हुनुभयो ।

## २. पारिवारिक पृष्ठभूमि

पञ्चायत कालअघि 'पल्लो किरात लिम्बुवान' राज्य संरचना भएताका स्व. हरिराज खेवाका बुबा हृदयमान तिगेला किपटकालिन सुभाङ्गी व्यवस्थामा हात्तिखर्क क्षेत्रका हर्ताकर्ताको सुब्बाको रूपमा चिनिन्थे । यतिमात्र नभएर स्व. हरिराज खेवाका हजुरबुबा स्व. दिलबहादुर तिगेला खेवा राणाकालमा खरिदार पदमा बहाल थिए । पल्लो किरात लिम्बुवानबाट लिम्बू दुईजना मात्र उच्च ओहदामा पुगेका समयमा एकजना उनकै बाजे पर्दथे । राणाकालमा पृथ्वीनारायण शाहकालिन कर्मचारी संरचनामा भारदार, मिर सुब्बा, सुब्बा, खरिदार, राईटर जस्ता पदहरू हुन्थे । राइटरको तलवमान  वार्षिक रु ४००/- हुन्थ्यो भने यसका ठीक दोब्बर खरिदारको तलवमान रु. ८००/- हुन्थ्यो (राहुल, १९९६) । अधिकार समेत त्यतिकै मात्रामा फरक रहेको थियो । उनका हजुरबुबा तात्कालिन समयमा पल्लो किरात लिम्बुवानकै दुई खरिदारमध्ये एक थिए भने उनी छथर क्षेत्रकै पहिलो मन्त्री बनेका थिए । यस्तो पारिवारिक पृष्ठभूमिमा मन्त्री स्व. हरिराज खेवा तिगेला जन्मिनु भएको थियो ।

## २.पहिलो छथर सांस्कृतिक तथा पर्यटन महोत्सवको उदघाटन

मन्त्री स्व. हरीराज खेवा तिगेला मन्त्री भएपछि पहिलोपल्ट वहाँको मन्त्री क्वाटरमा टेकराज तिगेला दाइ र म गएका थियौं । विशेष छथर महोत्सव २०६९ को प्रमुख अतिथिको लागि समय मिलाउनु थियो । प्रमुख अतिथिको भूमिका निर्वाह गर्न अनुरोध गर्‍यौं । वहाँले सहर्ष स्वीकार गर्नुभयो । मन्त्री भएपछि दोस्रो भेट हाम्रो छथर महोत्सवमा भयो । वहाँ महोत्सवको प्रमुख अतिथि हुनुभयो । कच्ची सडक भएकाले अँधेरी खोला पारी नै वहाँको गाडी फस्यो । त्यहाँबाट वहाँ पैदल नै च्याङलुङ गुफा हेरेर महोत्सव स्थलमा आइपुग्नु भएको थियो । युवा अवस्थामा वहाँलाई पैदल हिड्न कति पनि कठिन थिएन । महोत्सवमा पुर्खाहरूको विरताको

चर्चा गर्दै ताक्लुङमा खेवाहाङ पुर्खाहरूले ताक्लुङ पुर्नि्नमाण गर्ने जिम्मेवारी युवाहरूको काँधमा सुम्पिएको बताउनु भयो । प्रमुख अतिथिको भूमिका निर्वाह गर्दै वहाँले 'वास्तवमा म जुन ठाउँमा उभिरहेको छु, मलाई लाग्छ, मेरा पुर्खाहरू, मेरो सामुन्ने भएको यो ताक्लुङ गढमा बसेर मेरो भविश्य कोरिरहेका थिए । वहाँहरूले भावी सन्ततिहरूको भविष्य खोजिरहेका थिए । मलाई लाग्छ, जतिखेर हाम्रो पुर्खाहरूले यो गढमा बसेर यो देशमा शासन गरिरहेका थिए । यसठाँउमा उनीहरूले पसिना बगाएका थिए । यहाँ आफ्नो रगत र पसिना बगाएका छन । यो भूमि जसले आज सदैव छथरभित्र बसेका सवै जातजातिहरूको समान पहिचान खोजिरहेको छ सम्मानजनक अधिकार खोजिरहेको छ । त्यही ठाउँमा उभिएर म आफ्नो कुरा राख्न पाएको छु ।'

मलाई आज गर्व लागिरहेको छ । जसले यो ताक्लुङ गढी सृजना गर्नुभयो जसले समाज र सबै संस्कृतिको सृजना गर्नुभयो र भावी सन्ततिको भविष्य कोर्नुभयो । जसले हाम्रो विकास र आमुल परिवर्तनको बाटो पहिल्याउनु भयो । ती पुर्खाहरूलाई आज यो ताक्लुङ महोत्सवले सम्मान गरेको छ । नयाँ नेपालको आधार नै साँस्कृतिक आधार हो । यही साँस्कृतिक आधारले मात्र नेपाल एक हुनसक्छ र नयाँ नेपाल निर्माण गर्न सक्छ । यसैले यो देशमा भएका सवै संस्कृतिहरूको संरक्षणले मात्र नेपालमा एकता कायम गर्न सक्छ र अखण्डता कायम गर्न सक्छ भन्ने मलाई लाग्दछ' भन्नु भयो । माननीय सीता गुरुङ विशेष अतिथि रहेको उक्त कार्यक्रम टेकराज तिगेलाको सभापतित्वमा वर्तमान छथर गाउँपालिकाका अध्यक्ष सन्तोष तिगेलाको उद्घोषण एवम् थानाहाङ तिगेलाले स्वागत मन्तव्य, पूर्व माननीय शेरबहादुर इङनाम, वर्तमान प्रदेश नं. १ का प्रमुख प्रा.डा. गोविन्द तुम्बाहाङ लगायत देश विदेशका मान्यजनहरूको उपस्थिति रहेको थियो ।

### ३. ऐतिहासिक ताक्लुङ

स्व. हरिराज खेवाले उद्घाटन गरेको 'पहिलो छथर सांस्कृतिक तथा पर्यटन महोत्सव २०६९' खेवाहरूको पुर्ख्यौली थलो ताक्लुङमा सम्पन्न भएको

थियो । खेवाहाङहरूले शासन गरेको ऐतिहासिक किरात याक्थुङ लिम्बूहरूको पहिलो राजधानी ताक्लुङको गाथाको संक्षिप्त चर्चा डकुमेन्ट्री नै तय भएको थियो । उक्त डकुमेण्ट्रीमा दश लिम्बुमध्ये एक मानिने लिलिमहाङ काठमाण्डौं उपत्याकामा किरातहरू राज्य विप्लवमा परेपछि करिब चौथो शताब्दितिर तावालुङ सुसुवादेन ताक्लुङ आई राजधानी निर्माण गरेका थिए भनिएको छ । सो समयमा दुधकोसीपूर्व टिष्टासम्मको भूभाग याक्थुङ लिलिमहाङको भूभाग पर्दथ्यो । लिम्बुवान बन्नुपूर्व आठ किरातहरूको प्रान्तीय राज्यमा ताक्लुङका खेसिवाहाङ (खेवाहाङ?) राजा थिए । कतिपयको भनाई लालासो पाङवाहाङ नै खेवाहाङ हुन भन्ने भनाई पनि रहेको छ । दश लिम्बुवानकालीन शासन व्यवस्थामा खेवाहाङले ताक्लुङबाट दुधकोसीसम्म शासन गर्दथे (गुरुङ, २००७) । पहाड-मधेसका राजा ताक्लुङका मुरेहाङ खेवाहाङका वंशज बुद्धिकर्ण राय विजपुरका अन्तिम चौतारीया भएको समयमा कामदत्त सेनको शासन हत्याई विजयपुरको राजा भएका थिए । यिनलाई गोरखाली राजा पृथ्वीनारायण शाहका वंशजले चिलिमारीबाट जोगीको भेषमा गएर अपहरण गरी विजयपुरमा ल्याएर तीन दिन यातना दिएर हत्या गरेका थिए (चेम्जोङ, २००३) । याक्थुङहाङ लिलिमहाङ खेवाहाङहरूको शिर उठाउने माङ्गेना मुन्धुमले खेवाहाङहरू काठमाण्डौ उपत्यकाबाट सुनकोसीको तिरैतिर हुँदै हलेसी, बाराजीकोकाजी वराहको दर्शन गरी तमोर गड्तिर पछ्याएका थिए (तिगेला र आङला, २०६९) । उनीहरूले झलारा बेलहारा, हाङसामोरङ हाङसेम्मा लुङ, हाकपाराघाट हुँदै सागोकमारी, पमेजोङ हुँदै तावालुङ सुसुवादेन ताक्लुङ पुगेको मुन्धुममा उल्लेख छ । लेखक प्रेमबहादुर मावोहाङ र भुपेन्द्र ढुंगेलले याक्थुङहाङ लिलिमहाङको नेतृत्वमा ५२ हजार सेना कुल कविलासहित यो ताक्लुङदेन यकमा उपत्यकाबाट राजधानी सारेको र ताक्लुङ यकलाई सम्पूर्ण लिम्बूहरूकै पुरानो राजधानी भनी 'संक्षिप्त नेपाल इतिहास' नामक पुस्तकको पृष्ठ ८० मा उल्लेख गरेका छन् । यही तथ्यलाई पुष्टि गर्दै चन्द्रप्रसाद योङयाले आफ्नो 'मंगोल किरात संक्षिप्त इतिहास तथा दर्शन' नामक पुस्तकको पृष्ठ १६-१७ मा ताक्लुङ लिम्बुवान कै पुरानो राजधानी हो भनेर लेखेका छन् । इतिहासविद् इमानसिं चेम्जोङले आफ्नो 'किरात हिस्ट्री एण्ड कल्चर' नामक पुस्तकको पृष्ठ ५४ (तेस्रो संस्करण) मा

दश लिम्बू मध्ये एक खेवाङ भएको र उनले ताक्लुङ राजधानी बनाई पश्चिममा दुधकोशीसम्म शासन गरेको उल्लेख गरेका छन् भने विद्वान डा.हर्क गुरुङले आफ्नो 'भेग्नेट्स अफ नेपाल' नामक पुस्तकको पृष्ठ ३४४ मा खेवाहरूले पश्चिममा दुधकोसीसम्म शासन गरी खोटाङमा गढी बनाएको वर्णन गरेका छन् । तात्कालिन सङ्घीय राजधानी मानिएको विजयपुरका अन्तिम राजा बुद्धिकर्ण रायका पुर्खा विजयपुर मोरङदेखि उत्तरतिरका खेवाङका छोरा सिँग राय भएको कुरा हेमिल्टनले आफ्नो 'एन् एकाउण्ट अफ द किङड्म अफ नेपाल' नामक पुस्तकको पृष्ठ १३३ मा उल्लेख गरेका छन् (हेमिल्टन, १९९०) । इमानसिं चेम्जोङले आफ्नो 'किरातकालीन विजयपुरको इतिहास' नामक पुस्तकमा बुद्धिकर्णको पुर्खा फेदापका मुरेहाङ खेवाङ भनी लेखेका छन् । यही खेवाङ लेखेकाले खेबाङ हुन् कि ? भन्ने भ्रम सिर्जना भएकाले इतिहासविद् शिवकुमार श्रेष्ठले यसको खण्डन गर्दै आफ्नो पुस्तक 'लिम्बुवानको ऐतिहासिक अध्ययन' पृष्ठ ४२ मा खेवांग फेदाप थुमका राजा नभई छथर थुमका राजा थिए  र उनी  खेवांग नभई 'खेवाहांग' थिए भनी लेखेका छन् (श्रेष्ठ, १९८५) । किरात सेनेहाङ (थेगिम) लिम्बू वंशावली इतिहासको पृष्ठ १२२ मा सुदापका बाजाहाङ रायले विजयनारायणमाथि साटो फेर्ने उपाय रचेको तर सन् १६१८ को युद्धमा मृत्यू भएकाले उनको छोरा पानोहाङ खेवालाई लोहाङ सेनले विजयपुरको अधिकार सुम्पि मकवानपुर फर्किएको उल्लेख छ । किरातेश्वर सेत्छेने सेनिहाङ लिङदेन (लिम्बू) इतिहास तथा वंशावलीको पृष्ठ ९५ मा मुरेहाङ खेवाको अवसान र बाजाहाङ खेवाको बदलाको भावनाले विजयपुरमा सेनहरूको प्रवेस भएको उल्लेख छ। भवानी वराल र कमल तिगेलाले 'लिम्बुवानको राजनीति' नामक पुस्तकको पृष्ठ ३१ मा यिनै खेवाहाङ वंशले पहाड-मधेसका राजा मुरेहाङको पालादेखि विजयपुरको चौतारिया चलाउँदै आएका थिए भनी उल्लेख गरेका छन् (बराल र तिगेला, २०५८) । त्यसैगरी  गोपिलाल लिङदेन लिम्बूले 'किरातको ऐतिहासिक रूपरेखा-२०६६' नामक पुस्तकको पृष्ठ ३७ र 'दिब्यमेरु मानस समाज' नामक पुस्तकको पृष्ठ ४८ मा राजा बुद्धिकर्ण तिगेला खेवाले विजयपुर र मोरङको राजधानीमा सन् १७६९ देखि सन् १७७३ सम्म शासन चलाए भनी लेखेका छन् । त्यस्तै सञ्जुहाङ पालुङवाको 'तेह्रथुमे ढाका टोपी मोडेलमा

लिम्बुवान स्वायत्त राज्यको खाका' नामक पुस्तकको पृष्ठ ४२ मा लिम्बुवानको अन्तिम राजा बुद्धिकर्ण खेवा लिम्बू लिम्बुवानको राजा भएको ५ वर्ष वित्न नपाउँदै गोरखाका राजा पृथ्वीनारायण शाहले खम्बुवान पछि लिम्बुवानमा चढाई गऱ्यो भनी वर्णन गरेका छन् । वीर सेनापति काङ्सोरे र दोस्रा सेनापति मुदिम्बा खेवाहाङ पनि यही ऐतिहासिक ताक्लुङसँग सम्बन्धित थिए । काङ्सोरे गोरखाली सरदार रघु रानासँगको मल्लयुद्धमा मारिएको हड्सन संकलन पाण्डुलिपीमा उल्लेख छ भने काङ्सोरे खेवा वंशभित्र पर्ने वरिष्ठ पत्रकार राजकुमार दिक्पाल (यक्सो) ले मधुपर्कमा लेखेका छन् । यसैगरी छथरका सेनापति मुदिम्बा खेवाहाङ सप्तकोसी पारी चतराघाटको युद्धमा वीरगति प्राप्त गरेको कुरा टिकमध्वज ताप्मादेन र भुवनचन्द्र पतङ्वा लिम्बूले 'किरात इतिहास र लिम्बू वंशावली' संग्रहको पृष्ठ ११० मा उल्लेख गरेका छन् (ताप्मादेन र ताम्मादेन, २००१) ।

## मन्त्री स्व. हरिराज खेवासँगको सङ्गत

मन्त्री स्व. हरिराज खेवा र म एउटै वंशका दाजुभाइ भएपनि मेरो बसोबास पुर्ख्यौली थलो ताक्लुङतिरै भएकाले वहाँसँगको मेरो पहिलो भेट २०५२ सालमा मात्र भएको थियो । खेवा वंशावली निकाल्ने क्रममा वहाँको बुबा हृदयमान तिगेला खेवालाई भेटन क्या. गजरधन तिगेला, इन्द्रधन तिगेला, स्व.लोकेन्द्र तिगेला लगायत वहाँको निवासमा गएका थियौं । यही क्रममा हरिराज तिगेला खेवासँग पहिलो भेटघाट र परिचित हुने अवसर प्राप्त भएको थियो । त्यसैगरी हरिराज खेवासँगको दोस्रो भेट २०५५ सालतिर काठमाण्डौंमा भएको थियो । यो भेटमा भने केही व्यक्तिहरू बसेर राजनैतिक गफ गर्ने ध्येयमा आधारित थियो । यसमा पनि बढी लिम्बुवान र लिम्बूहरूको अधिकारमा केन्द्रीत थियो । यो भेटमा तात्कालिन कियाचु केन्द्रीय सचिव रामबहादुर इङवारम, हरिराज खेवा लगायत केही व्यक्ति लगनखेलको एक होटलमा भेटघाट आयोजना गरी राजनैतिक तरवरले लिम्बुवानको मुद्दा कसरी अगाडि बढाउने भन्नेमा केन्द्रीत रहेको थियो । यतिखेर माओवादी जनयुद्धको प्रारम्भ भने भइसकेको थियो । वहाँसँग तेस्रो भेट काठमाण्डौंमा नै वि.सं. २०५७ सालमा भएको थियो । यो समयमा भने वहाँसँग नजिकबाट छलफल हुने मौका

मिल्यो । मैले लिम्बुवानको विषयमा लिम्बुवान स्वशासन अध्ययन मञ्च स्व. सि.एम. कन्दङवाको संयोजकत्वमा भएको कुरा जानकारी दिए । यसपछि भक्तराज कन्दङवाले लिम्बुवान राष्ट्रिय मुक्ति मोर्चा सम्हालेको कुरा गरे भने वहाँले यसभन्दा अगाडि बढेर लिम्बुवान राष्ट्रिय मुक्ति मोर्चाको पहिलो घोषणा पत्रको ड्राफ्ट आफैले निर्माण गरेको बताउनु भयो । स्व.हरिराज खेवाको मावली कन्दङवा पर्ने भएकाले भक्तराज कन्दङवा हरिराज तिगेला खेवाको निवासमा प्राय आईबस्ने र लेखकीय सहयोग लिने गर्ने गर्नुहुन्थ्यो । यसपछि भने क. किरणलगायतका नेताहरू वहाँको घरमा सेल्टर लिने गरेको र यही कारण प्रशासनले बढी निगरानी वहाँ माथि बढाएको बताउनु भयो । चौथो भेट भने लिम्बुवान राष्ट्रिय मुक्ति मोर्चाको पहिलो राष्ट्रिय सम्मेलन धरान गीता मन्दिरमा आयोजना गरिएको थियो । वहाँ काठमाण्डौंबाट यो सम्मेलनको पर्यवेक्षक भएर आउनु भएको थियो । वहाँ माओवादी पार्टी वा यसको भातृ सङ्गठन लि.रा.मु.मो. र सङ्गठनमा पुरै लागिसक्नु भएको रहेनछ तर वहाँसँग भने यसबारेमा खासै कुरा भएन । लिम्बुवान राष्ट्रिय मुक्ति मोर्चाको महासचिव भएपछि भने बाक्लो भेटघाट हुन्थ्यो । धरान आउँदा प्राय: मेरो घरमा छिर्न हुन्थ्यो । वहाँसँग प्राय राजनैतिक कुराकानी हुने गर्दथ्र्यो । यसमा पनि लिम्बुवान मुभमेण्टलाई कसरी अगाडि बढाउने भन्ने सन्दर्भमा नै केन्द्रीत हुने गर्दथ्यो । हुन त द्वन्दकालमा स्व. भक्तराज  कन्दङवा पनि धरान आउँदा प्राय मेरो घरमा बस्नु हुन्थ्यो । वहाँसँग पनि प्राय लिम्बुवान र लिम्बुवान आन्दोलनको विचार विमर्श हुने गर्दथ्यौ । यही कारणले पनि हुन सक्दछ स्व. हरिराज खेवा दाइ पनि प्राय मेरोमा विचार विमर्श गर्न आइबस्नु हुन्थ्यो । सांसद तथा सभासद भएपछिको भेट भने वहाँलाई ने.क.पा. माओवादीले टिकट दिएको सञ्चार माध्यमबाट थाहा पाए । निर्वाचनमा सहयोग गर्न जाउँ भनेर पत्रकार भैरव आङ्ला र मुन्धुमविद स्व. भरत तुङघङलाई अनुरोध गरियो । तर, भेडेटार नपुग्दै मोटर साइकल बिग्रेकोले त्यहीबाट फर्कनपर्ने भयो । पछि जाने कुरा त भयो तर जान पाइएन । सौभाग्यवस वहाँले सूर्यबहादुर थापालाई भारी मतले हराउँदै विजयी हुनु भएको खबर पायौं । निर्वाचित भएपछि भने वहाँसँग भेट होला जस्तो लागेको थिएन तर केही दिन पछि वहाँले आफै फोन गरेर घरमा आउने जानकारी गराउनु भयो । सोही अनुसार

वहाँ मात्र नभएर भाउजु, छोरी, धनकुटा अर्को निर्वाचन क्षेत्रबाट निर्वाचित सांसद हेमराज भण्डारी (सुदर्शन) लगायत मेरो घरमा आउनु भयो । मैले वहाँहरूलाई बधाई ज्ञापन गर्ने अवसर पाए ।

## ४. ऐतिहासिक कागजात र लालमोहर

स्व.हरिराज खेवा मन्त्री हुँदै वहाँको क्वाटरमा फोन गरेर लालमोहर स्क्यान गर्न गएको थिए । वहाँले काठमाण्डौमा ओर्जिनल तीन वटा लालमोहरहरू साथमै राख्नु भएको थियो । भाउजु गीता गुरुङ (खेवा) ले खाना बनाउनु भयो । दाजुभाइ बिहान भर लालमोहरको विषयमा छलफल गऱ्यौं । वहाँले यी लालमोहर स्क्यान गर्न र छाप्न अनुमति दिनुभयो । अरु लालमोहरहरू धनकुटा हात्तिखर्कको घरमा रहेको र समय मिलाएर त्यताको समते स्क्यान गर्नु र छाप्नु भन्नुभयो । पछिल्लो भेट लालमोहर स्क्यान गर्न म वहाँसँग फोन सम्फर्क गरी हात्तिखर्क गए । मैले साथी कार्यालयका सहयात्री विजय लुम्फुङ्वालाई पनि लगे । हामी दुई वहाँको निवासमा गएर ओर्जिनल लालमोहरहरू लगायत अन्य पुराना पुरातात्विक कागजातहरू स्क्यान गऱ्यौं । छाप्न अनुमति माग्दा शिवकुमार श्रेष्ठले अधिकांश छापिसकेका छन् भन्दै 'छाप्दा फरक पर्दैन' भन्नु भयो । खेवाहाङहरूको वंशावलीको कागजात हेर्न हामीलाई समयले पुगेन । पछि वंशावली प्रकाशन गर्ने समयमै हेरुँला भनेर छोड्यौ । तर वहाँसंगको यो नै अन्तिम भेट हुन पुग्यो ।

## अन्त्यमा

वि.स.२०७३ साल श्रावण १३ गते धनकुटाकै सिधुवा बजार नजिकै बस दुर्घटना भयो भन्ने खबर तेह्रथुम म्याङ्लुङ बजारमा रहेका सन्तोष तिगेलाले फोनमार्फत दिए । केही समयपछि अर्थ राज्यमन्त्री हरिराज खेवा पनि पर्नुभयो भन्न खबर प्राप्त भयो । सिधुवाको बस दुर्घटनामा वहाँ पर्नुभएको सत्य नै सावित भयो । मन्त्री स्व. हरिराज खेवा (तिगेला) पार्टी कार्यकताको पिताको देहावशनको खबर सुनेर उनको निवास (धनकुटा मारेकटहरे) मा श्रद्धान्जली चढाउन पुगेर फकर्ने क्रममा बस दुर्घटना पर्नुभएको थियो । उक्त दिन म धरानमा रहेकाले घटना सुन्ने बित्तिकै

त्यसतर्फ गएँ । वहाँको पार्थीव शरीर धनकुटा अस्पतालमा ल्याइएको थियो । भोली पल्ट ठूलो ऱ्याली र शसस्त्र वलको सलामीका साथ वहाँको शव मुलघाटमा अत्येष्टी गरियो । मन्त्री स्व. हरिराज खेवा सक्रिय रूपमा जनताको सेवा गर्दा गर्दै अल्पआयुमै मृत्यूवरण गर्न पुग्नु भयो । मुन्धुम अनुसार वहाँको पार्थीव शरीर नभए पनि आत्मा अमर छ । वहाँको आत्माले न्यायप्रेमी जनताहरूलाई हेरिरहने छन् ।

**(लेखक छथर गाउँपालिका, तेह्रथुम निवासी साथै पि.एच.डि. स्कलरसमेत हुन् ।)**

**सन्दर्भ सामाग्रीः**


**आचार्य, बाबुराम** (२००३). *प्राचिनकालको नेपाल* । काठमाण्डौं : श्रीकृष्ण आचार्य ।

**गुरुङ, हर्क** (२००७). *मैले देखेको नेपाल* । ललितपुर : हिमाल किताव, हिमाल एशोसिएशन ।

**गुरुङ, हर्क** (१९८०). *भेग्नेतस अफ नेपाल* । काठकाणडौं : साझा प्रकाशन ।

**चेम्जङ, ईमानसिं** (१९४७). *किरातकालिन विजयपुरको इतिहास* । ललितपुर : किरात याक्थुङ चुम्लुङ (दोस्रो संस्करण) ।

**चेम्जङ, इमासिं** (२००३). *किरात इतिहास* । ललितपुर : किरात याक्थुङ चुम्लुङ ।

**चेम्जङ, इमासिं** (२००३). किरात हिज्टोरी एण्ड कल्चर अफ किरात पिपल । ललितपुर : किरात याक्थुङ चुम्लुङ ।

**चेम्जङ, इमासिं** (२००३). किरात इतिहास । ललितपुर : किरात याक्थुङ चुम्लुङ ।

**ताम्मादेन, टिकम्धोज, पतङवा, भुवनचन्द्र** (२००१). *किरात इतिहास र लिम्बू वंशावावली ।* झापा : लेखक ।

**तिगेला, कमल, र आङला, भैरब**. (२०१२). *ऐतिहासिक ताक्लुङ र पर्यटकीय स्थलहरू ।छथरको ताक्लुङ जर्नल ।* काठमाण्डौं : छथर सांस्कृतिक तथा पर्यटन महोत्सव, प्रकाशन समिति । भो. १ अं. १ पृ. १०-२९ ।

**बराल, भवानी, तिगेला, कमल** (२००८). *लिम्बुवानको राजनीति ।* काठमाण्डौं : बुकक्लब विजयपुरका लागि भानेन्द्रकुमार सम्बाहाम्फे ।

**माबोहाङ, प्रेमबहादुर र ढुंगेल, भुपेन्द्र** (१९५४). *सक्षिप्त नेपालको इतिहास ।* ललितपुर : किरात प्रकाशन तथा अभिलेख केन्द्र हेमिल्टन, फ्रान्सिस बुकान (१९९०). एन एकाउण्ट अफ किङडम अफ नेपाल । नयाँ दिल्ली : एसियन एजुकेशन सर्भिस । (पहिलो प्रकाशन १८१९) ।

**शिवकोटी, गोपाल** (२०१७). *किरात जाति ।* काठकाण्डौं : पैरवी प्रकाशन ।

**राहुल, राम**. (१९९६). *रोयल नेपाल, अ पोलिटिकल हिज्टोरी ।* देल्ली : विकाश पब्लिशिङ हाउस प्रा.लि. ।

**श्रेष्ठ, शिवकुमार** (१९८५). *लिम्बुवानको ऐतिहाकि अध्ययन ।* ललितपुर : किरात प्रकाशन तथा अभिलेख केन्द्र (दोस्रो प्रकाशन) ।

# खेवाका नमेटिने पाइलाहरू

**होमकुमारी खापुङ**

दिनहरू बित्दै जाँदा आज ३ वर्ष हुन लागेछ । हरिराज खेवा(छोरा) ले सबैलाई छोडेको त्यो काल राम्रो दिन पनि हाम्रा राजनीति र परिवारिकभित्र एउटा अभिन्न अङ्ग गुमेका दिन जो हामी पारिवारिक राजनैतिक सम्बन्धले गर्दा हाम्रो भेटघाट भइरहने गर्दथ्यो । माले कालदेखि नै कम्युनिष्ट विचारबाट प्रभावित भइ सक्रिय राजनीतिमा निरन्तरता लागिरहन योद्धा धनकुटाबासीका आँखाका नानी पछिल्लो समयमा माओवादी पार्टीका पूर्वका हस्ती बन्दै गरेको होनहार व्यक्तित्व गुमाएका छौँ ।

म सँगको भेटमा धेरै सुख दुःखका कुराहरू भइरहन्थ्यो अन्तिम समय हामी भक्तराज कन्दङ्वाका प्रतिष्ठान सम्बन्धि वैठक सकेपछि सँगै कुरा गर्दै फर्कियौ साँझ परिसकेको थियो अनि सानीमा आज मेरैमा बसौँ भन्यो मैले पनि हुन्छ भने अनि उसका घरमा गयौ बुहारी गीताले खाना बनाइन् हामी आमाछोरा वरन्डामा बसेर लामो गफ गऱ्यो उसको कुराहरू अझै पनि मेरा मानसपटलमा झल्किरहेको छ । गीतालाई “सबै गर्ने तिमी नै हौ, म त बाहिर हिडिरहन्छु” भनेर भन्दै “जिल्लामा धेरै कामहरू छन् म गइहाल्छु” भन्यो जिल्ला आफ्नो नेतृत्वमा भएकोले धनकुटा नै बस्ने गर्दथ्यो र त्यस समयमा मौसम ज्यादै खराब थियो । पानी अविरल परिरह्यो घटनाको ४ दिन अगाडि हाम्रा भेट भएको थियो यत्तिकैमा धनकुटा गएर पार्टी जिल्ला सदस्य याम कार्कीको वुवाको मृत्यू भएकोले मारेककटरेमा परिवार भेट गर्न आएका र फर्केर आउँदै अविरल वर्षा भएका धेरै दिन भइसकेका थियो

गाडीमा चढेर दायाबाँया गर्न थाल्यो यतिकैमा सबै कराउन थाले हरिले चाहि केही हुँदैन नआत्तिनुस् भन्दै नजिकै एक बालिका थिइन् उनैलाई सम्हाल्न थाल्यो यतिकैमा ७ वल्ड्याङ गाडी पल्टेर क्षत्‌विक्षत् भयो बाँच्ने कुरै भएन ।

२०७३ श्रावण १३ गते यो विभत्स घटना थियो बिहान भाई चन्द्रकुवेर खापुङले फोन गऱ्यो "हैन ! हरि भाञ्जाका फोटोसहित फेसबुकमा मृत्यु भएको आएको छ थाहा पायौ दिदी ?"

सबै चकित भयौं । छिनभरमै सनसनी समाचार फैलियो । खबर सुनेर गीता मुर्छा परिन् । छोरीहरू रुन कराउन थाले । सिङ्गो पार्टी र आफन्तहरूमा स्तब्ध भयौं । विजुली चम्केझैं अकल्पनिय घटनाले सबै स्तब्ध भयौं ।

हरिको पार्थिव शरीर धनकुटामा पोष्टमार्टम गरी घरमा लगियो र बजार परिक्रमा गर्दै मुलघाट ल्याइयो । आफन्त, नेता, कर्मचारी लगायतका लाखौका संख्यामा उपस्थितिका बीच पार्टी नेता गोपाल किरातीबाट पार्टी झण्डा ओढाइयो र दाहसंस्कार गरियो ।

हरिराज खेवा सानै उमेरदेखि नै मेहनती थिए । एक सचेत र कुशल परिवारमा जन्मेका हरिको बाल्यकाल राम्ररी बित्यो । २०५४ सालमा हात्तीखर्क गाविस अध्यक्ष बने । त्यसताका मालेका धेरै नेतासँग सम्पर्क हुन थाल्यो । नेताहरूसँग भेटघाट हुनेक्रमा २०५६ सालदेखि माओवादी नेताहरूसँग भेट भयो । भक्तराज कन्दङवा र सि.एम. कन्दङवाहरूको नामवाट प्रभावित हरिराज २०५६ फाल्गुनमा भक्तराज कन्दङवा दलबहादुर कार्कीसँग घरमा आउनु भयो र वहाँसँग हरिको चिनजान भयो । भूमिगत रूपमा भक्तराज कन्दङवा आएर बस्ने राजनीतिक योजनासम्बन्धि कुराकानी गर्ने गर्नुहुन्थ्यो । २०५४ देखि पूर्वमा माओवादीको प्रभाव पर्न थाल्यो । डम्बर सुवेदी (हिमाल) इलाकाको सेक्रेटरी हुनुन्थ्यो । वहाँसँग हरिको कुराकानी भइरहन्थ्यो । जनयुद्ध वर्गीय मुक्ति जातीयताबारे पार्टीको धारणा आदिवासी जनजातीको अधिकार उनीहरूको नेतृत्व विकासबारे छलफल भइरहन्थ्यो यसरी

निरन्तर माओवादीसँगको भेटघाटले गर्दा हरिराजको घर सेनाले घेर्न थाल्यो । उसलाई वारेन्ट जारी गऱ्यो र तत्कालीन त्यहाँका डिएसपीसँग भनाभन भयो । त्यतिकैमा काठमाडौ आई भूमिगत राजनीतिक काममा लागिरहेको अवस्थामा किराँत मुक्ति मोर्चाका उपत्यका सहसंयोजक हुनुहुन्थ्यो । बिचमा प्रहरीसँग पनि मुठभेट भइरहने हुँदा पार्टीमा झनै सक्रिय भएर काम गर्न प्रेरित भए । यसरी पछि लिम्बूवान किरात मुक्ति मोर्चामा विभिन्न पदमा काम गर्दै आएर पछिल्लो समय अध्यक्ष पनि बन्न सफल भए । त्यसरी मालेकालमा अध्यक्ष र पार्टी जिल्ला सदस्यहुँदै केन्द्रका सदस्यसम्म बन्न सफल भए ।

राजनीतिमा सूर्यबहादुर थापा पञ्चायत कालका हस्तीले एकलौटी धनकुटाको जिल्ला कब्जा गरेको लामो समय भइसकेको थियो । जसलाई २०६४ को संविधान सभाको निर्वाचनमा परास्त गर्न सफल भए हरि । त्यसैले गर्दा पार्टीले अर्थराज्यमन्त्रीसम्म बनायो । मन्त्री हुँदा पनि सबैको कुराका कदर गर्ने नम्र स्वभाव हाँसेर बोल्ने सकेसम्म कसैलाई नचिढ्याउने, गलत कुराको खण्डन गर्ने अध्ययनशील लेखक पनि हुन् ।

लिम्बुवानमा एक होनहार समाज परिवर्तन गर्नको निम्ति लागि पर्ने व्यक्ति हरिराज खेवा हुन् । कति धेरै सपनाहरू बनाउदा बनाउदै अधुरै राखेर गएको हुनाले हरिको सपना साकार पार्ने काम आजको नेकपाले पुरा गर्नुपर्ने हुन्छ । योजनाहरू विकासहरू र आमूल परिवर्तन समाजमा गर्ने अठोटहरू सम्मान गर्दै हरिराज खेवा प्रतिष्ठानमार्फत अगाडि बढाउनु पार्टी र धनकुटावासीमा अनुरोध गर्दै हार्दिक श्रद्धान्जली अर्पण गर्दछु ।

# स्व. हरिराज खेवाको सम्झना

**आनन्द सन्तोषी राई**

स्व.हरिराज खेवा मैले जानेको मानेको आदरणीय व्यक्तित्व हो। पल्लो किरात धनकुटा गौंडा अन्तर्गत छथर हात्तिखर्कका सुब्बा हृदयमान खेवा लिम्बू प्रख्यात नाम हो । वहाँको छोरा खगेन्द्रबहादुर लिम्बूसँग मेरो मित्रता भएकोले धनकुटा उत्तर क्षेत्रतर्फ आवत-जावत गर्दा धेरै पटक बासबसेको घरमा बेलाबखत भेट हुने गरेका विद्यार्थी युवा पनि हुन् । पछि हरि भाइसँग पनि मित्रता भयो । हरिको कला साधना पनि हेर्न पाएको थिएँ । अभिनय कलामा हरिको रुचि र साधनालाई प्रोत्साहन गर्नुपर्ने कुरा हामीले बुझेका थियौं ।

हरिराज खेवाको राजनैतिक सक्रियता बढ्दै गर्दा तत्कालिन हात्तिखर्क गाविसको अध्यक्ष भइ जनसेवामा लागेको र संविधानसभाको चुनाव २०६४ मा निर्वाचित भई राज्यमन्त्री हुनुभएको सम्झनामा आउँछ । नेपालको सङ्घीय लोकतान्त्रिक गणतन्त्रात्मक संविधान निर्माणमा स्व. हरि खेवाले पुऱ्याएको योगदान उल्लेखनीय छ ।

सङ्घर्ष हो जीवन, बगिरहने खोला हो जीवन, कहिले नथाक्ने योद्धा, सङ्घर्षदेखि नभाग्ने साथीको रूपमा जानेमानेका होनाहार युवा हरिराज खेवाको प्रेरणाले हाम्रो युवा पुस्तालाई सधैं इमान्दार सक्रिय भएर जनसेवामा लाग्न प्रेरित गरिरहनेछ। बहुप्रतिभाका धनि हरि खेवा लिम्बूका पितासँग नेपाल किरात इतिहाससम्बन्धि मूल्यवान कागजहरू थिए । ती कागजहरू समेत अनुसन्धानको स्रोत सामाग्रीको रूपमा ग्रन्थमा उल्लेख हुनेछ । वहाँलाई जन्माई हुर्काउने बाबुआमा र परिवारका सबै सदस्यहरू वहाँको सफल जीवनका आधार भूमि हुन् भनि सम्मान गर्दछु । साथै अथक लगनशील हरि खेवालाई सबैले सधैं सम्झिरहेछन् ।

**२८ जेठ २०७६ धनकुटा**

# एक कर्मठ व्यक्तित्वको रूपमा
# क. हरिराज खेवा

**विनोद लुङ्गेली**

प्रकृतिमा प्राकृतिक रूपले हिजो सृजना भएका चीज वा वस्तु वा पदार्थहरू आज पाउन कठिन हुँदै गएको छ । आज हामीले प्राप्त गरेका ती चीजहरू भोली, भविष्यका दरसन्तानले पाउन कठिन हुनेछ । पुरानो वा बुढोको अन्त्य र नयाँको सृजना हुने क्रम निरन्तर चल्दै आइरहेकै छ । तसर्थ, चराचर जगत परिवर्तनशील छ । क. हरिराज खेवाको निधन भलै बस दुर्घनामा परी असामयिक हुन गएकै हो तथापी वहाँको पनि जन्म (नयाँको सृजना हुने वैज्ञानिक नियमभित्रै), जीवन र मृत्यु हुन गएकोले यही परिवर्तनशीलताको सीमाभित्र घटित घटनाको रूपमा बुझ्न आवश्यक भएको हुँदा जीवन र मृत्यूको बारेमा केहि हरफहरू थप गरी लेखन कार्यलाई अगाडि बढाउदा हरिराजजीको कर्मठता, अथकता, सृजनशीलता तथा वहाँका अमिट छापहरूलाई उजागर गर्न सहजता नै हुनेछ भन्ने सोंचकासाथ लेख तयारी गर्ने जमर्को गरियो ।

विश्वभरका मानव जातिले जीवन र जगतलाई हेर्ने, बुझ्ने र व्याख्या गर्ने दर्शन वा विश्व दृष्टिकोण मुलतः दूई धारामा (१) भाववाद वा आदर्शवाद र (२) भौतिकवादै विभक्त अवस्थामा रहेको हुँदा जन्म, जीवन र मृत्यूको अर्थ खोतलेर बोलिने भाकाहरू पनि फरक नै रहदै आएको छ । यद्यपी, दुई विपरित धारका

पक्षधरहरूले 'मृत्यु'लाई भने करिब-करिब एकै अर्थमा बुझाउन प्रयत्न गर्दा गर्दै पनि बेमेलको तगारो पन्सिएको पाईने छैन । अर्थात, भाववादीहरूले'मृत्यु'लाई 'अकाट्य सत्य' भन्ने गरेतापनि अलौकिक शक्तिको अनुकम्पाद्वारा पुनर्जन्मको आशा देखाएर तमाम मानिसहरूलाई भुलभुलैयामा राखिरहने कोशिष गर्दछ भने भौतिकवादीहरूले'मृत्यु'लाई अवश्यम्भावी परिघटनाको रूपमा लिँदै एक ठोस पदार्थको अन्त्यको घोषणा गरेर त्यो पदार्थ अगाडि जुन रूपरङ्ग, आकारमा थियो सोही अवस्थामा जस्ताको तस्तै फर्केर आउने विषयलाई नकार गर्दछ । यसरी जीवन र जगतको बारेमा परिचर्चा गरेर क. हरिराज खेवाको स्मरणमा दुई चारवटा वाक्यांशहरूलाई जोडिरहँदा स्वयम् वहाँ हरिराजजीकै बारेमा सत्य कुरा के हो ? भनि सवाल उठाइनु वा जिज्ञासाका पोकाहरू फालिनु स्वभाविक हुन आउछ ।

जहाँसम्म एउटा सजीव प्राणीको मृत्यु वा अन्त्य आजको भौतिक, जीव तथा रसायन विज्ञान र स्वाश्थ्य विज्ञानले निश्चित गरेको दिन अथवा उमेर पुगेर वा रोगव्याधी लागेर भएको होस् वा कुनै असामयिक दुर्घटनाबाट श्रृजित भएको होस् । अन्ततः त्यो पदार्थ वा प्राणीको अन्त्य अथवा मृत्यु नै हो । यो मृत्यू वा पदार्थको अन्त्यको विषयलाई माथि भनिएका दुई धारामा विभक्त दर्शनको आधारमा क. हरिराजको मृत्यू के हो भनि जवाफ दिनुपर्ने अवस्था आयो भने यस लेखको प्राधिकारको हैसियतले मैले जवाफ दिदा हरिराजजीको मृत्यु एक पदार्थको अन्त्य नै हो, जहाँ सो पदार्थको तत्वको यौगिकीय अवस्था नै पूर्ण रूपमा अर्कोमा परिवर्तन हुने भएकोले जसको पुनर्जन्म हुन्छ भनि कुनै गुञ्जायस गर्ने ठाउँ रहने छैन ।

यस लेखन विषयको सन्दर्भमा दार्शनिक पक्षको कोणबाट पदार्थको अन्त्य वा मृत्यूको विषय उठान गरिरहँदा विभिन्न कोणबाट के हरिराजजीको मृत्यूसँगै वहाँका सबै कुरा सकिएको हो त ? भनि प्रश्न उठ्न गई बुझाईमा समस्या पैदा हुन सक्छ । तर, मुलभूत प्रसँग भनेको हरिराजजीको नै हो र हरिराज खेवा केवल एक ठोस पदार्थको रूप मात्र नभई चेतना र विवेकसहितको मानव समाजभित्रको एक सदस्य हुनुको नाताले ऐतिहासिक द्वन्द्वात्मक भौतिकवादले विशेष गरेर मानव समाजको समग्रतामा अध्ययन गरेर शोषण विहिन समाजवादी सिद्धान्त र विचार

सहितको राजनीतिक सामाजिक तहको निर्माण गर्ने भएको हुँदा सामयिक सन्दर्भ मात्र दार्शनिक पक्षको समेत समेटिन पुगेको हो भनि बुझ्न आवश्यक छ । यस लेखन कार्यमा जीवन र जगतको हेराई, बुझाईलाई पनि किन समिकरण गरियो भन्दा ऐतिहासिक द्वन्द्वात्मक भौतिकवाद नै आजको विज्ञानसम्मत उत्कृष्ट दर्शन र आज सम्मकै पूर्ण विकसित सामाजिक विज्ञान हो, जसले एकातिर प्रकृति विज्ञान तथा समग्र व्रम्हाण्डको अध्ययन गर्दछ भने अर्को तर्फ व्यक्ति, समुदाय र समाजको पक्षपातरहित ढङ्गले अध्ययन गरी तार्किक निष्कर्ष निकाल्ने गर्दछ । तसर्थ यस दृष्टिकोणको आधारमा क. हरिराजको सामयिक मुल्यांकन गरी वहाँ उचित र सम्मान प्रकट गर्न सकिने मार्ग प्रशस्त हुने भएर पनि दार्शनिक पक्षको समेत सन्दर्भ जोडिन आएको हो भनि बुझि दिएमा लेखका पंत्तिकारलाई न्याय हुनेछ भनि विश्वास गर्दछु ।

सम्वत २०७३ श्रावन १३ गतेको दिन धनकुटा जिल्लाको सिधुवा बजारमाथि भएको बस दुर्घट्ना नितान्त आततायी र भष्माशुर बनि दिनाले तत्कालिन एकीकृत नेकपा माओवादीका जिल्ला अध्यक्ष क. हरिराज खेवालाई हामी माझबाट सदाको लागि जवरजस्त रूपमा खोसेर लाने काम गऱ्यो । तत्कालिन समयमा म राष्ट्रसेवक कर्मचारी भएकोले मेरो कार्यक्षेत्र सङ्घीय मामिला तथा स्थानीय विकास मन्त्रालय, सिंहदरवारको सङ्घीय मामिला महाशाखामा भएकोले बिहान अन्दाजी पौने १० बजेतिरै आफ्नो कार्यकक्षमा प्रवेश गरिसकेको थिएँ । करिब दश बजेर १५ मिनेट हुँदा तेह्रथुम जिल्लाका साथीबाट क. हरिराज खेवा बस दुर्घटनामा पर्नु भएको सूचना पाएँ । घटनास्थलमै हरिजीको निधन भएको सूचना पाएकोले एकछिन स्तब्ध भएँ । अन्तरङ्गहरू उकुसमुकुस भए, प्राप्त सूचनालाई विश्वास गर्न गाह्रो भयो । तथापी धनकुटा ताङ्खुवाका साथीहरूलाई फोन सम्पर्क गर्नुका साथै इन्टरनेटमा पनि बस दुर्घटना भएको हो कि होइन भन्ने कुरा एकिन गर्न भनि धनकुटा सिधुवा बस दुर्घटनाबारे गुगलमा सर्च गरैं । त्यो समयसम्म सञ्चार मिडियाहरूमा समाचार अद्यावधिक हुन सकेको थिएन । तर सो बस दुर्घटनामा पूर्व अर्थराज्यमन्त्री समेत हुनुभएका हरिराज खेवा समेत पर्नुभएकोले लगतै धनकुटासँग सम्बन्धित

अनलाइन मिडिया र ब्लाष्ट टाइम्स धरान लगायत सबै सञ्चार माध्यमहरूले बस दुर्घटना भएको पुष्ट्याइसहित समाचार प्रशारण गर्न शुरु गरेको थियो ।

क. हरिराज खेवासँगको परिचय लामो त होइन तर पनि वहाँ तत्कालिन नेकपा एमालेबाट हात्तिखर्क गाविसको अध्यक्ष पदमा निर्वाचित शालिन, भद्र र सृजनशील स्वभाव भएको एक युवा नेता हुनुको नाता र म सम्वत २०५० सालदेखि धनकुटा जिल्लामा कार्यरत कर्मचारी (तत्कालिन गाविसको सचिव) पदमा हुनु र सेवा प्रवाह गर्ने कामको क्षेत्र एकै प्रकृतिको हुनाले सम्वत २०५४ सालदेखि एक ढङ्गले साथीभाईको रूपमा हामी सँगसँगै थियौं । एकातर्फ मुलुकमा सरकार-माओवादी द्वन्द्वको कारण सम्वत २०५९ सालमा हुनुपर्ने स्थानीय निकायको निर्वाचन हुन नसकेको र अर्कोतिर तत्कालिन देउवा सरकारबाट निर्वाचित जनप्रतिनिधिको पदावधि थप हुन नसकेको कारण गाविसका जनप्रतिनिधिहरूको समयावधि सकिन जाँदा वहाँ हरिराजजीको पनि पदावधि सकिएको थियो । गाविस अध्यक्षको पद सकिएपछि सम्वत २०६१ सालमा वहाँसँग धनकुटा नगरपालिकाको कार्यालयमा अचानक भेट भयो । व्यक्तिगत सञ्चो विसञ्चो र गाविसको कामकारवाहीको बारेमा भलाकुसारी गरियो र हामी आ-आफ्नो गन्तब्यतर्फ लाग्यौं ।

वहाँ हरिराजजी केही नयाँ काम गर्न सक्छु भन्ने जोश र जाँगरसहित यूवा उमेरमै गाविसको गरिमामयी तथा जिम्मेवार अध्यक्ष पदमा निर्वाचित हुने अवसर मिलेको भएतापनि तत्कालिन केन्द्रीकृत र एकात्मक सरकारको स्थानीय निकायलाई आर्थिक तथा राजनीतिक रूपले सबल, सक्षम बनाई गाउँको विकास गरी राष्ट्रको समग्र विकास गर्ने राष्ट्रिय नीति हुँदाहुँदै पनि केन्द्रीय सरकारमा नीहित रहेको आर्थिक अधिकारलाई दुरदर्शीतापूर्वक जराधर तहसम्म विकेन्द्रित गरी व्यवहारिक ढङ्गले नै कार्यान्वयन गर्न सङ्कोच राखेको कारण र मुलुकमा राजनीति द्वन्द्व बढ्दै जानुले गर्दा वहाँले चाहेजस्तो काम आफ्नो गाविसमा गर्न नसकेको अनुभुति गर्न बाध्य हुनुपर्‍यो होला भनि सहजै अनुमान गर्न सकिन्छ । तत्कालिन नेकपा-माओवादीले सञ्चालन गरेको १० वर्षे महान जनयुद्धको जगमा सम्वत २०६२-६३ मा भएको ऐतिहासिक राजनीतिक आन्दोलन सफलतापश्चात विभिन्न आरोह-अवरोह पार गर्दै

दोश्रो संविधान सभाद्वारा निर्मित नेपालको संविधान-२०७२ बमोजिम वर्तमानमा स्थापना भएका गाउँपालिका, नगरपालिकाका वडा समितिहरूलाई प्राप्त हुने बजेट र तत्कालिन गाविसमा जाने बजेटलाई तुलनात्मक रूपले अध्ययन गर्ने हो भने तपाई हामी सबैले सहजै भन्न सक्छौं की तत्कालिन केन्द्रीकृत र एकात्मक सरकार कति सङ्कुचित हुनुका साथै भाषणमा ग्रामिण विकासको नारा दिएर व्यवहारमा तत्कालिन स्थानीय निकाय र त्यहाँका जनप्रतिनिधिहरूलाई पङ्गु बनाउन कति सफल हुन सकेको रहेछ ।

गाउँको विकाससँगै देशको विकास गरौं, सामाजिक न्याय र समानतासहितको राजनीतिक व्यवस्था स्थापना गरौं, यस कार्यलाई राजनीतिक नारा र आह्वानमा सिमित नगरी दैनिक व्यवहारमै लागु गरिनु पर्छ भनि दृढ सङ्कल्प तथा अठोट लिएका हजारौं युवा वर्गलाई आत्मसन्तुष्टी दिन नसकिरहेको मुलुकको राजनीतिक, सामाजिक अन्यौलताले क. हरिराजलाई पनि सन्तुष्टि दिन नसक्दा अबको विकल्प राजनीतिक, सामाजिक र आर्थिक परिवर्तनका पक्षधर राजनीतिक दल तत्कालिन नेकपा-माओवादी बाहेक अरु कुनै हुन सक्ने छैन भन्ने निश्कर्षकासाथ वहाँ त्यस राजनीतिक आन्दोलनतर्फ जोडिन पुग्नुभएछ । जसको कारण वहाँसँग सम्वत २०६३ सालसम्म भेटघाट हुन सकेन ।

मानिसहरू बसोबास र भुगोलको हिसावले जतिसुकै टाढाको दुरीमा रहने बस्ने गरिने र विगतको सम्बन्धले निरन्तरता पाइनरहेको अवस्था भएतापनि व्यक्तिगत सम्बन्ध, राजनीतिक, वैचारिक आदिका सम्बन्धले अन्ततः एकै ठाउँमा रहने बस्ने अवस्थाको समेत सृजना गर्दछ । हरिराजजी र मेरो सन्दर्भमा पनि सोही कुरा लागु हुन गयो । म राष्ट्र सेवक कर्मचारी, वहाँ राजनीतिक कार्यकर्ता र पहिलो संविधान सभाको सदस्य पनि । तथापी हामी कसरी एकै आन्दोलनमा समाहित हुन पुग्यौं ? यसको पनि यथोचित जवाफ दिन सकिन्छ । संसारभरका कुनै पनि राष्ट्र वा राज्यले आफ्नो मुलुकको दैनिक कार्य सम्पादन गर्न, शान्ति सुरक्षा, अमन चयन कायम गर्न र राष्ट्रिय सूरक्षार्थको निम्ति निजामति, प्रहरी, जङ्गी (सेना) जस्ता कर्मचारीहरूको कानुन बमोजिम नियुक्ति गर्ने व्यवस्था गरेको हुन्छ । जसमा प्रहरी र जङ्गी

जस्तो २४ घण्टा कर्तव्य पालना गर्नुपर्ने कर्मचारीले आफ्नो हकहितको लागि सङ्गठित भई सामुहिक सौदावाजी गर्न पाउने अधिकार संसारभरका कुनै पनि राज्यहरूमा हुन सक्दैन । तर निजामती कर्मचारीहरूले अन्तर्राष्ट्रिय श्रमसम्बन्धी अभिसन्धी बमोजिम आफ्नो पेशागत हकहितको लागि सङ्गठित हुने र व्यवस्थापन पक्षसँग सामुहिक सौदावाजी गर्न पाउने अधिकार अन्तर्राष्ट्रिय रूपमै प्राप्त गरेको हुन्छ । जसका कारण नेपालका निजामती कर्मचारीहरूले पनि सोही अन्तर्राष्ट्रिय अभिसन्धीकै आधारमा सम्वत २०४६ सालमा बहुँदलीय प्रजातन्त्र पुनर्वहाली भए पश्चात सङ्गठित हुनको निम्ति सङ्घ, सङ्गठन खोल्ने अधिकार पायो । फलस्वरूप कानुन वमोजिम विभिन्न कर्मचारी सङ्घ, सङ्गठन खोलिने क्रममा १० वर्षे महान जनयुद्धको जगमा सम्वत २०६२/६३ को ऐतिहासिक जनआन्दोलन सफलतापश्चात तत्कालिन नेकपा-माओवादी पार्टीको आडमा एउटा नेपाल राष्ट्रिय कर्मचारी सङ्गठन नामक कर्मचारी सङ्गठनको उदय भयो (यहाँ यस्तो प्रत्यक्ष वा अप्रत्यक्ष राजनीतिक सम्बद्धतालाई कर्मचारी कानुनले वैधता दिएको हुँदैन तर पनि ओपन सेक्रेटको रूपमा जुनसुकै कर्मचारी सङ्गठनको कुनै न कुनै राजनीतिक दलसँग बैचारीक सामिप्यता रहेको हुन्छ ।) सो नयाँ कर्मचारी सङ्गठनको गठन भएपश्चात म पनि सोही सङ्गठनमा आबद्ध भई जिल्ला तहको अध्यक्षदेखि सङ्गठनको केन्द्रीय उपाध्यक्षसम्मको जिम्मेवारी सम्हाल्ने अवसर पाएँ जसको परिणामस्वरूप हरिराजजी र म एकै ठाउँमा आईपुग्यौं ।

हाम्रो काम गर्ने मोर्चा फरक भएतापनि वैचारिक सामिप्यताको कारण सामाजिक राजनीतिक कामको सिलसिलामा थुप्रै कामहरू सँगसँगै सम्पादन गर्ने अवसरहरू मिल्यो । सम्वत २०५४ साल देखिकै सामिप्यता भएको हुनाले आपसमा घुलमिल हुन र आपसी सल्लाह गरी हामीलाई तोकिएको काममा लाग्न कुनै सङ्कोच रहेन । यहि क्रमबद्ध सिलसिलाको कारण क. हरिराज खेवा २०६७ सालमा बावुराम भट्टराईको नेतृत्वमा सरकार गठन हुँदा अर्थराज्यमन्त्रीको कार्यभार सम्हाल्ने अवसर प्राप्त भयो । वहाँको सल्लाहकार तथा स्वकीय सचिवालयको व्यवस्थापन पक्ष सञ्चालन गरी मन्त्रालयको काममा सहज बनाउन तत्कालिन जिल्ला पार्टीले

मलाई हरिराजजीसँगको जिम्मेवारी दियो । आफुलाई तोकिएको काम अनुसार हामी दुइ जना सल्लाह गरी धनकुटा जिल्ला तथा अन्य जिल्लाको विकासे काममा बजेट व्यवस्था गर्ने कार्यमा हामी लागि परिरह्यौ । वहाँको अर्थराज्यमन्त्री कार्यकालमा धनकुटाको लागि विकासका लागि नियम तथा कानुनले मिल्नेसम्मको पहल गरी जिल्लामा बजेट ल्याउने काम भयो । पहिलो संविधानसभाको विघटन भएपश्चात बावुराम नेतृत्वको सरकार विघटन गरी दोश्रो संविधान सभाको लागि खिलाराज रेग्मीको अध्यक्षतामा मन्त्रिपरिषद गठन भयो । तत्पश्चात वहाँ हरिजी र म जिल्ला तर्फ आ-आफ्नो काममा लाग्न फर्कियौं ।

अत्यन्तै मिलनसार र कहिल्यै पनि दम्भको भाव राख्न आवश्यक नठान्ने, जो कोहीसँग सजिलै घुलमिल हुन सक्ने सरल स्वभावका धनी स्वर्गीय क. हरिराज खेवाको भौतिक शरिर हामीबीचमा नरहे तापनि वहाँका काम तथा कृतिहरू हामी माझमा जीवित रहेका छन् । वहाँले सम्पादन गरेको उल्लेखनीय तथा अविश्मरणीय कामहरू र वहाँको कर्मठता, अथकता तथा सृजनशीलता जस्ता गुणहरूको सरहना गर्दै त्यस्ता कार्यहरूबाट आफुले पनि पाठ सिकेर दैनिक जीवन व्यवहारमा लागु गर्न नहिच्किचाउनु नै क. हरिराज प्रतिको सच्चा श्रद्धान्जली र सम्मान तथा वहाँको कर्मठ व्यक्तित्वको कदर हुनेछ ।

# सम्झनाका तरेलीहरूमा क. हरिराज खेवा

**गणेश कुमार राई 'उज्ज्वल'**

कुनै पनि वस्तुको आदि र अन्त्य अवश्यम्भावी छ । यो ब्रम्हाण्डमा रहेका सम्पूर्ण वस्तुहरूको विकासपछि विनास अनिवार्य शर्त हो र स्वयम ब्रम्हाण्ड र प्रकृति विज्ञानको यो शास्वत नियम हो ।

हामीले यो दुनियाँ र भौतिक जगतलाई यसरी बुझ्दाबुझ्दै पनि कतिपय घटनाहरू यस्ता हुन्छन् जो स्वीकार्न हामीलाई निकै कठिन हुन्छ । सन्दर्भ २०७३ साल श्रावण १३ गतेको हो । जुनदिन हाम्रो तत्कालिन पार्टी नेपाल कम्यूनिष्ट पार्टी (माओवादी केन्द्र) का संयोजक क. हरिराज खेवालाई हामीले सदाका लागि गुमाएका थियौं । साविक मारेकटहरे गाविस वडा नं. २ (हाल महालक्ष्मी नपा-१) निवासी तत्कालिन हाम्रो पार्टीका जिल्ला सदस्य क.यमबहादुर कार्कीको बुवाको केही दिनअघि देहवसान भएकोले सपरिवारमा समवेदना तथा सान्तवना प्रकट गर्नको लागि क. हरिराज तथा तत्कालिन जिल्ला सल्लाहकार क. भोला थापालगायतका साथीहरू जानु भएको थियो । हाम्रो जिल्ला पार्टीको केही महत्वपूर्ण विषयमा सल्लाह गर्नुपर्ने भएकोले मैले फोनमा सम्पर्क गर्दा भोली धनकुटा बजार आएपश्चात बस्ने सल्लाह भएको थियो । तर, अचानक वहाँले भन्नुभएको भोली (उही श्रावन १३ गते) को करिव ११ बजे तिर एउटा खबर आयो कि वहाँ चढ्नु भएको गाडी सिधुवा बजार माथि दुर्घटनामा पऱ्यो । उक्त खबर सुने लगतै वहाँको अवस्था कस्तो होला ? भनेर मैले तत्कालै वहाँको फोनमा सम्पकै गरें, कल रिङ्ग गयो फोन उठेन । दुर्घटनामा

सिकिस्तै घाइते हुनु भएकोले उपचारार्थ उठाएर ल्याउने काम भैरहेको होला भनि मैले सोच्दासोंच्दै पनि आत्मसन्तुष्टिको लागि क. भोला थापाको फोनमा पनि कल गरें तर फोन उठेन । वहाँहरूसँग सम्पर्क हुन नसकेपछि अन्य साथीहरूसँग फोन सम्पर्क हुने क्रममा एकजना साथीसँग सम्पर्क हुँदा "अब हामीमाझ क. हरिराज रहनुभएन....." भन्ने खबर प्राप्त भयो । एकछिन त पत्याउनै गाह्रो भयो । त्यसपछि घटनास्थल आसपासका साथीहरूसँग सम्पर्क गर्ने क्रममा क. भोला थापा घाइते भएकोले उपचारको लागि धरानतर्फ पठाइएको र क. हरिराजको घटनास्थलमै निधन भएकोले हामीमाझ नरहनु भएको कुरा पुष्टि भयो ।

सो समयमा भर्खरै क. वादल (रामबहादुर थापा) नेतृत्वका नेकपा-माओवादी र तत्कालिन एकीकृत नेपाल कम्यूनिष्ट पार्टी (माओवादी) बीच केन्द्र र प्रदेशको एकता टुङ्गिएर जिल्लाको एकता सम्पन्न गर्न क. हरिराज खेवालाई संयोजक, म र क. अत्यन्त (कृष्ण लम्साल)लाई सह-संयोजक तोकेर पार्टीले जिल्ला स्तरीय एकताको कार्यसम्पन्न गर्ने सर्कुलर भएको थियो । तर, विडम्वना वहाँले औपचारिक रूपमा जिल्ला पार्टीको संयोजकको भूमिका निर्वाह गर्न नपाउदै त्यस दिनको घटनाले वहाँलाई हामीबाट चुडेर लग्यो ।

वहाँसँगको मेरो चिनजान र सहकार्य २०६४ सालको मध्यतिरबाट भएको थियो । यसभन्दा अघि मेरो भेट भएको थिएन । उमेर र राजनीतिक आन्दोलनमा सहभागी र भोगाईको हिसाबले म भन्दा वहाँ अग्रज नै हुनुहुन्थ्यो । हामी भेट हुनुभन्दा अगाडि वहाँको बारे सामाजिक राजनीतिक पृष्ठभूमि मलाई त्यति धेरै थाहा थिएन । तर २०६४ सालबाट वहाँसँगै रहेर पार्टीको कामकारवाहीहरूमा सहभागी भयौं । यहि समयमा कहिलेकाँही वहाँले व्यक्तिगत अंतरङ्गकै क्रममा आफ्नो राजनीतिक आन्दोलनमा सहभागीता विद्यार्थीकालबाटै प्रगतिशील विचारहरूबाट प्रभावित भएर कतिपय आन्दोलनहरूमा संगठित हुँदै काम गरेको कुराहरू सुनाउनु भएको थियो । सायद वहाँ सधैं परिवर्तनको पक्षमा उभिने सोँच र प्रवृति बोकेको मान्छे भएकोले होला । २०५२ सालबाट तत्कालिन नेकपा माओवादीले सञ्चालन गरेको जनयुद्धले २०५६/५७ तिर आइपुग्दा आफुलाई प्रभावित पारेको कुरा वहाँले सुनाउनु हुन्थ्यो ।

२०५७ सालको आसपासबाट तत्कालिन नेकपा माओवादीको विचारसँग नजिक रहेको लिम्बुवान राष्ट्रिय मुक्ति मोर्चा (जसलाई क. भक्तराज कनदङवाले नेतृत्व गर्नु भएको थियो) सँग पहिलो सम्पर्क भएको कुरा वहाँले बताउनु भएको थियो । यता क.भक्तराज दाइहरूसँग भेटघाट र सम्पर्क हुँदै गर्दा वहाँ तत्कालिन हात्तिखर्क गाविसको अध्यक्ष हुनुहुँदो रहेछ । विस्तारै गाविसको जनप्रतिनिधीको हैसियतमा रहिरहने समय समाप्त भएपछि वहाँ अध्ययनको सिलसिलामा काठमाण्डौंतिर लाग्नु भएको रहेछ । उतै रहँदा बस्दा देशैभरी राजनीतिक आन्दोलन र तत्कालिन नेकपा माओवादीद्वारा सञ्चालन भएको जनयुद्ध झन्झन् उचाईमा पुग्यो । त्यही सेरोफेरोमा २०६२/६३ को जनआन्दोलन उत्कर्षतिर पुग्दै गर्दा वहाँ पनि उक्त आन्दोलनको आधिवेहरीमा सहभागी हुँदै पार्टीको भूमिगत नेताकार्यकर्तासँग सम्पर्कमा रहेर काम गर्दैगर्दा त्यही समयबाट किरात राष्ट्रिय मुक्ति मोर्चा (क. गोपाल किरातीले नेतृत्व गर्नु भएको किरामुमो र क. भक्तराज कन्दङवाले नेतृत्व गर्नु भएको लिरामुमो को एकतापछि २०५८ सालमा गठन गरिएको मोर्चा ।) मा सम्पर्क रहेर काम गर्दै २०६२/६३ को जनआन्दोलनको सफलतापछि तत्कालिन सरकार र नेकपा-माओवादीबीच शान्ति वार्ता हुँदै युद्धविराम शुरु भयो । यस कार्यले विघटित संसदको पुनर्वहाली गर्दै अन्तरिम संविधान निर्माण गरी अन्तरिम व्यवस्थापिका, अन्तरिम सरकारको गठन गर्ने राजनीतिक सहमति अनुसार अन्तरिम व्यवस्थापिका र अन्तरिम सरकारमा हाम्रो पार्टी पनि सामेल हुँदै गणतन्त्र घोषणा गरी संविधान सभाको पहिलो बैठकले कार्यान्वयन गर्ने सहमति गर्दै २०६४ साल चैत्र २८ मा ऐतिहासिक संविधान सभाको चुनाव गर्ने सर्वपक्षीय सहमति भयो ।

उक्त सहमति अनुसार निर्धारित समयमा निर्वाचन हुने भएपछि हामीले निर्वाचनको तयारी गऱ्यौ । धनकुटा जिल्लामा २ वटा निर्वाचन क्षेत्र भएको कारणले वहाँलाई धनकुटा जिल्ला २ नं. क्षेत्रको उम्मेदवार बनाउने निर्णय जिल्ला पार्टीले गऱ्यो । सो समयसम्म वहाँ पार्टी र मोर्चाको एउटा तहमा रहेर काठमाण्डौं उपत्यकाभित्रै काम गरिरहनु भएको रहेछ । त्यो बेला हामीलाई पात्रसँगको प्रश्नभन्दा पनि चुनावमा विजय हासिल गर्नुको मुख्य सवाल थियो । वहाँ गाविस अध्यक्ष हुँदाको राम्रो छवि

निर्माण गर्नुका साथै एउटा राजनीतिक व्यक्तित्व समेत रहनु भएकोले वहाँलाई पार्टीले विश्वास गरी २०६४ सालको ऐतिहासिक संविधान सभाको चुनावमा हाम्रो पार्टीको उम्मेदवारमा अगाडि बढाइयो र महिनौं दिनसम्म चुनाव प्रचारप्रसारको अभियानमा जिल्ला पार्टी लाग्यो र फलस्वरूप परिणाम पनि पार्टीले सोचे अनुसार प्राप्त भई नेपालको इतिहासमै पहिलो ऐतिहासिक संविधान सभाको सदस्यमा चुनिने अवसर प्राप्त गर्नुभयो । यहाँसम्म आइपुग्दा वहाँ र मेरो वर्गीय मित्रताको सम्बन्ध र सहकार्यले एउटा चरण पुरा गरिसकेको थियो । तत्पश्चात वहाँ संविधानसभाको सदस्य भई जानु भएपछि हामी जिल्ला पार्टीको जिम्मेवारीमा रह्यौं । ऐतिहासिक राजनीतिक परिवर्तनलाई सम्बोधन गर्ने गरी नेपालको संविधान निर्माण गर्ने प्रयत्न गर्दागर्दै पनि पहिलो संविधानसभाबाट जनताको संविधान निर्माण गर्ने कार्य अधुरो हुन गयो र ऐतिहासिक संविधान सभाको विघटन समेत भयो ।

ऐतिहासिक संविधान सभाको विघटन पश्चात पुनः दोश्रो संविधान सभाको चुनाव हुने भएपछि सो चुनावमा पनि पुनः क. हरिराज खेवालाई नै धनकुटा जिल्ला क्षेत्र नं. २ को उमेदवार बनाउने निर्णय भई उमेदवार र पार्टीलाई विजय गराउने अभियानमा अथक प्रयास गर्दागर्दै पनि जित हासिल गर्न असमर्थ हुन पुग्यौं । निर्वाचन सम्पन्न भएपश्चात २०७१ साल वैशाख १४ गते छैटौं जिल्ला सम्मेलन सम्पन्न गर्ने कार्य भयो र उक्त सम्मेलनबाट ५१ सदस्यीय जिल्ला पार्टी कमिटिमा वहाँ सर्वसम्मत अध्यक्षमा चुनिनु भयो ।

हाम्रो पार्टीको एकीकरण पश्चात संयोजकको भूमिका निर्वाह गर्ने तथा पार्टी र जनताको हितमा काम गर्ने असिम चाहना हुँदाहुँदै पनि सम्वत २०७३ श्रावन १३ गतेको बस दुर्घटनाले हामी र हाम्रो पार्टीको एक होनाहार योद्धा तथा पार्टी र जनताको काममा थकाई नलिने कमरेडलाई सधैँ-सधैँका लागि गुमाउन हामी वाध्य भयौं । (

**(लेखक ने.क.पा., १ नं. प्रदेश सदस्य हुन् ।)**

# मध्यान्तरमै विदा हुनुभयो क. खेवा

**गोपाल गुरागाइँ**

जीवन वर्तमान यथार्थ हो । 'भविष्य जति सपना सजाई' पनि भन्ने गर्दछन् वर्तमानसँग मात्र जीवनमाथि तिम्रो अधिकार हुन्छ । भविष्य संयोगमा भर पर्छ । तर्सथ जीवन संयोगहरूकै श्रृखलाको आयाम हो । त्यसैले भनिन्छ गर्नुपर्ने कामलाई भोली भनेर नसाँच किनकि बिहानीसँगै नयाँ-नयाँ सम्भावना र परिवर्तनहरू भ्फुल्कन्छन् र अस्ताउछन् ।

म अहिले युवा नेता हरिराज खेवाको स्मृतिमा शब्दहरूलाई भावनामा गाँस्न पृष्ठभूमिको सुत्र सङ्गाली रहेछु । २०७३ साल श्रावण १३ गतेको बिहानीको कोमल स्पर्शले धर्तीलाई चुमेसँगै उनी यात्रामा निस्केका थिए । अनुमान गरौं कला साहित्यकारसमेत साधक ति युवा राजनितिज्ञका भावनाहरू सुन्दर समाज निर्माण गर्ने सपनामा रंगिएका थिए होलान् । तर जीवन यात्रा भनेकै अनिश्चित भविष्यको काल्पनिक कथा रहेछ क्यार ! निष्ठुर दुर्घटनाले सारा सपनाहरू आकस्मिक रूपमा तत्क्षण बाटैमा खोसिदियो र अन्धकार भयो । मध्यान्तरमै विदा भए यात्री ।

पाँचौ दशकको प्रारम्भका वर्षदेखि राजनीतिक, कला र साहित्यमा संलग्न बहुमुखी पहिचान बनाउँदै गरेका उदियमान युवा हरिराजलाई मैले चिन्ह र बुझ्न थालेको थिएँ । त्यसबेला तत्कालिन नेपाली राजनीतिमा नविन विचार र विजयका

साथ लोकप्रियताको यात्रामा आरोहण गरिरहेको शक्तिशाली राजनितिक पार्टी तत्काललिन एमालेको म जिल्ला प्रमुख थिएँ । बहुमुखी प्रतिभासाथ उल्टिरहेको त्यो युवा व्यक्तित्वमाथि मेरो भरोसा र विश्वास बढ्दै गयो । देशमा दोस्रो स्थानीय निर्वाचनको समय आएको थियो । जिल्लामा हामी योग्यतम प्रतिस्पर्धा व्यक्तिहरूको खोजीमा थियौं । हरिराजजस्तो बहुसम्भावनायुक्त युवालाई प्रतिस्पर्धाको मैदानमा उतार्नुपर्छ भन्ने निर्णय गऱ्यौ । उनले सूर्य चिन्ह लिएर गाउँका प्रमुख पदमा शानदार विजय प्राप्त गरे । उनको लोकप्रियता बढ्दै गयो ।

हाम्रो देशको काम आन्दोलन देशभक्तिपूर्ण लोकतान्त्रिक आन्दोलनको प्रमुख बैचारिक राजनीतिक नेतृत्वकारी शक्ति हो । त्यसैले राष्ट्रियताको रक्षा सबै प्रकारका शोषण अन्याय र विभेद विरुद्ध वर्गीय भूमि र लोकतान्त्रिक अधिकार प्रवृतिको लागि बलिदानपूर्ण आन्दोलन र सङ्घर्षहरूमा ऐतिहासिक सफलता पनि हासिल गरेको छ । वीर विरङ्गनाहरूका साहसिक गाथाहरूले इतिहास गौरवान्वित भएको छ । देशको निकाय र सम्वृद्धिको नेतृत्व पनि यसैले गर्दै आएको छ, तसर्थ यसको इतिहास सकरात्मक काम र सफलताले मात्र लेखिएको छैन ।

शिखर व्यक्तित्व मदन भण्डारीद्वारा प्रतिस्थापित जनताको बहुदलिय जनवाद सिद्धान्तको मार्गदर्शनमा सफलतासाथ अघि बढिरहेको तत्कालिन एमाले २०५४ सालमा दुर्भाग्यपूर्ण विभाजन विखण्डको स्थिति व्यहोर्न पुग्यो । त्यस समयमा अर्को बाम पार्टी तत्कालिन नेकपा माओवादी सशस्त्र कार्यदिशा लिएर जनवादी क्रान्ति गर्ने भनि क्रियाशील थियो । त्यस्तो वाम राजनीतिक परिघटनाहरूको बिचमा हरिराज माले हुँदै माओवादीको विचार र कार्यदिशामा सहमत भए त्यस्ता संलग्न भएको पाइन्छ । तर जहाँ पुगे पनि समाज निर्माण गरी जनतामा खुलियाली ल्याउने उनको सपना भने सधैँ साथ रह्यो ।

०६२/६३ को विराट लोकतान्त्रिक आन्दोलनको सफलतासँगै शान्तिप्रक्रिया हुँदै संविधानसभाको पहिलो निर्वाचनमा युवा नेता हरिराज आफ्नै गृह जिल्लाबाट संविधान सभामा निर्वाचित भए । त्यही संविधानसभाले नेपाललाई गणतन्त्र घोषणा

गऱ्यो । समकालिन युवा नेताहरूमा उनको राजनैतिक नेतृत्व विकासलाई निकै सफल मान्नुपर्छ। अहिले कम्यनिष्ट आन्दोलन एकीकृत भएर अपूर्ण सफलता प्राप्त भएको छ । दुर्भाग्यको कुरा वामपन्थी विकासको यो खुसीको समय हरिराज भने हाम्रो साथ रहेनन् ।

जस्को सम्मानमा म कलम चलाउने चलाउदै छु त्यो युवा व्यक्तित्व अब हाम्रो स्मृतिमा मात्र बाँचेको छ । उनका वर्तमान सहयोद्धाहरूलाई बाँकी अभिभारा सुम्पिएर उनी मध्यान्तरमै अस्ताएका छन् । उनले छोडेको बाँकी काम पुरा गर्ने जिम्मा वर्तमान उनका सहकर्मीमाथि आइपरेको छ। यनीहरूले हरिराजका अधुरा सपना पुरा गरेर आफ्नै निष्ठा र श्रेष्ठता प्रमाणित गर्नु पर्नेछ।

हरिराजलाई जन्मदिने मातृपार्टी एकिकृत भएर अहिले ऐतिहासिक सफलतासाथ देशको अभिभारा लिएको छ । नेपाली जनताले अमुल्य मतदान गरेर भारी विश्वासका साथ सरकारको नेतृत्व जिम्मा लगाएका छन् । यो राष्ट्र र जनताको सेवा गर्ने अपूर्व अवसर हो चुनौतीहरू छन् तर निष्ठा इमान र इच्छा शक्तिले चुनौतीहरूलाई अवसरमा बदल्न सम्भव छ। देश र जनताका चीर परिचित सुन्दर आकाङ्क्षाहरूलाई पुरा गर्दा मात्र स्वर्गीय हरिराजप्रति सच्चा श्रद्धाञ्जली हुनेछ । म राष्ट्र र जनताको सर्वोपरी हितमा शीरोधार्य गरेर सकेसम्म इमानमा नझुकी बाँचुञ्जेल लागिरहने संकल्प गर्दै स्वर्गीय हरिराजप्रति श्रद्धा सुमन अर्पण गर्दछु ।

**(लेखक धनकुटाबाट प्रतिनिधित्व गरेका पूर्व सांसद हुन् ।)**

**२०७६।०२।१५ गणतन्त्र दिवस**

# जहाँ प्राण गयो

## ज्ञानेन्द्रबहादुर कार्की

फोनमा घण्टी बज्यो, चित्रेबाट हिँडी सकेँ । स्थानीय तहसम्बन्धी छलफलमा सहभागी हुन छिटो जानु छ, भेला भएर बसिरहनुस् है भनेर फोन काट्नुभयो ।

अबका केही मिनेटमा आइपुग्नु हुन्छ भनेर हाम्रा आँखाहरूले उभै टिठ्याइरहे अन्ततः केही समय पछाडि सिधुवा बजारमा मानिसहरू भावविव्हल मनस्थिति लिएर झुण्ड-झुण्डमा परिणत हुन थाले । एकअर्कामा कानेखुसी गर्न थाले, कोही दौडन थाले, कोही म त हेर्न सक्दिनँ भनेर घरभित्र पस्न थाले । के रहेछ भनेर हामी पनि त्यतैतर्फ मोडियौँ । अन्ततः बस दुर्घटना भयो भनेर पो कुरा गरिरहेका रहेछन्, चासोका साथ सोध्यौँ - चर्चमुनिबाट बस खसेर तल बाटोमा आएको छ भन्ने सुन्यौ र दुर्घटनास्थल तर्फ लाग्यौं । दुर्घटनास्थलमा पुगेपछि भोला थापा घाइते अवस्थामा भेट्यौं र वहाँले हरिजीलाई सुम्सुम्याइ रहनुभएको थियो । हाम्रा आँखाहरूले हरिजीलाई नियाल्न थाल्यो । आँखा चिम्लिरहनु भएको शरीर उत्तानो परेर लडिरहेको रहेछ । टाउकोमा केही चोट र रक्ताम्य थियो । हामीले सोच्यौं प्राण त गएको छैन होला भनेर त्यही गाडीको सिट सिरानी लगाईदियौँ तर आँखाहरू खुलेनन्, प्राण त्यागीसक्नु भएको रहेछ ।

जनताका सुखदुःखमा सदैव साथ दिने स्वाभावका हरिजी साविक मारेककटहरे गाविस वडा नं. २ स्थित गाउँ कमिटि अध्यक्ष क. याम कार्कीको बुवा धनबहादुर कार्कीको सातौँ पुण्यतिथीमा श्रद्धाञ्जली अर्पण गर्नको निमित्त २०७२ साउन १२ गते धनकुटाबाट भोला थापा र हरिजी जानु भएको थियो । भोला थापाको भनाइअनुसार

: "याम कार्कीसँग एक घण्टा जति बसेर फर्क्यौं र रुद्र अधिकारीको घरमा बास बस्यौं । स्थानीय कार्यकर्ताहरू घमण्ड, डिक, नन्द खड्कासँग सामान्य वातचित भए र साउन १३ गते  बिहान साढे चार बजे उठेर चिया खाई पारी खाप्राङ उ.मा.वि.को बाटो हुँदै भोला गुरुङको घरमा पुगेर केही समय बस्यौं र त्यहाँबाट जङ्गलको बाटो हुँदै चित्रे निस्क्यौं । चित्रेमा नारद कटुवालले खाना बनाएर पर्खिरहनु भएको थियो । त्यहाँ आइपुगेपछि पनि म गोपाल सुवेदीसँग दारेगौंडा हुँदै सलबहादुर गुरुङको घरमा लौठसल्ला बोरामा हालेर जिरीथुम्का हुँदै जाने सल्लाह हुँदै थियो । त्यतिखेरै गणेश थापासँग भेट भयो । वहाँले सिलटिमुर, चिङफिङ झोलामा हालिदिनु भयो । गणेश र मैले पालो पालो बोक्दै चित्रे आइपुग्यौं । चित्रेमा इन्द्र पौडेलेसँग भेट भयो । मैले वहाँलाई सँगै जाउँ भने तर वहाँले हामीलाई पर्खिनु भएन । गाडी चढेर हिँडीहाल्नु भयो त्यतिखेरसम्म हरिजीले खाना नखाई पर्खिरहनु भएको रहेछ । त्यहाँ डम्बर अधिकारीहरूसँग गफ गरेर बसिरहनु भएको थियो । गणेश थापाले एक बोरा राम्रा खाले उसिनी खाने आलु मलाई ठिक पारिदिनु भएको थियो । हरिजीले भन्नुभयो । अब यो आलु धनकुटा लगेर भाउजुलाई उसिन्न लाउनु पर्छ अनि सिलटिमुर र चिङफिङको अचारसँग खानु पर्छ भनेर रमाइलो गर्नुभयो । धनकुटामा स्थानीय तहसम्बन्धी छलफलमा सहभागी हुनुपर्ने भन्दै हतार हतार खाना खान पस्यौं । खाना खाइसकेर चुठ्न निस्कदा बसन्तपुरबाट बस आइपुग्यो । गणेश थापाले हतार हतार आलु तथा हाम्रा बोराहरू लोड गरिदिनुभयो । हामीले चुठेर लोहोटासमेत भित्र राख्न पाएनौं । चिसै हात गाडीमा चढ्यौ । अगाडिका सिटहरू खाली थिएनन् । धेरै पछाडीका सिटहरूमात्र खाली भएकाले हामी उभियौं  । गाडीमा वीरबहादुर काफ्ले चढिसक्नु भएको रहेछ र ओल्लो चित्रेबाट महिला केटाकेटीहरू समेत चढे । हरिजीले फोनमा म गाडी चढिसकेँ चाडै आइपुग्छु भनेर जानकारी गराउँदै हुनुहुन्थ्यो । नभन्दै सिंहदेवी मन्दिरमुनिको घुम्ति घुमाउँदा गाडी स्पीडमा भएको थाहा पायौं । नजिकैको हउम्समा गाडी उफ्रियो के भयो भनेर सोध्दा ब्रेक फेल भयो भन्ने जवाफ पायौं । एक किलोमिटरसम्म गाडी गुडिरहँदा हरिजीले कम्तिमा पनि २० पटक भन्दा माथि नालीमा हाल भनेर अनुरोध गर्नुभयो । ड्राइभरले मानेन । अब गाडी पक्कै लड्छ भनेर झोला दरिलो बाँधे अगाडिको मानिसलाई

च्याप्प समाते हरिजीलाई मलाई समाउनुस् भने त्यतिखेर सम्ममा पुरुषहरू जति सिट छोडेर उठिसकेका थिए । पटक पटक अनुरोध गर्दा पनि म बचाउँछु भनेर अघि बढ्ने क्रममा चर्चको छेउमा आइपुगेपछि मोड्न नसकेर गाडी करिब ५० मिटर तल खस्यो । जब गाडी लडेर अडियो म आफूलाई सकुसल भएको महशुस गरेँ । मेरो पहिलो होस हरिजी कुन अवस्थामा हुनुहुन्छ भन्ने नै भयो । करिब ६-७ फुट पर हरिजीलाई देखेँ । टाउकोबाट रगत बगिरहेको थियो । मैले हातले थाम्न खोजेँ, रोकिएन । त्यतिबेलासम्म सिधुवाबाट ज्ञानेन्द्र, दिपक, मेघ ब., डिक ब. लगायतका साथीहरू आइपुग्नुभयो । ल हरिजीलाई बचाउनुहोस है भने । अलि मास्तिर गएँ । एउटा फोटो खिचेँ । अनि धनकुटामा देव खड्का सरलाई फोन लगाएँ फोन उठेन । खगेन्द्र खनाललाई फोन गरेँ, फोन उठ्यो, दुर्घटनाबारे जानकारी गराएँ । त्यसपछि कुसुम श्रेष्ठलाई फोन गरेँ । वहाँलाई हरिजीले प्राण त्यागिसक्नु भयो, मलाई लिन गाडी लिएर आउनुहोस् भनेँ । त्यसपछि एकाएक मलाई सारो पार्न थाल्यो । बोल्न आएन अडिन सकिनँ । त्यसपछि एकै पटक घोपामा बेडमा सुतिरहेको थाहा पाएँ ।

हामीले देख्यौँ यत्रतत्र मानिसहरू छटपटाइरहेका थिए । उद्दारकर्ताहरू सबैको ध्यान पूर्व अर्थराज्य मन्त्रीसमेत हुनु भएका हरिजी मै केन्द्रित थियो । घटनास्थलमै ९ जनाले प्राण त्यागिसकेका थिए । घाइतेहरू धमाधम एम्बुलेन्समा राखेर लगिदै थियो । केही बाँचेका मध्ये मारेककटहरे मचेपुका रमेश काफ्ले भाइ सकुशल हुनुहुन्थ्यो । समग्र यस दुर्घटनामा मेरा गाउँले आँखिभुई ९ मुलगाउँका २ जना भाइहरूको समेत मृत्यु भयो र घाइते एकजना हाल पनि मानसिक अपाङ्गताको अवस्थामा जीवन बिताइरहनु भएको छ । यस्तै यस दुर्घटनाबाट घाइते जीवन बिताउने धेरैको सङ्ख्यामा भएतापनि को कहाँ-कहाँको भन्ने यकिन छैन ।

२०२५ साल कार्तिक २७ गते स्व. हृदयमान लिम्बू र स्वर्गीय तीर्थमाया लिम्बुको तीन भाई छोरामध्ये माइला छोराको रूपमा जन्मनु भएका वहाँको प्रारम्भिक शिक्षा भारती मा.वि.मा कक्षा ३ सम्म, तल्लो गोकुण्डेश्वरमा कक्षा ७ सम्म, माथिल्लो गोकुण्डेश्वरबाट २०४५ सालमा एस.एल.सी. उत्तीर्ण गरी धनकुटा बहुमुखि

क्याम्पसबाट भूगोल विषयबाट स्नातक तह उत्तीर्ण गर्नुभएको थियो । जनकल्याण प्राथमिक विद्यालयमा हात्तीखर्कमा अध्यापन गराउनु भएका वहाँ २०५४ सालको स्थानीय निर्वाचनबाट हात्तीखर्क गाविस अध्यक्षमा निर्वाचित हुनुभएको थियो । राजनीतिमा सक्रिय रहनु भएका वहाँ २०६४ सालको संविधानसभाको पहिलो निर्वाचनमा धनकुटा क्षेत्र नं. २ नेपाल कम्युनिष्ट पार्टी (माओवादी) बाट निर्वाचित हुनुभयो र वहाँले नेपाल सरकारको अर्थराज्यमन्त्रीको हैसियतमा समेत जिम्मेवारी वहन गर्नुभएको थियो ।

साहित्यमा रूचि राख्ने वहाँले 'अपदस्थ जिन्दगी' नामक नाटक सङ्ग्रह लेख्नु भएको थियो । रेडियो नेपाल धनकुटा प्रशारण केन्द्रबाट प्रशारण हुने कार्यक्रममा उपेन्द्र दुःखी, लक्ष्मीकृष्ण श्रेष्ठ, राजकुमार राईहरूसँग धेरैवटा नाटकहरू रेकर्ड गराउनु भएको थियो ।

**(लेखक नेपाल कम्युनिष्ट पार्टी (नेकपा) छथर जोरपाटी गाउँ पालिका कमिटि सचिव हुन्)**

# स्वर्गीय हरिराज खेवा: एक व्यक्ति अनेक व्यक्तित्व

**मदनप्रसाद अधिकारी**

यो लेख प्रारम्भ गर्दा हरिराज खेवा अर्थात् मैले सधैँ सम्बोधन गर्न गरेको हरि सरलाई झलझली सम्झिरहेको छु । त्यसो त मेरो जीवन रहेसम्म मेरो मानसपटलबाट वहाँको छवि हराउने छैन, विलाउने छैन । हरि सरलाई मैले स्मरण गर्ने थुप्रै कारणहरू छन्, झण्डै एक दशक लामो वहाँसँगको चिनजानी मेरो निम्ति पनि उत्प्रेरणाका स्रोत बनेका छन् । मानिसको जीवनको परिभाषा सङ्घर्ष हो भन्ने राम्रोसँग आत्मसात गर्नु भएका हरि सरले म जस्ता धेरै व्यक्तिहरूलाई उत्साह, उत्प्रेरणा र सहयोगी भूमिका निर्वाह गरेको थाहा पाएर पनि मैले कुनै इर्ष्या गरिनँ । मानिसको भावनालाई छिट्टै बुझेर तत्काल सान्त्वना दिने पीडा र दुःखमा सहयोग गर्ने र सफलतामा खुसी हुने वहाँको बानीको अनुशरण गर्न पर्ने थियो मैले पनि तर आफू भने त्यति धेरै सामाजिक हुन कहिल्यै सकिएन । 'मान्छेको सफलता उसकै कर्म र सोचमा भर पर्छ' भन्ने गर्नुहुन्थ्यो वहाँ । साँच्चै नै यो भनाइ र वहाँको जीवनमा लागू भएको पनि मैले पाएँ ।

एउटा प्राथमिक तहको शिक्षक गाविस अध्यक्ष हुँदै नेपाल सरकारको सफल अर्थराज्यमन्त्री बनेर उच्च छवि बनाउन सफल भइसक्नु भएका व्यक्तित्वलाई जान्नेसुन्ने सबैले प्रशंसा गर्थे । वहाँलाई चिन्ने अभिभावकहरू कतिपयले त आफ्ना छोराछोरीलाई हरि सर जस्तै बनेर देशको र आफ्नो नाम राख्नु भन्ने उपदेश दिने गरेको पनि सुनेको थिएँ । वहाँको भौतिक अवसान पछि त्यस्तो कुरा त सुनिएन तर

राम्रो मान्छेलाई भगवानले छिट्टै आफ्नो बनाउँदा रहेछन् भन्ने चाहिँ धेरै मान्छेको मुखबाटछ सुनियो । तर लामो समयसम्म त्यो कहालीलाग्दो घटनाले मलाई भने विक्षिप्तजस्तै बनायो, कुनै प्रतिक्रिया थिएन मबाट, खाली यस्तो लाग्थ्यो कुन तत्वले आखिर चुँडाएर लग्यो वहाँको जीवन अनि कसरी, कुनै प्रतिक्रिया थिएन मबाट, खाली यस्तो लाग्थ्यो कुन तत्वले आखिर चुँडाएर लग्यो वहाँको जीवन अनि कसरी छुटाएर हामीलाई भेट्नै नसक्ने ठाउँमा पुऱ्यायो ? २ दिनसम्म प्रत्यक्ष वा फोन सम्पर्क भएन भने हैन सर हामीलाई कुन कुराले भेट गराउन सकेन ? माया त मार्नु भएको छैन नि ! यही मायालु शब्द मोबाइलको घण्टी हुँदै कानमा गुञ्जन्थ्यो । जस्तोसुकै परिस्थितिमा पनि हामी प्रत्यक्ष वा अप्रत्यक्ष भेट हुन्थ्यौँ । फेरि उही कुरा शुरु हुन्थ्यो विपन्न जनताको जीवनस्तर कसरी माथि उठाउन सकिन्छ ? शिक्षाको रूपान्तरण कसरी गर्न सकिन्छ ? पार्टीका कार्यकर्ताको भूमिका समुदायमा कसरी बढाउने, विकासका सम्भावनाहरू र प्राथमिकता आदि-आदि व्यक्तिगत कुरा धेरै कम अनि सामाजिक कुरा नै बढी हुन्थ्यो वहाँसँग । वहाँसँग एक्लै भेट गर्ने अवसर चाहिँ त्यति मिल्दैनथ्यो । अन्तरङ्गका मित्रहरू, पार्टीका नेता, कार्यकर्ताहरू, शिक्षक तथा कर्मचारीहरू, विकासप्रेमी प्रतिष्ठित व्यक्तिहरू, कार्यालयका प्रमुखहरूमध्ये कोही न कोहीको उपस्थिति हुने गर्दथ्यो । जो कोहीको उपस्थिति र आगमनलाई वहाँ सहज एवम् सहर्ष स्वीकार्नु हुन्थ्यो । त्यस समयमा भने हाम्रो छलफल निष्कर्षमा पुग्न बाँकी नै रहन्थ्यो । थाति रहेको विषयमा फेरी छलफल गर्ने भन्दै हामी छुट्थ्यौं ।

हरि सरका आदर्श व्यक्तिको रूपमा जननेता मदन भण्डारी पनि हुनुहुन्थ्यो रे । मदन भण्डारीको जनताको बहुदलीय जनवाद (ज.ब.ज.) २०४९ सालमा ने.क.पा.( एमाले) पाँचौं राष्ट्रिय महाधिवेशनले नेपालको सन्दर्भमा नयाँ र मौलिक विचारको रूपमा स्वीकार गरेपछि नेपाली कम्युनिष्ट आन्दोलनको उचाई बढेको र त्यसबाट प्रभावित भई कम्युनिष्ट विचारमा समाहित हुनु भएको रे । दुर्भाग्यवस २०५० जेठ ३ गते मदन भण्डारीको षडयन्त्रपूर्वक हत्या भएको घटनाले आफू निकै मर्माहत भएको कुरा वहाँले सुनाउनु भएको थियो । दक्षिण अफ्रिकी कम्युनिष्ट पार्टीका

युवा महासचिव क्रिस हानीको हत्या पनि त्यति बेलै भएको थियो रे ! नेपालले गुमाएको यस्ता महान् व्यक्तित्वको अभाव लामो समयसम्म खड्करिहेको र उनको अनुयायी हुँदा आफूलाई गर्वको अनुभूति भएको साथै अध्यक्ष प्रचण्डले कम्युनिष्ट केन्द्र बनाउनु हुनेमा आफू विश्वस्त रहेको अन्तरङ्ग कुराकानीमा बताउनु भएको थियो । यो कुरा त हामीलाई प्रशिक्षण दिने क्रममा वहाँकै समकक्षी नेता हेमराज भण्डारी 'सुदर्शन'ले पनि भन्नुभएको थियो । हेमराज भण्डारी र हरिराज खेवाले २०६४ मा भएको संविधानसभाको निर्वाचनमा तत्कालिन ने.क.पा.(माओवादी)को तर्फबाट धनकुटा जिल्लाको दुवै निर्वाचन क्षेत्रबाट विजय हासिल गरेपछि धनकुटेली जनताले निकै ठूलो अपेक्षा र आशा गरेका थिए । हरि सरको विकासको सपना पूरा गर्ने कार्यमा हेमराज भण्डारी अहोरात्र लाग्नु भएको हामीले पाएका छौँ ।

नरिसाए पछि रिसाउने व्यक्ति त्यसै मत्थर हुँदो रहेछ । जतिसुकै पत्थर हृदयको मानिसले आक्रोस व्यक्त गर्न खोजे पनि वहाँको अनुहारमा मैले क्रोधको भाव कहिल्यै भेटिन । स्वअध्ययन गर्नलाई कदापि अल्छि नगर भनेझैँ वहाँले असल ग्रन्थ, राजनीतिशास्त्र, अर्थशास्त्र, साहित्य र दर्शनको गहिरो अध्ययन गर्नु भएको थियो । स्वअध्ययनले नवयुवकको पालनपोषण गर्दछ, वृद्धहरूलाई मनोरञ्जन दिन्छ, घरपरिवारलाई खुसीयाली प्रदान गर्दछ र स्वयम् व्यक्तिलाई विनम्र बनाउँदछ भन्ने सिसेरोको भनाइजस्तै वहाँ विनम्र हुनुहुन्थ्यो । अनि अर्थशास्त्रको गहिरो अध्ययनले वहाँलाई अर्थराज्यमन्त्री समेत बनायो, सफल पनि हुनुभयो । अर्को शब्दमा भन्नु पर्दा वहाँका विषयमा कुनै आलोचनाका शब्दहरू सुन्न वा पढ्न पाइएन । त्यसैले मलाई लाग्छ वहाँ धेरै नै विचारवान् व्यक्तित्व हुनुहुन्थ्यो ।

जिन्दगी नै मृत्युको प्रयोगशाला हो भनिए झैँ वहाँ अर्थात् हरि सर मृत्युसँग कहिल्यै डराउनु भएन । तत्कालिन माओवादी जनयुद्धमा वहाँको भूमिका उल्लेख्य रहेको थियो । म पनि सघन रूपमा वहाँसँगै सम्पर्कमा थिएँ वहाँकै गाउँको विद्यालयमा प्र.अ. हुनुको नाताले । मृत्यु सास्वत् सत्य हो तर अन्याय हुन दिनु हुन्न भन्नेमा हामी सचेत थियौँ । मलाई भारती मा.वि.बाट तत्कालिन सुरक्षाकर्मीले अपहरण गर्न खोज्दा वहाँले नै काम गर्ने मान्छेलाई काम गर्न देउ भने पछि छुटकारा पाएको थिएँ

त्यसबेला । हरि सर ! तपाईको पवित्र आत्माप्रति म र सिङ्गो तपाईका साथी भाई नतमस्तक छौँ । तपाईको विगतमा हामीप्रति गरेको मित्रवत् व्यवहारको स्मरण गरिरहने छौँ । हाम्रो आदर्श नै तपाइँ हो । तपाईको सपना साकार पार्ने दिशामा केन्द्रित हुनु नै हाम्रो लक्ष्य हो ।

# वहाँबाट मैले धेरै ज्ञान प्राप्त गरें

**ऋषिराम ढुंगाना**

क. हरिराज खेवा लिम्बू, बहुप्रतिभाका प्रतिमुर्ती हुनुहुन्थ्यो । वहाँका विभिन्न लेख रचनाबाट वहाँलाई बहुप्रतिभाशाली भन्न सकिन्छ । २०५४ सालमा तत्कालिन एमालेबाट हात्तिखर्क गाविसको अध्यक्ष जस्तो गरिमामय पदमा निर्वाचित भई जनताको सेवकको रूपमा काम गर्दै आफ्नो जिम्मेवारी पूरा गर्दै आउने क्रममा २०५२ सालमा उद्घोषित जनयुद्धको प्रभाव परेका कारण तत्कालिन माओवादीको सिद्धान्त र विचारसँग सहमत हुँदैं काठमाडौं विस्थापित हुन बाध्य हुनुभएका क. हरिराज खेवा लिम्बू विभिन्न उतारचढाव पार गर्दै काठमाडौंमा केही व्यावसाय गर्दै राजनीतिलाई अगाडि बढाउदैं जाँदा २०६३ सालमा तत्कालिन ने.क.पा. माओवादीको मूलघरमा बैठकबाट 'एसीएम'को भूमिकामा संगठित हुँदै पार्टीले दिएका जिम्मेवारी पूरा गर्दै, २०६४ सालको संविधान सभाको निर्वाचन धनकुटा क्षेत्र नं. २ बाट सभासद निर्वाचित ने.क.पा. माओवादीको तर्फबाट सभासद् निर्वाचित भएपछि अर्थराज्यमन्त्री हुनुभएका क. हरिराज खेवा अत्यन्तै मिजासिलो, कर्तव्यनिष्ठ, जिम्मेवारीप्रति गम्भीर बन्ने स्वभाव र सबैसँग मिलेर देश र जनताको भलाई गर्ने हुनुभएकाले धनकुटा र समग्र देशको विकासमा महत्वपूर्ण भूमिका खेल्दै आउने क्रममा २०७१ साल बैशाख महिनामा भएको एनेकपा माओवादीको अधिवेशनबाट अध्यक्षमा निर्वाचित हुनुभयो र सचिवमा म निर्वाचित भएँ । पछि लिम्बुवान राज्य समितिकै सबैभन्दा राम्रो सङ्गठन धनकुटा जिल्लामा स्थापित भयो र वहाँ कुशल संगठकको रूपमा स्थापित हुनुभयो खास गरेर क. हरिराज खेवा अध्यक्ष र म सचिव भएको वेलामा धनकुटामा निकै महत्वपूर्ण कामहरू

भएका छन् । पार्टी केन्द्र  र प्रदेशले सर्कुलर गरेका विभिन्न सङ्गठनात्मक काम, आन्दोलनका मोर्चा, आर्थिक काम सबै धनकुटाले जिम्मेवारी पूरा गरी धनकुटाको पार्टीलाई मजबुत बनाउने क्रममा तत्कालिन् ने.क.पा. (माओवादी केन्द्र)को केन्द्रीय सम्मेलन आयोजक समिति सदस्य, लिम्बुवान मोर्चाको महासचिव लगायत जिम्मेवारी पूरा गरिरहेको अवस्थामा पार्टी कार्यकर्ताको राम्रो रेखदेख गर्ने अत्यन्त कुशल व्यक्तित्व भएका कारण कार्यकर्ताको तत्कालिन मारेकटहरे गा.वि.स.का यम ब. कार्कीको बुवाको स्वर्गारोहण भएको ठाउमा समवेदना दिन जानुभएको र फर्कने क्रममा बसमा २०७३।४।१३ गते धनकुटाको परेवादिनको सिधुवा बजार सिरानमा गाडीको ब्रेकफेल भई दुर्घटना हुँदा वहाँको स्वर्गारोहण हुन गएकोमा सिङ्गो पार्टी, धनकुटाबासी शोकाकुल हुन पुग्यो ।

वहाँको शव बजार परिक्रममा गरी श्रद्धाञ्जली सभा गरी अन्त्येष्टि गर्दा सशस्त्र प्रहरीबाट राष्ट्रिय सम्मान र पार्टीका स्थायी समिति सदस्य क. गोपाल किराँतीले पार्टीको झण्डा ओढाएर सम्मान साथ अन्त्येष्टि गरिएको थियो । वहाँको अभावमा अहिले पनि पार्टी पूर्णता नभएको जस्तो अनुभूत भएको छ । वहाँको नाममा धनकुटा तत्कालिन माओवादी केन्द्रले क. हरिराज खेवा स्मृति प्रतिष्ठान दर्ता गरी विभिन्न कार्यक्रम गर्दै आएको छ। रक्तदान कार्यक्रम, फलफूल वितरण कार्यक्रम, पुरस्कार वितरण कार्यक्रम आदि स्मृति दिवशमा गर्दै आएको छ। साथै स्मृति ग्रन्थ प्रकाशन कार्यक्रममा छोटो मेरो तर्फबाट स्मरण मात्र गर्न सकेँ। अन्त्यमा वहाँबाट मैले धेरै कुराको ज्ञान प्राप्त गरेको छु। वहाँलाई सदैव स्मरण गर्दै लक्ष्य पूरा गर्ने प्रण गर्दछु।

**(हरिराज खेवा एनेकपा माओवादीका जिल्ला अध्यक्ष हुँदा लेखक सचिव थिए)**

# समाजसेवी हरिराज खेवाले गरेको कार्य

**सपना**

स्व. हरिराज खेवा विकासप्रेमी, सामाजिक न्याय र परिवर्तनको निम्ति अहोरात्र लागिरहने जुझारु युवा नेता गुमाउदा सिङ्गो राष्ट्रलाई अपुरणीय क्षति पुगेको छ । सधैँ सामाजिक काममा सोचिरहने, लागिरहने व्यक्तित्वको समाजमा खाँचो हुँदो रहेछ । मानिस यो धर्तीमा जन्मछ अनि मर्छ यो एउटा प्रकृतिको नियम हो कुन बेला कतिखेर कहाँ मरिन्छ भन्ने कुरा थाहा हुँदैन । तर बाँचुन्जेल आफ्नो व्यक्तिगत स्वार्थ भन्दामाथि उठेर काम गर्ने मानिस थोरै मात्र पाइन्छ । वहाँसँग यस्तो खालको स्वभाव थियो पहिले समाजिक क्षेत्र र पार्टीको कामलाई प्राथमिकतामा राखेर सोधखोज गर्ने गर्नुहुन्थ्यो । सदैव देश जनताको पक्षमा लागि रहने कुसल योद्धा गुमाउदा सिङ्गो पार्टी सामाजिक क्षेत्र र राष्ट्रलाई नै क्षति भएको छ वहाँप्रति भावपूर्ण श्रद्धाञ्जली अपर्ण गर्दछु ।

धनकुटाको मारेककटहरेमा कार्यकर्ता भेटघाटको कार्यक्रम सकेर धनकुटा सदरमुकामतर्फ फर्कने क्रममा छथर जोरपाटी गाउँपालिकाको सिधुवा बजारनजिक हिलटप होटलभन्दा माथिल्लो घुम्तीमा २०७३ साल साउन १३ गते सङ्खुवासभाको मुढेशनिश्चरेबाट सुनसरीको धरानतर्फ जाँदैगरेको बा २ ख ७३६६ नम्बरको डाँफे मुनाल बस दुर्घटनामा परि खेवाको निधन भएको खबर सुन्ने वितिकै पत्याउनै गाऱ्हो भएको थियो । स्व. खेवा पहिलो संविधान सभाको निर्वाचनमा धनकुटा क्षेत्र नं. २ बाट निर्वाचित भई बाबुराम भटराई प्रधानमन्त्री भएको बेला अर्थराज्य मन्त्री बन्नु भएको थियो । स्व.खेवाको राजनीतिक, सामाजिक संलग्नता २०४६ सालको

प्रजातान्त्रिक आन्दोलन पछि राष्ट्रिय जनजाति पार्टी स्थापनाको लागि पहल र उक्त समयमा जातीय पार्टी दर्ता नहुने भएपछि राष्ट्रिय जनमुक्ति पार्टीबाट राजनीतिक यात्रा शुरु गरी २०४८ को राष्ट्रिय चुनाव र २०४९ को स्थानिय चुनावमा ने.क.पा. छैटौं मा रही चुनाव बहिस्कार गर्नु भएको थियो। २०४७ सालदेखि अस्थायी शिक्षक जनकल्याण प्रा.वि. हात्तिखर्क- ५ मा नियुक्ति भई २०५० मा स्थायी शिक्षक नियुक्त जनकल्याण प्रा.वि.मा अध्यापन गराउदै २०५१ देखि सोही विद्यालयमा प्र.अ.को जिम्मेवारी समेत बहन गर्नु भएको थियो । त्यसैगरी २०५४ सालको स्थानीय चुनावमा हात्तिखर्क गाविसमा ने.क.पा. एमाले पार्टीबाट अध्यक्षको उम्मेदवार भई अत्याधिकमतले बिजयी हुनु भएको थियो । वि.सं. २०६३ मा गौरवशाली पार्टी ने.क.पा. (माओवादी) मा प्रवेश गरी जनवर्गीय सङ्गठनमा रहेर काम गर्दै आउनु भएका खेवाले जिल्ला पार्टी सङ्गठनमा रहेर काम गर्दै आउनुभएको थियो ।

२०६४ सालको ऐतिहासिक संविधान सभाको निर्वाचनमा धनकुटा क्षेत्र नं. २ बाट पूर्व प्रधानमन्त्री सूर्यबहादुर थापालाई पराजित गरी विजय हासिल गर्नु भएको थियो । २०७१ वैशाखमा माओवादीको धनकुटा जिल्ला समितिको अध्यक्ष रहेको माओवादी घटकहरूको एकता पछि बनेको ने.क.पा. (माओवादी केन्द्र) धनकुटा जिल्ला संयोजक रहेको र लिम्बुवान राष्ट्रिय मुक्तिमोर्चा नेपालका केन्द्रिय महासचिव हुनुहुन्थ्यो। खेवाले साहित्य क्षेत्रमा कलम चलाउनु भएको थियो भने शीरको टोपी, अपदस्त जिन्दगी (नाटक), रेडियो नेपाल पूर्वाञ्चल क्षेत्रीय प्रशारण केन्द्र धनकुटामा प्रथम पुरस्कार जित्नु भएको थियो। छोटो समयमा नै यति धेरै काम गर्न सफल सक्ने क्षमतावान हाम्रो नेता,अभिभावक हामीले गुमाउदा अपुर्णिय क्षति भएको छ।

# हरिराज खेवा (लिम्बू)को सम्झनामा

**तिलकप्रसाद राई**

हरिराज खेवा जिल्ला धनकुटा हात्तिखर्क गाविस वडा नं. ६ हाल छथर जोरपाटी गा.पा. वडा नं. १ मा जन्मिनु भएको हो । साविक हात्तिखर्क निवासी चर्चित सुब्बा हृदयमानका छोरा भनेर मैले २०५४ साल अगाडि सुनेथें । मेरो घर साविक आँखिसल्ला गाविस वडां न. ५ थलथलेमा भएकोले हजुरको बारेमा त्यो चाहिँ जानकारी थियो ।

२०५३ सालसम्म वहाँ पनि हात्तिखर्कभित्र प्रा.वि.मा शिक्षक पेसामा रही सो पेशावाट २०५४ सालको गाविसको निर्वाचनमा हात्तिखर्क गाविसबाट अध्यक्ष पदमा विजयी भए ।

म पनि आँखिसल्ला स्थितका विद्यालयमा शिक्षक पेशामा रहेका बेला २०४९ कै गाविसको निर्वाचनमा आँखिसल्ला गाविसबाट अध्यक्ष पदमा निर्वाचित भएको थिए । २०५४ सालको गाविस निर्वाचनमा पुनः गाविस अध्यक्षमा निर्वाचन भएको हुँदा हरिसँग राम्रो चिनजान गर्ने अवसर मिल्यो ।

हाम्रो चिनजान भेटघाट विचार आदान प्रदानको क्रममा म भन्दा कलिलै उमेरका हरिका मननयोग्य वाणीहरू थुप्रै पाइयो । वहाँका उच्च मनोवल चाहे राजनीतिक दलहरूमा पनि भेदभाव देखिएन । आदिवासी जनजाती उत्थानको सवालमा राज्यमा समानुपातिक समावेशी वनाउने सवालमा प्रष्ट हुनुहुन्थ्यो । शिक्षक पेशावाट राजीनामा दिई तत्कालिन हात्तिखर्क गाविसको गाविस अध्यक्ष भएका हरि माओवादीको भातृसङ्गठन लिम्बुवान राष्ट्रिय मुक्ति मोर्चा कोषाध्यक्ष,

२०६४ सालको पहिलो संविधानसभामा निर्वाचित भई नेपाल सरकारको अर्थराज्य मन्त्रीको जिम्मेवारी पनि कुशलतापूर्वक निर्वाह गर्नुभयो । तत्कालिन नेपाल कम्यूनिष्ट पार्टी माओवादीको धनकुटा जिल्लाको २०७२ सालमा सम्पन्न पार्टीको जिल्ला अधिवेशनमा पार्टीको जिल्ला अध्यक्षमा निर्वाचित हुनुभयो । पार्टी कार्यको शिलशिलामा मारेककटहरे गाविसबाट फर्कने क्रममा २०७३ साल श्रावण १३ गतेका दिन धनकुटाको सिधुवा बजार नजिक बस दुर्घटनामा परि हरिराज खेवा दिवंगत हुनुभएको तीन वर्ष पुगिसकेछ । यस तेस्रो वर्षको पुण्य तिथिमा मेरो मित्र सहयात्री खेवाप्रति सदा सम्झना ।

(**लेखक-हरिराज खेवा स्मृति प्रतिष्ठान धनकुटाका जिल्ला उपाध्यक्ष हुन्**)

# शैक्षिक भ्रमणमा खेवा र मलाई बसले छोडेको त्यो पल

**रमेशचन्द्र अधिकारी**

वि.सं.२०४८ साल हिउँद याम । धनकुटा नगरपालिका ४ देब्रेबासको पोखेल होटलमा ह्याण्डसम् एक युवकसँग भेट भयो । चिनजान भएकै दिनदेखि करिब दैनिकजसो नियमित भेटघाटको क्रम बाक्लिदै गयो । उनको व्यक्तित्व र मिलनसार व्यवहारले नजिकपन त थियो नै, अझ मेरो घरै नजिकको उनको डेराले हामीलाई नजिक्याएको थियो । बिहानीपख क्याम्पस आतेजाते गर्दा पनि साथै हुन्थ्यौं । भर्खरै जुँगाको रेखी बस्दै गरेका हामी पढाईमा अघिपछि भएपनि मित्रवत् व्यवहार थियो । चिनजानको क्षणदेखि नै औपचारिक सम्बोधनले दुवैलाई बोलाउने गर्थ्यौं । मलाई रमेश जी र उनलाई म हरि जी । हरि अर्थात हरिराज खेवा बालसखा । यसक्रममा कयौं पटक मेरो घर र वहाँको डेरा आतेजाते चलिरहन्थ्यो । अहिले स्मरण गर्दै जाँदा किशोरावस्थाका उरेन्ठेउला गफदेखि नाटक, कविता र अन्य समसामयिक अन्तरङ्ग कुराकानी हुने गर्थ्यो ।

२०४९ सालमा साताव्यापी शैक्षिक भ्रमणको क्रममा हामी गोर्खा, पोखरा, काठमाडौं लगायतका स्थानमा सँगसँगै भयौं । शैक्षिक भ्रमणमा हामीसँग अघिल्ला तहमा पढ्ने केहि साथीसँगी पनि गएका थिए । जहाँ हरिसहित केहि थिए । म सँग सुरक्षित रहेका ऊबेला खिचेको तस्बिर नियाल्दा हरिजीको सम्झना ताजै गराउँछ । गोर्खाको पृथ्वीनारायण शाहको दरबार, गोखरनाथ मन्दिर, गोर्खा बजार र पोखरामा फेवाताल, चमेरेगुफा लगायत घुम्नलायक स्थानमा घुमेको याद ताजै

छ । पोखराबाट फर्कनेक्रममा तनहुँको आँबुखैरेनीमा बास बस्दा अरू साथी र साथमा गएका सरहरूलाई छलेर हामी फिल्म हेर्न गएको भर्खरजस्तै लाग्छ । राति अबेर फिल्म हेरेर बास बसेको होटलमा फर्कदा सरहरूले थर्काएको सम्झदा अहिले पनि डर लाग्छ ।

पोखरापछि काठमाडौंको यात्रा । काठमाडौंका कयौं स्थान घुमेपनि गोदावरीमा धेरैबेर तस्बिर कैद गर्दै अलमल गऱ्यौं । अलमल गर्दागर्दै हरि, यम राय (हाल बेलायत), विक्रम खड्का (हाल अमेरीका) लगायत छुट्यौं । हामीले रिजर्भ गरेको बसले छोडेर दक्षिणकाली मन्दिर गएछ । अहिले जस्तो मोबाइल साथमा थिएन । हामीमध्ये यम रायबाहेक अरु पहिलो पटक काठमाडौं गएका थिएनौं । कसो गर्ने भन्ने फसाद पऱ्यो । तर, गोदावरीपछि दक्षिणकाली जाने भन्ने हामीलाई थाहा थियो । हतार गर्दै दक्षिणकाली जाने बस चढ्यौं । बिच बाटोमा हाम्रो गाडी फर्कदै गर्दा रोकेर हामी पनि फर्क्यौं । दक्षिणकाली पुग्ने हाम्रो इच्छा भने पुरा भएन । काठमाडौंको घुमाइपछि फर्कने क्रममा हामी हेटौडामा बास बस्यौं । त्यहाँ भने सर र साथीहरूको साथ छोडेनौं । गर्मीको महिना पङ्खाको हावा खाँदै सुत्यौं ।

हरिजीसँगको अर्को श्रृङ्खला नाटकमा रह्यो । हामीले रेडियो नेपाल क्षेत्रीय प्रशारण केन्द्रमा केहि नाटक सँगै रेकर्ड गरायौं । कुनैमा प्रमुख त कुनैमा सहायक पात्रको रूपमा मेरो अभिनय हुन्थ्यो । तर, हरिजीको भने प्रायः खलनायक । बोलीमा असाध्यै शक्ति रहेकोले नाटक रेकर्ड गर्दा अभिनयको क्रममा पनि रमाइलो महशुस गराउँथ्यो । रेडियो पछि केहि मञ्चमा प्रस्तुत गरिएका नाटकमा पनि हाम्रो साथ थियो । क्याम्पस र सामुदायिक भवनमा गरेका नाटक विशेष स्मरणमा छ ।

नियमित शारीरिक व्यायम तथा लुगा र जुत्ता पहिरन पनि रोजाईको हुने भएकोले हरिजीको व्यक्तित्व प्रभावशाली देखिन्थ्यो । राजनीतिमा आवश्यक पर्ने गुणमध्ये नम्रता तथा व्यक्तित्व हरिजीको उत्तम थियो । यसले गर्दा पनि २०५४ मा साविकको हात्तिखर्क गाउँ विकास समितिको अध्यक्ष पदमा विजयी हुनुभयो । हरिजी राजनीतिमा सक्रिय र म प्रविणता प्रमाणपत्र तहपछि स्नातक तहका लागि

धरानस्थित महेन्द्र बहुमुखी क्याम्पस गएँ । त्यसपछि धनकुटा आतेजाते गर्दा मात्र भेटघाट हुन्थ्यो । त्यसपछिका क्षण पत्रकारितामा मेरो क्रियाशीलता र हरिजीको राजनीतिमा सक्रियताले पनि भेटघाट बाक्लिने क्रम बढ्यो ।

२०६४ सालको संविधानसभा निर्वाचनमा तत्कालिन नेकपा माओवादीबाट हरिजी सभासद्मा निर्वाचित हुँदाको एउटा सम्झना ताजै छ । सामुदायिक भवनबाट म कान्तिपुर एफएममा निर्वाचनको प्रत्यक्ष प्रशारणमा थिएँ । माओवादीका समर्थकको उल्लेख्य भिड लागेको थियो । अन्तिम नतिजापछि निकटतम प्रतिस्पर्धी एमालेका धर्मराज पौडेल सामुदायिक भवनबाट बाहिरीने क्रममा बाहिरी गेटमा हरिजी र धर्मराज दाइको भेट भयो । धर्मराज दाइले सबैको अगाडि उभिएर हरिजीलाई बधाइसहित छोटो प्रभावशाली मन्तव्य दिनुभयो । त्यसबेला दुवैले हात मिलाएर बधाई र सान्त्वना बाँडेको एउटा उदाहरणीय क्षण म सम्झन्छु । राजनीतिमा पानी बाराबार गर्नेका लागि त्यो एउटा उदाहरणीय र अनुकरणीय कार्यको रूपमा लिने गर्छु । अझ सफल नेतामा हुने गुणको रूपमा त्यसलाई लिन मन लाग्छ । हरिजी पुनः अर्थ राज्यमन्त्री हुँदा हाम्रो बाक्लै भेटघाट हुने गर्थ्यो ।

मलाई हरिजीसँग जोडिएको क्षणमध्ये एउटा नीजि कुरा सम्झिरहेछु । एक दिन अर्थ राज्यमन्त्री भएकै बेला गाडीमा हुँदा पनि रोकिएर बोलचाल गर्ने क्रममा मेरो भाँचिएको खुट्टाको अवस्था बुझ्नु भयो । मैले त्यसबेला प्रायः छालाको हिल भएको जुत्ता लगाउँने गर्थे । हरिजीले हिलवाला जुत्ताको सट्टा स्पोट्स सुज लगाउन सल्लाह दिनुभयो । साँच्चै मैले त्यस बेलादेखि हालसम्म विशेष औपचारिक कार्यक्रम बाहेक सधैं स्पोट्स सुज मात्रै लाउँदै आएको छु । झन्डै अढाई दशक मित्रवत् सम्बन्ध जोडिएका हरिजीसँगको स्मरण यतिमा मात्र सिमित छैन । स्मरणका दुःखद क्षणले पिरोलिरहन्छ । २०७० साउन १३ गते विराटनगरमा थिएँ । अज्ञात नम्बरबाट फोन कल आयो । सिधुवाका दिवेश खड्काले अत्तालिएको स्वरमा भने, 'दाइ सिधुवा बजार माथि बस दुर्घटना....।'

मैले घटनाबारे सोधखोज गरें । उनी घटनास्थलमा थिए । घटनालगत्तै मलाई

जानकारी गराउनेक्रममा भन्दै गए, 'दाइ पूर्व राज्यमन्त्री पनि पर्नुभएको छ।' यत्ति भन्दा मलाई दुर्घटनामा सामान्य घाइतेको रूपमा हरिजीको नाम उनले उच्चारण गर्लान् भन्ने मात्र थियो। तर, अकल्पनिय, अपत्यारिलो सत्य उनले सुनाउँदा स्तब्ध त भएँ नै, अझ चिकित्सकबाट पुष्टि गर्नुपर्छ भन्ने सुझाएँ। खड्काले अब पुष्टि गर्नु नपर्ने अवस्थामा मेरै अगाडि वहाँको शव रहेको बताइरहँदा पनि त्यो सत्य नभइदियोस् भन्ने कामना मात्र गरिरहें। तर, जे नहुनुपर्थ्यो त्यै भयो। घटनामा घाइतेसँग भेट्दा पनि ब्रेकफेल भएको गाडीका चालकलाई हरिजीले भित्तामा ठोक्काउन भन्दै चिच्याएको सुनाए। आफू मात्र नभएर अरुलाई पनि बचाउने चाहना रहेको सहज अन्दाज गर्न सकिन्छ। यसरी एउटा असल मित्रको अन्तिम बिदाइ गर्नु परेको स्मरण गरिरहँदा मन भारी हुने गर्छ। हामीले असल मित्र मात्र गुमाएनौं, परिवारजनले असल अभिभावक र राष्ट्रले असल नेता गुमाएको छ। हार्दिक श्रद्धासुमन हरि जी !

**(लेखक-कान्तिपुर दैनिकमा कार्यरत छन्।)**
**धनकुटा ४, देब्रेबास।**

# त्यो अन्तिम नमस्कार

**देवेन्द्र खापुङ सुर्केली**

म न्यूप्लाजाको मोडबाट प्रदर्शनी मार्गतर्फ पैदल बढ्दै थिएँ -सिंहदरबारतर्फबाट आएको स्कुटरको पछाडि बसेका हरिराज खेवासँग मेरो आँखा जुध्यो ।

खेवाले दुवै हात जोडेर 'नमस्कार' गरे । स्कुटर कुदिरहेकै थियो, त्यसैले मैले हात उठाएर फर्काएको नमस्कार उनले राम्ररी देख्न पाएनन् होला । म सरासर अगाडि बढेँ ।

उमेरमा जेठो भए पनि साइनोले हरि मेरो भान्जा पर्छन् । धेरै किसिमले अगाडि भएकाले हामीमा मामा भान्जा भन्दा बढि दाजुभाईको जस्तो व्यावहार थियो । हाम्रो सम्बोधन त मामा-भान्जा नै हुन्थ्यो, तर साथीजस्तो नै भेट्दा हात उठाएर अभिवादन गर्ने चलन थियो । तर त्यो दिन स्कुटरको पछाडि बसेर मोडमा चालकलाई समात्नुपर्नेमा दुवै हात जोडेर नमस्कार गरेकाले मैले नबिर्सिएको हो ।

त्यसको केहीदिन पछि मेरो बहिनी ममताबाट कल आयो -'धनकुटाको केही खबर पाइस् ?' मैले केही थाहा नपाएको कुरा गरेँ । ममताले फेरि थपिन् -गाडी एक्सीडेन्ट भयो रे ! हरि पनि पर्‍यो रे ! भन्ने खबर छ बुझ् त ?

मैले हतारहतार तत्कालिन डिएसपी चन्द्रकुबेर खापुङ दाइलाई फोन गरेँ । तर वहाँले पनि थाहा नपाएको कुरा गर्नुभयो । केहीक्षणपछि वहाँले आफ्नो संयन्त्रमार्फत बुझेर घटनाको जानकारी दिनुभयो । त्यत्तिञ्जेलसम्म टेलिभिजनहरूमा ब्रेकिङ न्युज तथा फेसबुकमा समवेदना आउन थालिसकेका थिए । म पुरै 'नोष्टाल्जिक' बनेँ ।

## हरिभान्जासँग पहिलो भेट

म २०६१ सालदेखि काठमाडौंको विजुलीबजारमा बस्न थालेँ । त्यहाँ बस्दाबस्दै पुलछेउमा रहेको कम्युनिकेशन सेन्टर चलाउन थालेँ । त्यो कम्युनिकेशन सेन्टर व्यवसायमात्र नभएर धेरै साथीभाईसँगको सम्पर्क केन्द्र जस्तै बन्न पुग्यो । म नेपाल स्वतन्त्र विद्यार्थी मोर्चा र लिम्बू विद्यार्थी मञ्चसँग आवद्ध भएकोले पनि त्यो ठाउँ सम्पर्क केन्द्र बन्न पुगेको हो । दिनमा एकचोटी भेट हुनेमा थर्कदीप तिगेला पनि थिए । थर्कदीप र हरि एकै परिवारका थिए । थर्कदीप पनि भान्जा नै थिए । थर्कले भन्थे -'हरि दाई यतै नजिकै बस्नुहुन्छ । वहाँ पनि तपाईको भान्जा नै हो, म भेटाइदिन्छु है मामा ।'

तर हरि त दैनिक हाम्रो कम्युनिकेशन आइरहनेमा पर्थेछन् । दैनिक कल गरिरहनुपर्नेहरूले कम्युनिकेशन धाउनु त्यसबेलाको अनिवार्यता नै थियो ।

थर्कजीले चिनजान गराउन नपाई नै बहिनीहरूमार्फत हरिभान्जासँग चिनजान हुन पुग्यो । शुरुमा वहाँसँग सामान्य चिनजान मात्रै भयो । केहीदिनपछि थाहा भयो, वहाँ त हात्तिखर्क गाविसका पूर्व गाविस अध्यक्ष भन्ने । अलि पछि थाहा भयो -लेखक पनि रहेछन् । अपदस्त जिन्दगी नाटक सङ्ग्रहका लेखक । फेरि मेरो नजिकै रहने दिदीले जानकारी दिइन् -तिम्रो भान्जा त रेडियोमा नाटकमा खेल्ने पो रहेछन् । मैले सुनेको छु वहाँको नाटक । कस्तो वोल्ड भ्वाइस् ।

अझै पछि दाई जस सिंगकले खबर ल्याए -परिवर्तन भन्ने फिल्म हेरेको त त्यहाँ भाईको भान्जाले खेलेका रहेछन् हौं ।

मामा भान्जा साइनोबाट शुरु भएको चिनजान लगातार फरक आयाम, फरक व्यक्तित्व थाहा पाउँदै जाँदा श्रद्धा पनि बढ्दै गयो ।

## विवाहको सुत्रधार पनि

पुरानो बानेश्वरमा हिडिरहेको बेला एक बहिनीसँग भेट भयो । जसलाई मैले आफ्नो गाउँ प्रकाशपुरमा देख्दै आएको थिएँ । मेरो बहिनीसँगै पढेकी ति बहिनीको नाम

पनि थाहा थिएन मलाई । 'तपाई ममता गंगाको दाइ होइन ? मलाई सम्पर्क नम्बर दिनुस् न ।' मैले नम्बर दिएँ । त्यहिदिन नै ति बहिनी मेरो बहिनीहरूलाई भेट्न पुगिछिन् । बहिनीहरूलाई भेट्न पुग्दा हरिभान्जा पनि कम्युनिकेशनमै रहेछन् । मेरो बहिनीले भान्जालाई लु छोराकोमा बुहारी है भनेर जिस्क्याएछिन् ।

ति बहिनी अर्थात गीता गुरुङ हामीसँगैको फ्ल्याटमा बस्ने भइन् । बहिनीहरूको जिस्क्याउने क्रम रोकिएको थिएन । पछि त गीता साँच्चै नै हाम्रो बुहारी भएर आइन् ।

**साहित्यिक पत्रिकाबारे बहस**

म साहित्य लेख्ने, टाइप गर्ने, डिजाइन गर्ने र संघसंस्थामा सक्रिय रहने गर्दथेँ । मैले नयाँ बानेश्वरस्थीत एक डिजाइन हाउसमा काम गर्दा त्यहाँबाट 'माटो' नामक मासिक पत्रिकाको डिजाइन हुन्थ्यो । त्यस पत्रिकाको सम्पादन मण्डल हरि पनि हुनुहुन्थ्यो । मैले उक्त कुरा चियागफमा निकालेँ ।

'लु एउटा ब्रोडसिट आकारमा साहित्यिक पत्रिका निकालौं ।' हरिले त्यही टेबलमा कुरा राखे । समाचार साहित्यको मात्र हुने तर पत्रिका चाही ब्रोडसिट आकारमा । नयाँ काम पनि हुन्छ ।

'लौ, निकालौं भने निकालौं ।' हामी पनि जोसिएका थियौं ।

मैले पनि पुस्तक निकालेको थिएँ । तर उक्त पुस्तकहरू बाड्ने र कोठामा थन्क्याउने काम मात्रै भएको थियो । प्रज्ञालगायतका पुस्तकालयमा दिनुपर्छ भन्ने वहाँकै सल्लाह थियो । त्यसपछि प्रज्ञामा मेरो पनि लगेँ, अरु धेरैको पनि पुऱ्याइदिए । प्रज्ञा पुस्तकालयले दिने 'प्राप्ति पत्र' फाइलको चेपमा राख्न पाउँदा पुलुकित भएको थिएँ ।

**राजनीतिक मोर्चामा सामेल हुने प्रस्ताव**

हामीबिचका सल्लाह योजनाहरू २०६२/६३ को आन्दोलनले खाइदियो । त्यस आन्दोलनपश्चात भूमिगत रहेको माओवादी शान्तिप्रक्रियामा आयो । हरि भूमिगतरूपमा माओवादीसँग नजिक रहेको कुरा पहिलदेखि नै गन्ध पाएको थिएँ ।

थर्कजी र मैले काम गर्दै आएको मोर्चा पनि छताछुल्ल भएको थियो । त्यही मौकामा हरिभान्जाले प्रस्ताव राखे -किरात राष्ट्रिय मुक्ति मोर्चा(?)मा लाग्नुपर्छ । तर के गर्ने भन्न नपाई मैले पढ्ने निहुँ गरेर मलेसिया पुगेँ ।

मलेसियाबाट नै मैले सुनेँ -हरि सक्रिय रूपमा माओवादीमा खटिरहेका छन् । थर्कजी पनि पुरै कार्यकर्ता भएर लागे । फेरि सुनेँ -हरिले टिकट पाए । चुनाव भयो, चुनावको परिणाम थाहा पाउन हामी विदेशमा भएकाहरूले बढि चासो लियौं । सम्पर्क भएसम्म कल गरिरह्यौं । धनकुटा १ मा रकम चेम्जोङ हार स्वीकार गर्दै बाटो लागेको खबर सुन्यौं । उसो भए धनकुटामा २ मा के भयो होला ? त्यहाँ शक्तिशाली नेता सूर्यबहादुर थापा छन् । त्यस्तै खुलदुली भइरह्यो ।

रात पर्‍यो, बासस्थान पुगियो । बेलुकी जीवन देवान गाउँलेले एसएमएस पठाए -हरिराज खेवा वीन । ममा अनौठोगरी खुशी छायो । भोलीपल्ट थर्कजीलाई कल गरेँ र भने -जंगलबाट आउन साथ मुलुकमा सक्ने भए त हौं ।

मेरा इत्र्याई त थर्कले गलत बुझेछन् -'नजिक भए त मामा नभनी हानिन्थ्यो हौ ।' पछिको भेटमा थर्कले त्यसदिनको वार्तालाई सम्झाएका थिए ।

३ वर्षपछि म मलेसियाबाट फर्कें । वहाँ संविधान सभाको सदस्य भएको हुनाले भेट्न गएँ । संसदमा पनि छिराउनुभयो । केही समयपछि मन्त्रिमण्डल पुनर्गठन हुने कुराहरू भइरह्यो । मेरो परिवार विरामी हुँदा अस्पतालमा भेट्न आउनुभएको बखत 'यताउता मिलाउँदा तपाई पनि मन्त्रिमण्डलमा पर्नुहुन्छ कि' भनेर सोधेँ । 'हुन्छु होला' भन्ने छोटो जवाफ हरिबाट आएको थियो ।

त्यसको केही दिनमा साच्चिकै मन्त्री बन्नुभयो । त्यसपछिको भेटमा मामासँगै रहनुपर्छ भन्नुभयो । मैले पनि हुन्छ भनेँ । मलाई लिम्बुवान राष्ट्रिय मुक्ति मोर्चाको केन्द्रीय सदस्यमा मनोनयन भएको पत्र पनि आयो । दुई वैठकमा सामेल पनि भएँ ।

अँ... हरिभान्जासँग यस्ता किस्साहरू धेरै छन् । छोटो सङ्गतमा हामीले धेरै आत्मियता साटेका थियौं । धेरै योजनाहरू पनि बनाएका थियौं । हरि भविष्यका

आशालाग्दा र होनाहार नेता थिए । तर उनी आफैले छोटो समय लिएर आएका थिएछन् । बसन्तपुरबाट आएको बस सिधुवाबजार मास्तिर भएको दुर्घटनाले ति सपना र योजनाहरू उडाइदिए । अलविदा भान्जा ।

**(लेखक नयाँअनलाइन डटकम तथा सेवारो साप्ताहिकका प्रधान सम्पादक हुन् ।)**

# सहयात्री कमरेड हरिराज खेवाको सम्झनामा दुई शब्द

**इन्द्रमणी पराजुली**

०४६ सालको राजनैतिक परिवर्तनपछि राजनैतिक दलहरूले आफ्ना गतिविधिहरू गाउँ-गाउँमा गर्दै पार्टी संगठन निर्माण हुन थाले । त्यसै क्रममा हात्तिखर्कमा लोकप्रिय पार्टी नेता अगुवा क. बमबहादुर लिम्बुसँग मेरो घनिष्टता नै थियो । यस विचमा हरि खेवाजीसँग सामान्य चिनजान भएको हो । वहाँ राजनीतिक रूपमा भन्दा पनि साहित्यिक क्षेत्र, त्यसमा नाटक लेख्ने र खेल्ने राम्रो कलाकारको रूपमा चिनिनुहुन्थ्यो । वहाँ पढाईसँगै शिक्षण पेशामा आवद्ध हुनुभएको थियो ।

स्थानीय तहको २०४९ सालको निर्वाचनमा धनकुटामा तत्कालिन एमालेले राम्रो विजय हासिल गऱ्यो तर हामीले अघि सारेका उम्मेद्वार क. बम लिम्बूजी हात्तिखर्कमा थोरै मतान्तरमा पराजित हुनुभयो । पछि वहाँ विविध कारणवस वैदेशिक रोजगारमा जानुभएपछि र हाम्रो पार्टीका युवा नेता क. जगेश लिम्बूको असामयिक निधनपछि २०५४ सालमा स्थानीय निर्वाचनको सन्दर्भमा गाविस अध्यक्षको उम्मेद्वारी तय गर्ने कुरा भयो । त्यस क्रममा त्यहा पार्टीले लोकप्रिय युवा क. बम जीलाई पराजित गर्ने राजनैतिक हस्ती लोकेन्द्र तिगेला जी जो आफैंमा निकै स्थापित व्यक्तित्व हुनुहुन्थ्यो । वहाँसँग प्रतिस्पर्धा गरि विजय हासिल गर्नु चानचुने कुरा थिएन । तसर्थ, पार्टीले युवा साहित्यिक तथा बौद्धिक व्यक्तित्व जो राजनैतिक रूपमा पनि लोकप्रिय हुनुहुथ्यो र शिक्षण पेशामा आवद्ध क. हरिराज खेवालाई योग्य उम्मेद्वार पार्टीले ठहर गरि शिक्षकबाट राजिनामा गराई उम्मेद्वार बनाउने निर्णय गर्यो । यस

निर्णयले हात्तिखर्कका जनतामा एक खालको उत्साह पैदा भयो र निर्वाचनमा सहज जित हासिल गरि क. हरिराज खेवा गाविस अध्यक्ष हुनुभयो । हामी जिल्ला विकास समितिमा थियौं । कमरेड हरि अगुवा गाविस अध्यक्षमध्ये पर्नुहुन्थ्यो । वहाँमा विकास प्रतिको निष्ठा, देश र जनताप्रति प्रतिबद्धता र जवाफदेहिता थियो । उच्च इच्छा शक्ति राजनीतिक अठोट भएको क्रियाशिल युवा हुनुहुथ्यो । राजनीतिक र आत्मा निर्भरता यस विषयमा हाम्रो कुराकानी हुन्थ्यो । वहाँ जागिर त्यागेर राजनीतिमा आउनुभयो । म जागिर नखाएर राजनीतिक होमिएको हामीवीच राजनीतिक र आर्थिक पक्षलाई कसरी तालमेल मिलाएर जान सकिन्छ भनि गम्भिर छलफल पनि हुनेगर्थ्यो । वहाँ सधैँ आर्थिक रूपमा आत्मनिर्भर हुँदै राजनीतिक गर्नुपर्छ भन्ने मान्यता राख्नुहुथ्यो । हामीबिच सहमति थियो । हाम्रो सहकार्य १ वर्ष पनि नभई पार्टी विभाजनको पीडा हामीले सहनु पऱ्यो । म तत्कालिन एमालेमा क्रियाशिल रहें, वहाँ नयाँ गठित मालेमा क्रियाशिल हुनुभयो । वहाँले राजनीतिक र साहित्य (नाट्य लेखन र नाट्य कलाकारिता) सँग-सगै लिएर अगाडी जाने कार्य कम चुनौती पूर्ण थिएन तर दुवै क्षेत्रमा वहाँ सफलताका साथ अगाडि जानुभयो । वहाँ हात्तिखर्कको अध्यक्ष भइरहँदा निकै लोकप्रिय कार्य गरि चर्चामा नै रहनुभयो ।

मुलुक द्वन्द्वमा थियो । हामी युवाहरू जो पुर्वकालिन राजिनीतिमा थियौं । तत्कालिन अवस्थामा राजनीतिक परिस्थीति तरल थियो । युवाहरूमा एक खालको तरङ्ग फैलिनु स्वभाविकै थियो । तत्कालिन माले पार्टीले आफ्नो राजनीतिक प्रभावमा कार्यकर्ता राखी राख्ने परिस्थिति पनि बनेन तथापि पछि पार्टी एकता भयो । तर धेरै साथीहरू पुरानो ठाउँमा आउनु भएन । पछि मैले सुने हरिजीलाई प्रशासनको तर्फबाट प्रहरी थ्रेड छ भनेर यसै समयको कुरा हो बजारको एक होटलमा हरि जी र वहाँको मित्र राम अधिकारी लामो गफ गरी राती ११ बजेतिर कोठा गएर सुत्नु भएछ ।

भोलिपल्ट विहान घरवाला दाईले राम सरलाई गाली गर्नु भएछ । प्रहरीले थ्रेट गरिराखेको छ तपाईहरू खेलाँची गरेर राति-राती किन हिड्नु भएको हरिजी मन्त्री हुने मान्छे हो, होस् पुऱ्याउनु पर्दैन भन्नु भएछ । नभन्दै पछि साँच्चै वहाँले भनेजस्तै हरिजी युवा अवस्थामा नै अर्थ राज्यमन्त्री जस्तो राज्यको गरिमामय

पदमा पुग्न सफल हुनु भयो यो धनकुटाको लागि सुखद विषय थियो । भने वहाँको राजनीतिक जीवनको ऐतिहासिक मोड पनि थियो । त्यहि समय म लगायत साथीहरू राम अधिकारी, उमेश घिमिरे, निरेन तामाङ, मञ्जु अधिकारी एउटा कार्यक्रमको शिलशिलामा काठमाडौं नै थियो । वहाँलाई मन्त्री हुनुभएकोमा बधाई दिन ललितपुर वहाँको क्वाटरमा पुग्यौं । पहिलो चोटी नै हो वहाँको जीवन संगिनी क. गीताजी सँगभेट भएको दुवै सरल स्वभाव भएका जोडी, सामान्य जीवनशैली । वहाँहरू दुवैको चिन्ता थियो पाएको जिम्मेवारीलाई ठुलो चुनौति हो भन्ने बुझाई । यसपछि पार्टी र धनकुटेली जनताको शिर उच्च बनाउन निकै अरु मेहनत गर्नु पर्छ भन्ने प्रतिवद्धता देखियो । मैले त्यसबेला नै मनन गरे राजनीतिक व्यक्तिलाई सफल बनाउन परिवारको निकै ठुलो हात हुन्छ । मैले छोटो बसाइबाट हरि जी अगाडि बढ्ने निकै ठुलो सम्भावनादेखि रहेको थिएँ ।

पछि वहाँ पार्टीको केन्द्रिय सदस्य जिल्ला अध्यक्षसमेत हुनुभयो । यसवीच धनकुटामा राजीनीतिक घटनाक्रम र अनेकौ समस्याको बारेमा वहाँसँग पटक पटक छलफल कुराकानी भएको थियो । वहाँ निडर, निष्कपट, सबैसँग मिल्ने, भिज्ने स्वभावको स्पष्ट व्यक्तित्वको धनी हुनुहुन्थ्यो । काम गर्ने सन्दर्भमा पनि वहाँमा निष्पक्षता र निस्वार्थता भएको आभास हामी पाउथ्यौ ां समग्रमा भन्नुपर्दा धनकुटाको तर्फबाट राजनीतिमा स्थापित र उदय हुदै गरेका केही राजनीति व्यक्तित्व मध्येमा वहाँ निकै सम्भावना भएको उदयमान राजनीतिज्ञ हुनुहुथ्यो । एउटा बौद्धिक युवा, जनजातिको छोरो युवा उमेरमा एउटा राजकिय हैसियत प्राप्त गर्नु राजनीतिक भविष्य उज्ज्वलताको आंकलन गर्न सकिन्थ्यो ।

तर दुर्भाग्य... श्रावण १३ गते हिलेको एक कार्यकर्ता भेलामा हामी सरिक थियौं । सिधुवा बजारमाथि गोलाईमा गाडि दुर्घटना भई धेरै मान्छे हताहती भएको खबर आयो । त्यसको केही क्षणमा नै पूर्व अर्थराज्यमन्त्री हरिराज खेवाको दुर्घटनामा असामायिक निधन भएको खबरले हामी मर्माहत भयौं कार्यक्रम स्थगित गरि घटनास्थलतर्फ गइयो । एउटा हैसियत प्राप्त गरि खसेको ठुलो सम्भावना बोकेको सहकर्मीको अवसानबाट निकै ठूलो पीडाबोध भयो । हाम्रो अगाडि हरिजी सो सब थियो, अलविदा हरि कमरेड भन्नुको विकल्प हामीमा रहेन ।

अन्त्यमा, स्वर्गीय कमरेड हरिराज खेवाको स्मृतिमा यो स्मृति ग्रन्थ प्रकाशन गर्ने कार्यको प्रशंसा गर्दै, यसमा संलग्न सबै व्यक्तित्वहरूको उच्च सम्मान गर्न चाहन्छु । मेरो ठाउँमा यस कार्यको लागि आवश्यक सहयोग पुऱ्याउने वचनवद्धता समेत व्यक्त गर्दछु ।

यसै सन्दर्भमा कमरेड हरिराज खेवाप्रति हार्दिक श्रद्धा सुमन व्यक्त गर्न चाहन्छु ।

***(लेखक प्रदेश नं. १ का लागि धनकुटा क्षेत्र नं. २ प्रदेशसभा सदस्य हुन् ।)***

# हरिराज तिमी

**सनि लिम्बू**

गुराँस झैँ फुल्यौ तिमी
आहा इन्द्रकमल फूल झैँ मगमगाउदै
पाखा भित्ताहरूलाई सौन्दर्य दिने बुकी फूल झैँ फक्रिन्दै
जन-जन माझ धनकुटामा
हरिराज झैँ खिल्यौ तिमी
के बुढा के बच्चा
सबैसँग उत्तिकै हरिराज झैँ मिल्थ्यौ तिमी !

फैलिए तिम्रा डालीहरू
गुराँस र लारक झैँ
चल्दै थिए तिम्रा नाम सुवास
गितासार बुकेको झैँ
फल्दै फुल्दै फैलिरहनु सधै
सबैको आर्शिवाद पाईरहनु
तर... हरिराज !

धनकुटाको उकाली ओराली
भन्ज्याङ अनि चौतारीहरूले
किन किन अहिले सम्म पनि

तिमीलाई नै चिहाई रहे जस्तो लाग्छ
हात्तिखर्कमा विचरण गर्दा
खोई त हरिराज भनेर ?

त्यसै त्यसै चिहाई रहेजस्तो लाग्छ !
सबैका प्रिय थियौ तिमी
र, त सबैको आँखा छचल्काउँदै बिदा भयौ
जनआत्मको आर्शिवादले मन्त्री भयौ
जनता र देशको सेवामा अहोरात्र खटिएकको इर्ष्याले
दैबले पनि बस दुर्घट्नाको निहुमा
यमलोक पुऱ्याई छाड्यो
आज चाहेर पनि संयोगमा छैनौ तिमी
तर जहाँ छौ जता छौ
सबैको मनमनमा छौ हरिराज तिमी

हात्तिखर्कमा खिलेको फूल सिदुवामा ओईलिएर झर्दा
मनै मनले कल्पि रहियो
पुर्वमा उदाएको सूर्य
पश्चिममा अस्ताउदो रैछ
कसैको लागि जन्मिएर बसैको प्रिय हुनु
इश्वरीय लिला रहेछ ।
सबैको मनमा हरेक पल हरेक क्षण सधैंभरी
छाइरहने छौ हरिराज तिमी
समिपमा नभए पनि
सम्झनामा तिमी सधैं सधैं आईरहने छौ
हरिराज तिमी ।

# धनकुटाको असल र कुशल छोरा हरिराज

**हेमराज भण्डारी 'सुदर्शन'**

कमरेड हरिराज खेवा कम्युनिष्ट आन्दोलनमा उदयमान योद्धा नेता र जनप्रतिनिधिको स्थापित नाम हो ।

१७ वर्षकै उमेरमा कम्युनिष्ट विचारधाराबाट प्रभावित हुँदै २९ वर्षको उमेरमा गाविस अध्यक्षको रूपमा निर्वाचित पक्षमा उभिने क्रान्तिकारी योद्धाको रूपमा वहाँलाई मैले चिनेको हो । २०४८ सालतिर हामी नेकपा (मसाल) मा केही समयसँगै भएका थियौं । कमरेड गिरिश पोखेल, ठाकुर बरालमार्फत वहाँ अखिल (छैठौं) मा संगठित हुनुहुन्थ्यो । पछि वहाँले शिक्षण पेसा शुरू गर्नुभयो र शिक्षकबाट राजीनामा दिएर २०५४ सालको स्थानीय निर्वाचनमा हात्तिखर्क गाविस अध्यक्षको उम्मेद्वार बन्नुभयो । तत्कालीन नेकपा (एमाले)बाट वहाँ निर्वाचीत पनि हुनुभयो । गाविस अध्यक्षको रूपमा वहाँ सफल र लोकप्रीय पनि हुनुन्थ्यो । पछि २०५६ मा माले र एमालेको रूपमा विभाजनपछि वहाँ नेकपा (माले) मा लाग्नुभयो । २०५७ मा अनेरास्ववियु (क्रान्तिकारी)को राष्ट्रिय सम्मेलनको अभियानको क्रममा धनकुटा हिले बजारबाट म र डिल्ली भट्टराईलाई प्रहरीले गिरफ्तार गऱ्यो । हाम्रो गिरफ्तारीपछि खासगरी तत्कालीन (माले) निकट रहनु भएका साथीहरूले हाम्रो रिहाईको निम्ति अभियान नै चलाउनु भयो ।

क. हरिराज खेवा, गणेश विष्ट राजेश सुब्बा, दुर्गा न्यौपाने, गंगाराम गोमदेन, वाङदी लामा, कृष्ण कटुवाल, तिलक राई, नारायण दुवाल, अम्बिकालगायत साथीहरूले महत्वपूर्ण सहयोग गर्नुभएको थियो । त्यसैबेलादेखि वहाँहरू सबै तत्कालीन प्रमुख

जिल्ला अधिकारी शम्भु कोईराला (जो माओवादीप्रति असाध्यै नकरात्मक र पुर्वाग्राही सोच राख्थे) २०५८ सालमा संकटकाल घोषणालगत्तै गणेश, गङ्गा, राजेश, दुर्गा, कृष्ण अम्बिका लगायतलाई माओवादी आरोपमा पक्राउ गरे । हरिजीलाई पनि पक्रन सक्ने संकेत पाएपछि वहाँ काठमाडौं भुमिगत झैं हुदै बस्नुभयो । पछि काठमाडौंमा पवनमान श्रेष्ठमार्फत पुनः लिम्बुवान मोर्चामा संगठित हुनुभयो ।

२०५७ साल भदौमा धनकुटाको मारेकटहरेमा लिम्बुवाल राष्ट्रिय मुक्ति मोर्चाको राष्ट्रिय भेला, हरिजी पनि जाने सल्लाह थियो । तर वहाँ जानु भएमा तर अग्नि सापकोटा 'कञ्चन', गंगा कार्की 'विश्व', पदम राई, डम्बर सुवेदी 'हिमाल', भक्तराज कन्दङवालगायत नेताहरू भेला हुदै गर्दा प्रहरीसँग झडप भयो । मानविय क्षति नभएपनि त्यो कार्यक्रम विथोलियो । हरी जी र भक्तराज कन्दङवाविच पारिवारिक नाता सम्बन्ध समेत रहेकोले पनि हरि भक्तराजसँग निकट हुनुहुन्थ्यो । मारेकटहरे झडपको केही दिनपछि हरिजी को घर हात्तिखर्क मा क. भक्तराज र गंगा कार्की भेटिएको थियो ।

धनकुटामा माओवादी गतिविधी बढ्दै गएपछि वहाँ माओवादीमा पुर्वकालीन भएर हिड्न पनि नसक्ने र घर जिल्ला बस्न नसक्ने अवस्था देखेर काठमाडौं लाग्नु भएको थियो । पछि काठमाडौंमा पवनमान श्रेष्ठमार्फत सम्पर्कमा रहनु भएका वहाँलाई पुनः भक्तराज कन्दङवा र मैले भेट्यौ । पुर्व आउन आग्रह गर्यौं । ०६२/०६३ जन आन्दोलनको लगत्तैपछि हामीले वहाँलाई धनकुटा बोलायौ । त्यसबेलासम्म पनि धनकुटामा नेतृत्वको स्थानिय टिम पुर्ण रूपमा विकास भइसकेको थिएन । छोटो अवधिमै धनकुटाको माओवादी पंक्तिभित्र प्रभाव जमाउनु र भिज्न हरिजी सफल हुनुभयो । २०६४ को पहिलो संविधानसभा निर्वाचनमा प्रत्यक्षतर्फ धनकुटा क्षेत्र नम्बर १ बाट म र क्षेत्र नम्बरबाट हरिजी उम्मेद्धार भयौं र दुवैजना निर्वाचीत पनि भयौं । उक्त निर्वाचनमा सूर्यबहादुर थापा प्रतिद्वन्द्वी भएकोले मैले पनि वहाँको निवर्नचन क्षेत्रमा निकै मेहनत र सहयोग गरेका थिए । परिणाम हामी दुवै जना संविधान सभामा निर्वाचित भयौं ।

संविधान सभा हल र सिंहदरवारभित्र हाम्रो अलग्गै पहिचान स्थापित थियो । हामीलाई प्राय धनकुटे जोडी भनेर बोलाइन्थ्यो । सँगै बस्ने, सँगै हिड्ने असाध्यै मित्रता देखेर सबै लोभिन्थ्यो । कुनै दिन एक्लै देखे भने खै त जोडी भनेर प्रश्नको जवाफ दिन हैरान भइन्थ्यो ।

संविधान सभामा वहाँ संवैधानिक समितिमा र म मौलिक हक तथा राज्यका निर्देशक सिद्धान्त समितिमा थियौं । समितीमा असाध्यै मेहनत गर्ने र तत्परता देखाउने हाम्रो संकल्प थियो र त्यसै पनि गऱ्यौं । तर विडम्वना पहिलो पहिलो संविधानसभाले संविधान दिन सकेन । दलीय द्वन्द्व र शक्ति केन्द्रहरूको स्वार्थको कारण संविधानसभा विघटन भयो ।

२०६८ मा डा. बाबुराम भट्टराई प्रधानमन्त्री भएको बेला हरिजी अर्थ राज्यमन्त्री बन्नु भयो । माओवादीको पालुङटार वैठकबाट पार्टी भित्र तीव्र लाइन सङ्घर्ष शुरु भयो । प्रचण्ड, बाबुराम र वैधका अलग अलग दस्तावेजहरू आए, स्वभाविक बहस चल्यो । तर त्यसपछि पार्टी जीवनमा ठुलो तरङ्ग र गुठगत सङ्घर्ष क्यान्सर झै फैलियो । हाम्रो विचमा कतिपय मन र धारणाहरू फरक भएपनि जिल्लाको समग्र राजनितिको विषयमा निरन्तर छलफल हुन्थ्यो । बाबुरामजी प्रधानमन्त्री भएको बेला मलाई राज्यमन्त्री बन्न केही नेताहरूले प्रस्ताव गर्नुभयो तर मैले उमेर, अनुभव, जनअपेक्षा सम्बोधन आदी कारण राज्यमन्त्री नबन्ने बरु हरिजीलाई बोलाएर अध्यक्षसँग गएर कुरा गर्नुस् मन्त्री तपाई बन्नुपर्छ भने । सल्लाह र बमोजिम नै वहाँ अर्थ राज्यमन्त्री बन्नुभयो । तर राज्यमन्त्री बनेको केही समयपछिबाट हरिजीलाई मेरो विरुद्धमा उभ्याउने कोशिष पनि नभएका होईनन् । तर पछि हामीले सबै विषयमा खुलेर छलफल गऱ्यौ समीक्षा गऱ्यौं थप अनुभवसहित अझ एकतावद्ध भएर अगाडी बढ्ने सङ्कल्प पनि गयौं ।

योजना, छलफल, निर्णय र सङ्कल्प गरिसकेपछि जसरी पनि काम फत्ते गरेरै आउने एउटा चट्टानी दृढता र संवेग थियो हरि जी संग । बुबा हृदयमानले संरक्षण गरेर राखेका लिम्बुवान र किराती इतिहास, संस्कृति भाषालिपि, दस्तावेजहरू र

मुन्धुम किराती सभ्यताका महत्वपूर्ण ऐतिहासिक सामग्रीहरू हरिजीले पनि बचाएर संरक्षण गरेर राख्नु भएको थियो । धनकुटा अध्ययन गर्दा रेडियो नेपालमा नाटक लेख्ने खेल्ने, वहांहरूको टिम लोभलाग्दो थियो । पछिल्लो समयमा व्यवसायिक चिया खेती, प्रशोधन र औधोगीक 'ग्रिन टि' को उत्पादन उद्योगकै रूपमा भाइ भीम खेवा र हरिजी लाग्नु भएको थियो ।

समग्रमा हरिराज खेवा जनताको प्रय नेता, राजतितिज्ञ, सामाजीक काममा जीवन समर्पित गर्ने समाजसेवी, जन प्रतिनिधि, कलाकार, साहीत्यकार नाटक र गीतकार समेत हुनुहुन्थ्यो । वहाँको निधन धनकुटा र समग्र पुर्वको परिवर्तन र न्यायप्रेमी आन्दोलनमा यौटा ठुलो धक्का पनि हो । यो अपुरणीय क्षति धनकुटाले त सधैं महसुस गररिरहने छ ।

२०७० सालको दोस्रो संविधानसभा निर्वाचनमा हामी दुवैजना उम्मेद्धार निष्कर्षमा थियौं तर परिस्थिति र बाध्यताले हामी दुवै उम्मेद्धार भएको र दुवैजना पराजीत पनि भयौं । २०७१ सालमा नेकपा (माओवादी केन्द्र) धनकुटा जिल्ला सम्मेलनबाट हरिजी जिल्ला अध्यक्ष बन्नु भयो । म पार्टी केन्द्रिय समितीनै थिएं । हामीले बसेर कार्य विभाजन गऱ्यौ । हरि जी ले जिल्लाको संगठनात्मक र स्थानीय काम सम्हाल्ने र मैले केन्द्रीय र राजनैति कामको जिम्मा लिने समझदारी र निर्णय गरेर पार्टीलाई गतिदिने निर्णय गऱ्यो ।

प्रायः धनकुटामा हामी सँगै बस्थ्यौ, एउटै बेडमा सुत्थ्यौं, धेरै विषयमा हामी गम्भिर छलफल र साझा धारणा निर्माण गर्थ्यौं । भावनात्मक नाता र आत्मीयतामा हामी पनि निकट थियौं कि सायद अरूको त्यति निकटता थिए । हरिजीको अभाव आज पनि उत्तिकै खड्किएको छ ।

तर विडम्बना २०७३ श्रावण १३ गते जिल्ला कमिटि सदस्य याम कार्कीको बुबाको निधनमा समवेदना दिएर फर्कने क्रममा बस दुर्घटनामा परी दुःखद निधन भयो । साथमै रहनुभएका भोला थापा पनि गम्भिर घाइते हुनुभयो । मारेककटहरेसँग बाटै समवेदना दिएर फर्कदा बाटैमा वहाँको पनि निधन भयो । सिङ्गो धनकुटा रोयो,

एउटा असल जोश, निडर नेता र निस्वार्थ जनप्रतिनिधि गुमाउँदाको पीडाको घाउले नराम्ररी चहऱ्याइरहेको छ ।

एउटा उदाउँदो नक्षत्र अस्तायो, जीवनको छोटो समयमै अलग पहिचान र अनुभवहरूले भरिपूर्ण भरोषायोग्य र जनप्रीय सहयोद्धा गुमाउनुपऱ्यो । क. हरिराज खेवा केव स्मरणमा, वहाँले पुऱ्याउनुभएका सामाजिक योगदानहरूमा, वहाँका कृति र रचनाहरूमा अनि धनकुटेली जनताको मनमा सँधै जीवित रहनुहुनेछ । भौतिक शरीर नरहेपनि वहाँका अमुल्य योगदानहरू सँधै बाँचिरहने छन् । अल्पायूमै एउटा असल र कुशल नेता गुमाउँको पीडा धनकुटाले कहिल्यै भुल्ने छैन ।

एकजना असल र कुशल नेता जन्माउन इतिहासले र जनताले धेरै ठूलो ऐतिहासिक मुल्य चुकाएको हुन्छ । त्यसको त्यहिरूपमा परिपूर्ण सम्भव छैन । क. हरिराज खेवा धनकुटाको इतिहासले जन्माएको त्यस्तै पात्र हो । क. हरिराज खेवाप्रति हार्दिक भावपूर्ण श्रद्धाञ्जली । अलबिदा कमरेड हरिराज ।

(**लेखक पूर्वमाननीय सभासद तथा नेकपाका धनकुटा इन्चार्ज हुन् । साथै पहिलो संविधानसभामा हरिराज क्षेत्र २ बाट प्रतिनधित्व गर्दा उनले धनकुटा १ प्रतिनिधित्व गरेका थिए ।**)

# स्मृतिमा हरिराज खेवा

**मेजरकुमार राई**

उठाउँदै गर्दा क्रान्तिको झण्डा,
सम्हाल्दै गर्दा मोर्चाको किल्ला,
१. हरिराज खेवा,
नियती निर्दयी भइदियो ।
तर कमरेड,
तिमीले उठाएका झण्डा
झुक्न दिएको छैन, दिईने छैन ।
तिमीले देखाएको बाटो
भुलेका छैन, भुल्न दिईने छैन ।
तिम्रा दर्शन,
मितम्रा शालिनता,
तिम्रा दृढता,
अनि
पार्टी-जीवनका तीता-मीठा भोगाइहरू
अमिट छाप बनेको छ मेरो स्मृतिमा ।
सायद,
तिम्ले पनि भुन्नु नपर्ने हो !
त्यो अज्ञात स्थल

दुश्मनको घेराबन्दी
मृत्युलाई कफन बाँधेको
मशालका लप्का ओकल्दै
पार्टी-नाम राखेको
मै थिएँ, प्रस्तावक ।
१. राजकुमार
तिम्रो पार्टी-नाम
कमरेड राजकुमार
क्रान्तिको राजकुमार ।
छैन, तिम्रो भौतिक शरीर हाम्रो सामु
तर तिमी,
जनमाजस पटलमा छौ ।
१. राजकुमार
क्रान्तिको राजकुमार बनेर
तिमीले उठाएको झण्डा
ढल्न दिएको छैन, दिईने छैन ।
तिमीले देखाएका बाटाहरू
बिराएका छैनौ, दिईने पनि छैन ।
(कवि, लिम्चिङबुङ गाउँपालिका, उदयपुरका अध्यक्ष हुन् ।)

# एमाले संयमित नभएको भए कि हामी मारिन्थ्यौं या जेलमा हुन्थ्यौं

**राजकुमार राई**

२०६६ सालतिरको कुरा हो । धनकुटामा भेट हुँदा हृदयमान सुब्बाले 'सँगै जाउँ नानी' भन्नुभयो । यहाँको साथमा एकजना गोरो पुन्टे केटा थियो । सुब्बा साहेवले भन्नुभयो- यो मेरो माइला छोरा हो नानी, गोकुन्डेश्वरमा पढ्छ । स्कुल छुट्टी भयो । यसलाई लिएर घर जानुपर्ने । हामी तिनैजना पैदल धनकुटाबाट हिले भालुडाँडा तालुखर्कहुँदै हात्तिखर्क लाग्यौं । म हात्तिखर्कको भारती निमावीमा मास्टर थिएँ । सुब्बा साहेवसँग घर जाने पुन्टे केटा अरु कोही नभएर हरिराज खेवा थिए । उनी त्यसबेला धनुकुटा जिल्लामा नाम चलेको विद्यालय गोकुन्डेश्वरमा सायद ४ कक्षामा पढ्थे ।

मैले २०४३ सालमा एसएससी दिएर २०३५ साल असारमा उर्त्तिण गरेपछि सोही सालको भदौबाट मासिक ६२२ तलब पाउने गरी हात्तिखर्कमा शिक्षक भएँ । २०३६ सालमा खुलेको शिक्षा आयोग पास गरेर आफू कार्यरत विद्यालयमा नै स्थायी भएर २०३७ सालसम्म हात्तिखर्क बसें । यस अवधिमा हरिको कान्छा भाइ भीम र कान्छी बहिनीलाई पनि पढाइयो । हरिको जेठा दाइ खगेन्द्र विद्यायलयको स्टाफ भएकोले म बेलाबेलामा हरिको घर गइरहन्थेँ । यसैविच खगेन्द्रजी शिक्षण पेशा छाडेर ठेक्कापट्टातिर लाग्नुभयो । त्यसपछि अचानक हराउनुभयो । शायद आजसम्म पनि वहाँको टुङ्गो लाग्न सकेको छैन । खगेन्द्रजीको शुभनाम एउटा पहेली भएर रहेको छ । हात्तिखर्कमा मास्टर हुँदा म पहिला म्याङ्लुङ र त्यसपछि पैरे र पञ्चमीमा

बसें । ममा सानैमा कम्युनिष्ट राजनीति प्रभाव परेकोले राजनीतिक रूपमा समेत थिएँ । त्यसैले हात्तिखर्कका अगुवा सबैसँग मेरो सम्वन्ध थियो । त्यसबेला निरंकुश राजतन्त्रको छत्रछाँयामा पञ्चहरूको दबदबी थियो । तिनताका त्यहाँ उत्ति सबैपञ्च थिए र नागरिकहरू उनिहरूको निरिह अनुयायी । तर हरिका पिता हृदयमान सुब्बा भने पञ्च हुनुहुन्थेन । वहाँ शालिन व्यक्तित्व र शिक्षक, बुद्धिजिविप्रति समान काम गर्ने स्वभावको हुनुहुन्थ्यो । खासमा वहाँ पहिला गोर्खा परिषद्मा आवद्ध हुनुहुँदो रहेछ । २००७ सालको सेरोफेरोमा भएको राजनीतिक उत्तरचढावको बेला समन्वयकारी भूमिका खेली धेरै क्षत्री बाहुनको जीवनरक्षा गरिदिएकोले त्यस क्षेत्रका ती समुदायले वहाँको सम्मान गर्थे र त्यस क्षेत्रमा नै वहाँको राम्रो प्रतिष्ठा थियो ।

हात्तिखर्कमा अढाइ वर्ष बसेर म तत्कालिन ठाकुरदेवी निमावी आँखीसल्लामा सरुवा भएँ । २०४० सालसम्म त्यहिँ मास्टरी गरेर राजिनामा दिई जीवनको खोजीमा काठमाडौतर्फ लागें । कम्युनिष्ट राजनीति, पञ्चायती व्यावस्था विरोधी सङ्घर्ष विद्यार्थी आन्दोलन, पत्रकारिता, शिक्षण पेशाा आदि अनेक आरोह अवरोहसँगै कहिले काठमाडौ कहिले जेल कहिले दोलखा गरिरहें । पछि २०५४ सालमा स्थायी रूपले रहने गरी म २०५४ सालमा धनुकुटा फर्किएँ । यसपश्चात हरिराज खेवासँग मेरो सम्बन्ध पुनः स्थापित हुन पुग्यो । यसबेला हरिजी गोरो पुन्टे केटा हैन धनकुटा बहुमुखी क्याम्पसमा विएमा अध्ययनरत जल्दोबल्दो युवा भइक्नुभएको थियो ।

धनकुटा आएपछि मलाई तत्कालिन नेकपा एमालेले वैकल्पिक जिल्ला कमिटिको सदस्य बनायो । कमिटिका सचिव गोपाल गुरागाइँ हुनुहुन्थ्यो । मलाई जिल्ला कमिटिको भूमिका खेल्ले कमरेडहरू हुनुह्न्थ्यो दुर्गा लिंखा र राजेन्द्र राई । त्यसैबेला मेरो हरिजीसँग घनिष्ठ रूपमा भेटघाट हुन थाल्यो । वहाँको डेरा बिचबजारमा थियो । डेरा पार्टनर थिए अर्खौले जितपूरका मनिराज लुङ्गेली, डम्बर थापामगर र सुरेन्द्र थापामगर । यी सबैजनासँग मेरो घनिष्ठ भयो । जुन अद्यापि छँदैछ । म बेलाबेलामा वहाँहरूको डेरामा गइरहन्थे । म चाहि परिवारसहित दुर्गा लिंखाको घरमा बस्थेँ । हामी हरिजीको डेरामा राजनीति, साहितय, जातीय विभेद, भाषा, संस्कृतिको बारेमा घण्टौ छलफल गर्थ्यौं । बेलाबेला डम्बर र मणि पनि आंशिकरूपमा

छलफलमा सहभागी हुनुन्थ्यो । यसै सेरोफेरोमा हरिले रेडियो नाटक लेख्नुभयो । जुन नाटक प्रतिस्पर्धामा प्रथम भयो । अपदस्त जिन्दगी शिर्षकमा वहाँले यो कृति प्रकाशन गर्नुयो र मलाई एक प्रति उपहार दिनुभयो । वहाँको सृजना निकै वजनदार छ ।

२०५४ सालमा सम्पन्न स्थानीय निर्वाचनमा हरिजी हात्तिखर्कको अध्यक्षमा निर्वाचित हुनुभयो । जनताको हितमा खुला हृदयले निस्वार्थ भावले काम गर्ने त्यसबेलाका गाविस अध्यक्षहरूमा वहाँ अग्रपंक्तिमा नै हुनहुन्थ्यो । रकमको सिमितता भएको त्यस समयमा त्रिशुले-हात्तिखर्क-जीतपुर सडक निर्माण र गाउँमा विद्युतीकरणको निम्ति वहाँको अमूल्य र लोकप्रिय अध्यक्षहरूमा वहाँ पनि एक हुनुहुन्थ्यो ।

तत्कालिन नेकपा (एमाले)को २०५४ सालमा सम्पन्न छैठौं महाधिवेशनपश्चात पार्टी विभाजन भयो र नेकपा (माले) को स्थापना भयो । धनकुटामा पनि मेरो नेतृत्वमा मालेको जिल्ला कमिटि निर्माण गरियो । हरिराज खेवा जिल्ला कमिटि सदस्य बन्नुभयो । पार्टी निर्माण गर्दै हामी गाउँवस्ती पुग्यौं । यस कार्यमा हरिजी पनि सक्रिय रूपले लाग्नुभयो । वहाँ विशेषगरी हात्तिखर्क, अखौंले जीतपुर, मारेककटहरे, डाँडागाउँमा खटिनुभयो । हामीले निर्माण गरेको नेकपा (माले) विचार, नीति, कार्यक्रमले एमालेसँग पृथक नभएकोले अपेक्षाकृत सफल बन्न सकेन । यसैबीच नेकपा (माओवादी)ले शुरु गरेको जनयुद्धको प्रभाव विस्तारै पूर्वमा पनि आइपुग्यो । हरिजी यसबाट निकै प्रभाविक हुनुभयो । वहाँ माओवादीको वर्ग सङ्घर्षभन्दा जातिहरूलाई दिने स्वायत्तता र समावेशिताबाट बढि आकर्षित हुनुहुन्थ्यो ।

हामी एउटै कम्युनिष्ट पार्टीमा निकै लामो समय कहिल्यै कामरेडीय भएन । एकदिन हरिजीले भन्नुयो -दाइ, माओवादीहरू गाउँमा आइरहेका छन् । यिनैले गर्छन् जस्तो छ । मैले चामल, दाल, आलु किनिदिएँ ।

वास्तवमा माओवादीले उत्पिडनमा परेका जातिहरूलाई अधिकार दिएर समान बनाउँछन् र आफूले निर्माण गरेको शक्तिलाई विकास कार्यमा लगाएर देशमा आर्थिक रूपान्तरण गर्छन् कि भन्ने मलाई पनि लागेको थियो । तर २००७ सालदेखि

यताको क्रान्ति, सङ्घर्ष र आन्दोलनको समिक्षा गर्दा नेतृत्वपंक्तिमा एकैखाले समुदाय रहेको र सफलतापश्चात जहिले पनि धोखाखडी गरेकोले मलाई विश्वास भने थिएन । त्यसैले मैले हरिजीलाई माओवादी सशस्त्र सङ्घर्षबारे नियाले हेर्न र धेरै आकर्षित नहुन सुझाएँ । तथापि माओवादीप्रति वहाँको आकर्षण अलि बढि नै थियो ।

२०५६ सालमा सम्पन्न संसदीय निर्वाचनमा तत्कालिन नेकपा (माले)को तर्फबाट म धनकुटा निर्वाचन क्षेत्र नं. २ बाट उम्मेदवार बनेँ । चुनाव प्रचार अभियानमा हरिजी पनि सक्रिय रूपले लाग्नुभयो । खोकुको चुनावीसभामा एमालेसँग झडप भएकोले डाँडागाउँको हाम्रो सभामा एमाले पंक्तिबाट आक्रमण भयो । धेरै साथीहरू घाइते हुनुभयो । र, हाम्रो सभा विथोलियो । हामीले भोलिपल्ट अर्को सभाको आयोजना गऱ्यौं । यसपछि मारेककटहरेको कार्यक्रम स्थगित गरी हामी धनकुटा फर्क्यौं । प्रचारप्रसारको अन्तिम कार्यक्रम मारेककटहरेमा थियो । हामी विशेष तयारी गरेर तीनदिनपछि मारेककटहरेमा सभा सम्पन्न गर्न गयौं । हाम्रो टोलीमा ६० जना जति थिए । हाम्रा सबै साथीहरूले ज्याकेटले छोपेर खुकुरी बोकेका थिए । निर्वाचन चिन्ह र पार्टीको झण्डा बोकने, डण्डी फलामका रड थिए । रड्को माथि तिखारेर भाला बनाइएको थियो । हरिले पनि छालाको कालो ज्याकेटभित्र सिरूपाते खुकुरी बोक्नुभएको थियो । हामीले वास्तवमा मारेककटहरेमा भोट कम आउने अवस्था भएपनि डाँडागाउमा भएको झडपको शेखी जित्न चुनावी सभाको आयोजना गरेका थियौं । डाँडागाउँको घटना दोहोरिएर खुकुरी युद्धसहित जुनसुकै परिस्थतिको सामना गर्ने मानसिकता र तयारीसाथ कार्यक्रम आयोजना गरेका थियौं । हामीले एकादशी डाँडाको चौतारीमा सभा आयोजना गऱ्यौं । आयोजक थिए हाम्रा विद्यार्थी नेता रामकाजी पौडेल । सुखद, कुरा शायद तत्कालिन एमालेले परिस्थिति बुझ्यो । संयमित भयो र हामीले निर्वाध चुनावीसभा सम्पन्न गऱ्यौं । त्यतिखेरको हाम्रो मानसिकता र तयारी सम्झँदा अहिले आङ सिरिङ्ग हुन्छ । कथंकदाचित एमालेले विथोलेको भए ठूलो काटमार हुन्थ्यो । हामी गएकाहरू धेरै मारिन्थ्यौं र त्यतिकै संख्यामा मार्थ्यौं । बाँचेका पनि शायद जेलमा हुन्थ्यौं ।

त्यसो भएको भए न म पहिलो संविधानसभामा सभासद् हुन्थेँ, न हरिजी निर्वाचित सभासद् साथै राज्यमन्त्री न राजेन्द्र राई वर्तमान सांसद । जे होस्, त्यो दिनको अनिष्ट टरेकोले नै हामी लगायत अरु साथीहरू अहिले पनि आ-आफ्नो स्थानमा स्थापित भई क्रियाशिल छौं ।

२०५८ सालमा एमाले र माले एकीकरण भएपछि हामी एमालेमा समाहित भयौं । तर हरिजीले पुनः एमाले सदस्य बन्न मन गर्नुभएन । वहाँ गाविसको पदावधि सिद्धिएपछि काठमाडौंतर्फ लाग्नुभयो । सायद वहाँले आर्थिक उन्नतिको प्रयत्न गर्नुभयो । वहाँसँग बेलाबेलामा काठमाडौंमा भेट हुन्थ्यो । तर धनकुटामा जसरी छलफल सरसल्लाह भएन । त्यस समयमा हरिजीको माओवादीसँग सम्पर्क चाहि थियो तर सदस्य चाही बन्नुभएको थिएन होला ।

राजनीतिक दलहरू र माओवादीबीच सम्पन्न १२ बुँदे सहमति विस्तृत शान्तिसम्झौता र २०६२/६३ सालको सफल जनक्रान्ति पश्चात हरिजी माओवादीमा क्रियाशील रूपमा लागेको महसुस भयो । यसै सेरोफेरोमा धरानमा सम्पन्न माओवादीको लिम्बुवान मुक्ति मोर्चाको भेलामा सहभागी भई नेतृत्व तहमा आफू बसेको बारेमा एक भेटमा वहाँले बताउनुभएको थियौं । त्यसपश्चात संविधासभाको निर्वाचनअघि हाम्रो भेट भयो । वहाँले मलाई माओवादीले मलाई टिकट दिनेवाला छ, भोट त पहिलो मालेजस्तै पाइन्छ होला के गरौं दाइ ? भनेर सल्लाह माग्नुभएको थियो ।

अलग अलग पार्टीमा रहँदा पनि वहाँले मसँगै हार्दिकतापूर्वक सल्लाह माग्नुभएकोले मैले पनि जिम्मेवारीवोधसाथ सल्लाह दिँदै भनेँ -'टिकट दिन्छ भने उम्मेदवार बन्नुहोस् । चुनावी लहर चल्यो भने जित्ने सम्भावना पनि हुन्छ । नजिते पनि व्यक्तित्व बन्छ । २०५६ सालको चुनावमा उम्मेदवार भउकाले हारे पनि मेरो व्यक्तित्व बनेको हो ।"

वहाँ उम्मेदवार बन्नुभयो र माओवादीको पक्षमा व्यापक जनलहर उठेकाले भारी मतका साथ निर्वाचित हुनुभयो ।

पहिलो संविधानसभामा नेकपा -एमाले)को तर्फबाट म पनि समानुपातिक निर्वाचन प्रणालीबाट सभासद् चयन भएँ। संविधानसभामा हरिजीले आफ्नो चक्षुले भ्याएसम्म पहिचानमा आधारित संघीयता, धर्म निरपेक्षता, समानुपातिक समावेशिता, संघ र प्रदेशबीचको अधिकारको बाँडफाँड, प्रेस स्वतन्त्रता, मौलिक हक आदिको बारेमा दृढतापूर्वक विचार राख्नुहुन्थ्यो। राज्य पुनरसंरचनाको सवालमा भने राई, लिम्बू, सुनुवार, याक्खा किरात समुदायको भएको र वर्तमान १ नं. प्रदेश सभ्यता, संस्कृति, भूगोल, इतिहास सबै दृष्टिले किरात भएकोले यसलाई किरात प्रदेश नामकरण गर्नुपर्छ भन्ने पक्षमा म थिएँ। हरिजी भने संखुवासभा र धनकुटाको भ-भागसहित पूर्वी पहाडी क्षेत्र र मधेसलाइ लिम्बुवान प्रदेश बनाइनुपर्ने पक्षमा हुनुहुन्थ्यो। संविधानसभामा मैले विचार राखेपछि वहाँले ठट्टैठट्टामा भन्नुभयो -'दाईको किरात प्रदेशमा मेरो लिम्बुवान हरायो।'

मैले पनि ठट्टा गर्दै भनेँ -'साझा समुदाय, सभ्यता, संस्कृति, इतिहास, भूगोल भएकोले किराँत प्रदेश नामाकरणमा जोड दिएको हुँ। यसो गर्दा सामुदायिक शक्ति पनि सबल बन्छ। तर तपाईको लिम्बुानको विरोधी म छैन। तपाईले भनेको क्षेत्रमा लिम्बुवान प्रदेश बनेमा मेरो समर्थन छ।'

वास्तवमा पहिलो संविधानसभाको अनुभवमा तत्कालिन माओवादीका आधिकांश सभासद पहिचानसहितको संघीयता, समावेशिता र आधारभूत वर्गका जनतालाई अधिकारसम्पन्न बनाउने विष्यामा दृढ थिए। तर एमाले, नेपाली काँग्रेस, राप्रपाका आधिकांश सभासदहरू संकीर्ण थिए। उनीहरू संघीयतालाई समाप्त पार्न प्रयासरत थिए।

हरिजी र म संसदको राज्य व्यवस्था समितिमा थियौं। समितिमा पनि राज्यका सबै नियकाहरूलाई समानुपातिक समावेशी बनाउने पक्षमा हामीले दृढतापूर्वक विचार राख्यौं। समितिका सांसदहरू, विभिन्न कार्यक्रममा सहभागी हुँदा हामी प्रायःजसो एउटौ कोठमा वा वल्लोपल्लो कोठामा बस्थ्यौं। सरकारले व्यवस्थापिका संसदमा पेश गरेको विधेयक, नीति तथा कार्यक्रम, बजेटमाथिको छलफलमा पनि सक्रिय

रूपले सहभागी हुन्थ्यौं । यसबीचमा हरिजी केही समय अर्थराज्यमन्त्री बन्नुभयो । यसपछि भने हाम्रो भेट निकै पातलियो । मलाई लाग्छ, राज्यमन्त्रीको जिम्मेवारी पनि वहाँले कुशलतापूर्वक निर्वाह गर्नुभयो ।

आदिवासी जनजाति आन्दोलन, माओवादी शसस्त्र संघर्ष, २०६२/६३ सालको जनक्रान्ति, ऐतिहासिक मधेस जनविद्रोह आदिबाट स्थापित पहिलो संविधानसभा प्रगतिशील, अग्रगामी परिवर्तनलाई संस्थागत गर्न सक्ने तागतसहितको राजनीतिक संस्था थियो । यसबाट निर्माण भएको भए जनपक्षीय संविधान बन्न सक्थ्यो । देशमा गतिरोध हुने थिएन र राष्ट्रले विकासको गतिमा पाइला चालिसकेको हुन्थ्यो । तर पहिलो संविधानसभाबाट मुलतः एमाले काँग्रसले संविधान बन्न दिएनन् । अन्तममा तत्कालिन माओवादी अध्यक्ष प्रचण्डको पनि प्रभावकारी भूमिका नभएको कार्यकर्तामा महसुस भयो । फलतः संविधान निर्माण नगरी नै पहिलो संविधानसभा विघटन भयो । यो दुःखद क्षणको साक्षी हरिजी र म दुवैजना थियौं ।

संविधानसभाको अवसानपछि हरिजीसँग कमै भेटघाट भयो । आ-आफ्नो पार्टीले निर्दिष्ट गरेको काममा लाग्नुपर्ने भएकोले भेटघाट कम हुनु स्वभाविकै थियो । समयको क्रुर प्रहार ! हरिजी मारेककटहरेबाट फर्कदा सिधुवामा दुर्घटनामा परी दिवंगत हुनुभएको कुरा सनसनीपूर्ण समाचार आयो । म त्यसबेला काठमाडौंमा थिएँ । मलार्य पहिलोपटक औपचारिक रूपमा खबर गर्ने व्यक्ति हरिजीको पहिलोको डेरा पार्टनर उनै डम्बर थापा मगर हुनुहुन्थ्यो । खबरबाट म स्तब्ध भएँ । वहाँको देहान्त धनकुटा जिल्लाको निम्ति ठूलो क्षति थियो ।

कहिले एउटै पार्टीमा, कहिले अलग अलग पार्टीमा निकै लामो समय सङ्गत गर्दा हरिजीका मननयोग्य बानीहरू थुप्रै थिए । पहिलो कुरा वहाँमा उच्च मनोवल थियो । चाहे राजनीतिकको विषय होस् चाहे व्यवहारको विषय होस् । वहाँले कहिल्यै पनि निराशाको कुरा गर्नुभएन । दोश्रो कुरा वहाँले कसैप्रति वैरभाव र नकरात्मक भाव राख्नुभएन र कसैलाई झुठा आश्वासन दिनुभएन । तेश्रो कुरा, वहाँ आदिवासी जनजातिको उत्थानको सवालमा र राज्यमा समानुपातिक समावेशी

बनाउने सवालमा प्रष्ट हुनुहुन्थ्यो । वहाँ पहिचानमा आधारित प्रदेश, स्वायत्त क्षेत्र, संरक्षित क्षेत्र निर्माण गर्नुपर्छ भन्ने विषयमा दृढ हुनुहुन्थ्यो । वहाँले संविधानसभा व्यवस्थापिका संसद, संसदीय समिति सबै ठाउँमा प्रष्टसँग विचार राख्नुहुन्थ्यो । चौथो कुरा वहाँले ढाँटछलको कुरा गर्नुभएन । र, अवसरको निम्ति कसैको चाकरी चाप्लुसी गर्नुभएन । जीवनमा जे जति प्राप्त गर्नुभयो, स्वाभिमानपूर्वक आफ्नो पौरख र समयको उपजले प्राप्त गर्नुभयो । यी विषयहरू वहाँबाट अनुकरण गर्नुपर्ने कुराहरू हुन् ।

समय निरन्तर गतिमान छ । आज हरिराज खेवा दिवंगत हुनुभएको पनि तीन वर्ष पुगिसकेछ । यस घडीमा मेरो प्रिय भाइप्रति सदा सम्झना । अविश्मरणीय सम्झना ।

**(लेखक पूर्वसभासद् तथा समाजवादी पार्टी, नेपालका केन्द्रीय सदस्य हुन् ।)**

# छुटेको श्रद्धाञ्जली

**तोर्णदीप तिगेला**

हामीले हाम्रो कलासर्जकहरूलाई जहिले पनि उचित सम्मानको आवश्यक पर्छ र सम्मान पनि गर्न पर्छ । समाजसेवी, राजनीतिज्ञ, कलाकार र साहित्यकार भनेको राष्ट्रको गहना र पहिचान हुन् । यस्तै एक पहिचान बोकेको व्यक्ति हुन् हरिराज खेवा लिम्बू ।

सानै उमेरदेखि मेहनेती, लगनशील, प्रगतिशील साथै ख्यालठट्टा गर्ने बानी भएका हरिराजसँग धेरै साथीभाइ झुमिरहन्थे । छोटै समयमा पनि धेरै प्रगति र सफलता चुम्दै जानुभयो ।

वि.सं. २०४७ सालमा शिक्षकको रूपमा देखा परे । २०५० सालमा प्रधानाध्यापक भएका वहाँ २०५४ सालमा गाविस अध्यक्ष बन्न सफल हुनुभयो ।

वहाँ नाटक लेखन, अभिनयतर्फ पनि उत्तिकै सफल हुनुहुन्छ । वहाँको नाटकले राष्ट्रिय पुरस्कार पनि जितिसकेको छ र अपदस्त जिन्दगी नामक नाटक कृति पनि प्रकाशन गर्नुभएको छ ।

वि.सं. २०६४ सालको संविधान सभाको चुनावमा वहाँले टिकट पाउनुभयो र विजेता पनि बन्नुभयो । मन्त्रीमण्डल पुनर्गठनकै क्रममा वहाँ अर्थराज्यमन्त्री पनि बन्नुभयो । २०७० को निर्वाचनमा पराजय भोगे पनि पार्टीको जिल्ला अध्यक्ष बनेर जिल्लामै राजनीति गरिरहनुभएको थियो ।

जब वहाँ मारेककटहरेबाट फर्कनेक्रममा सिधुवा बजारनेर दुर्घटनामा पर्नुभयो, त्यसैबेला म पनि धनकुटाबाट हातिखर्क जाने क्रममा मोटरसाइकल दुर्घटना परी धरानस्थीत विपि स्वास्थ्य विज्ञान प्रतिष्ठानमा भर्ना हुन पुगेँ । मेरो स्वास्थ्यको प्रतिकुल अवस्थाका कारण वहाँको अन्त्येष्टिमा सहभागी हुन पाइनँ ।

हामी एकै ठाउँमा जन्मिएका, वहाँकै प्रेरणा र सल्लाहबाट राजनीतिक यात्रामा होमिएका थियौं । वहाँको सपना र योजनाहरूलाई आगामी दिनमा हामीले पूरा गर्ने प्रण गरेका छौं । त्यसैले अन्तिम श्रद्धाञ्जलीमा म छुटेकाले यस स्मृति-ग्रन्थमार्फत हार्दिक श्रद्धाञ्जली अर्पण गर्दछु ।

# सम्पादक तथा संयोजकको तर्फबाट

**विश्वास दीप तिगेला**

मान्छे मरेर गए पनि कृति सधैँ बाँची रहन्छ। साँच्चै नै स्व. हरिराज खेवा स-शरीर हामी माझ नहुनु भएपनि वहाँको योगदान र कृतिहरू झनै उर्जा बनि बाँचिरहेका छन् र बाँचिरहनेछ। वहाँको हरेक पक्षको बारेमा प्रबुद्ध व्यक्तिहरूले यस ग्रन्थमा लेखिसक्नु भएको छ। हाम्रो लक्ष्य पनि स्व. खेवालाई साझा व्यक्तित्वको कोणबाट खोज्नु थियो र जुन कुरा सबै वर्ग, समुदायको उत्साहप्रद सहभागितामुलक लेख, रचनाले पुष्टि गरेको छ।

'हरिराज खेवा स्मृति प्रतिष्ठान'को सपनालाई देशविदेशमा बस्ने दाजुभाई, दिदीबहिनीहरूको साथ सहयोगले साकारउन्मुख बनाएको छ। यस 'हरिराज खेवा स्मृति-ग्रन्थ'लाई केवल एक पार्टीको पेवाजस्तो मात्र नदेखियोस् भन्ने सावधानी अपनाउँदै यहा समाविष्ट सामाग्रीहरूले सबैको साझा बनाउन मद्दत गऱ्यो भन्ने लाग्दछ। स्व. खेवा पार्टीको नेता, कार्यकर्ता, त्यो भन्दा बढि निर्वाचित जनप्रतिनिधि हुनुहुन्थ्यो र सिंगो देश एवं जनताको साझा सम्पति हुनुहुन्थ्यो। वहाँको हरेक पक्षलाई समेट्ने उद्देश्यले, समावेशी रूपमा सामग्रीहरूलाई अटाएका छौ। बेग्लाबेग्लै लेखकहरूबाट केही कुराहरू दोहरिएका पनि छन् तर हामीले आ-आफ्नो स्वतन्त्र विचार र अनूभूतिहरू हुन् भनेर खुल्ला छोडेका छौ। हामीले घटना श्रृङ्खलालाई बुझ्न सजिलो होस् भन्ने उद्देश्यले लेखहरूका अनुक्रम मिलाएका छौ। यद्यपी प्राविधिक कारणवस छ्यासमिस पनि भएका छन्।

स्व. खेवाको निधनको शोकलाई जसरी शक्तिमा बदल्न श्रीमती गीता खेवालगायत शुभेच्छुकहरू सहित हामी लाग्यौं त्यसैको प्रतिफल हो, यो स्मृति-ग्रन्थ । स्व. खेवा बित्नु भएको पहिलो बर्ष शोकमै वित्यो । दोस्रो बर्ष स्मृति-ग्रन्थको कुरा चल्यो । स्मृति प्रतिष्ठान निर्माण भयो । तेस्रो वर्ष स्मृति-ग्रन्थको निम्ति हारगुहार गऱ्यौं तर धेरै ब्यक्तिहरूको लेख संकलन गर्नु चानचुने कुरा थिएन र सम्भव भएन । त्यसपछि हामी हरतरह जुट्यौं । र, यस तेश्रो वर्षमा भने निक्कै अगाडि सूचना जारी गऱ्यौ । स्व. खेवाको बालसखा खोज्यौं, मिल्ने मित्रहरूको अध्ययन गऱ्यौ । वहाँको कला, साहित्य विधाका समकालिनहरू खोज्यौ । राजनैतिक विरासतको खोजी गऱ्यौ र अन्ततः ४ दर्जन भन्दा बढिका अति महत्वपूर्ण लेख रचनाहरू संकलन गर्न सफल भयौ । यति सिर्जनाहरूको संकलन मात्र पनि एकहिसाबले ठूलो उपलब्धि भएको महशुस गऱ्यौ ।

स्मृति प्रतिष्ठानमा राजनैतिक पार्टीको विचार र संग्लनता पनि रहेको हुनाले त्यसको मर्यादा र प्रतिष्ठा बचाउनु छदैथियो भने एक पार्टीको र असमावेशी हुन नदिन पनि उत्तिकै सतर्कता आवश्यक भएकोले निक्कै हिम्मतका साथ यसको सम्पादन गरिएको जगजाहेर गर्न चाहन्छु । प्रतिष्ठानको अध्यक्ष ज्यूलगायत सिङ्गो कमिटीको पूर्ण साथ सहयोग र निर्देशनले झनै सहज बनायो । विश्वास छ, यो ग्रन्थ सबैको निमित्त सर्वस्वीकार्य बनेको छ र हरेक हिसावबाट सन्तुलन कायम गर्ने कोसिस गरिएको छ । हरिराज खेवालाई

उसो त स्व. खेवा नाताले दाइ र सबैभन्दा मिल्ने अनि सँगसँगै उठबस गर्नुको कारणले पनि संस्मरण लेख्ने सहि ब्यक्तिहरू पछ्याउन सहज भयो । वहाको नाटक संग्रह अपदस्त जिन्दगी पनि मेरै सम्पादन र प्रकाशनमा १८ बर्ष अघि वि.स. २०५८ मा प्रकाशित भएको थियो । त्यसैले स्मृति-ग्रन्थको निम्ति कर्तब्य मात्र नभई भावनात्मक नाता पनि रहयो र यसलाई सक्दो बृहत बनाउने पहल भयो । हेरौ कति सफल भयौ, अब पाठकहरूको प्रतिक्रियाले जनाउनेछ ।

यो ग्रन्थले आकार लिनुमा प्रतिष्ठानका अध्यक्ष विष्णु पारघारी, सुवास मगर, पार्टी

पक्तिका नेतृत्वहरूका साथै देवेन्द्र सुर्केली, सीता तुम्खेवा, प्रेम खजुम, उत्तरमान तिगेला, कमल तिगेला धन्यवादका पात्र हुनुहुन्छ। त्यसैगरी आर्थिक सौजन्य गर्ने 'खेवाहाङ तिगेला लिम्बू समाज'लाई विशेष धन्यवाद दिइएन भने यस स्मृति-ग्रन्थ प्रकाशन नै अपुरो हुन्छ।

अन्त्यमा, देशविदेशबाट यस ग्रन्थको लागि सल्लाहसुझाव दिने सम्पूर्णमा सम्पादन तथा प्रकाशन संयोजकको तर्फबाट एकमुष्ठ धन्यवाद व्यक्त गर्दै, सुझाव तथा प्रतिक्रियाको अपेक्षासहित विदा।

biswasdip@ymail.com
**आसफोर्ड, युके,** २१ **जुलाई** २०१९

# प्रकाशन सौजन्य गर्ने समाज र व्यक्तिहरूको सहयोग विवरणः

स्व. हरिराज खेवा स्मृति-ग्रन्थ (सन् २०१९) तथा श्रद्धाञ्जली विज्ञापन प्रकाशनको निमित्त (सन् २०१६) प्रकाशन सौजन्य खेवाहाङ तिगेला लिम्बू समाजबाटः

| | |
|---|---|
| धनबहादुर तिगेला (युके) | नेरु ५०,००० |
| क्या. गजरधन तिगेला (युके) | नेरु २९,३७५ |
| लक्ष्मी तिगेला (युके) | नेरु २९,३७५ |
| लालबहादुर तिगेला (युके) | नेरु २९,३७५ |
| उत्तरमान तिगेला (युके) | नेरु २९,३७५ |
| विश्वास दीप तिगेला (युके) | नेरु २९,३७५ |
| मनकुमारी तिगेला राई (युके) | नेरु १३,८४४ |
| खगेन्द्र तिगेला (हङकङ) | नेरु १४,००० |
| असोक तिगेला (हङकङ) | नेरु १४,००० |
| प्रताप तिगेला (हङकङ) | नेरु १४,००० |
| शान्ता तिगेला (हङकङ) | नेरु १०,००० |
| राजु तिगेला (हङकङ) | नेरु १०,००० |
| हरिहाङ तिगेला (हङकङ) | नेरु १०,००० |
| सुरेन तिगेला (हङकङ) | नेरु १०,००० |
| थर्कदीप तिगेला (जापान) | नेरु १०,००० |
| कमल तिगेला (धरान) | नेरु १०,००० |
| कमलदीप तिगेला | नेरु १०,००० |

माथि उल्लेखित हिसाब सौजन्य समाजको आफ्नै खातामार्फत सञ्चालन भएको हो । र, प्रतिष्ठानको खाता बेग्लै रहेको छ ।

# हरिराज खेवा स्मृति प्रतिष्ठान

**पदाधिकारीहरू**

(२०७३ कार्तिक ११ गते गठित)

**संरक्षक**
श्रीमती गीता गुरुङ (खेवा)
गुराँस खेवा लिम्बू
लाराक खेवा लिम्बू

**अध्यक्ष**
विष्णु बहादुर पारघारी

**उपाध्यक्ष**
तिलक बहादुर राई

**महासचिव**
भिम बहादुर लिम्बू

**सचिव**
कुसुम कुमारी श्रेष्ठ

**कोषाध्यक्ष**
रिषीराम ढुङ्गाना

**सदस्य**
तोर्ण दीप तिगेला
भोला थापा
सरिता बराईली
धन बहादुर कार्की
विष्णुमाया कन्दङ्वा

**कानूनी सल्लाहकार**
तेजनारायणसिंह राई
छिरिङ शेर्पा

**सल्लाहकार**
हेमराज भण्डारी
टंक आङ्बोहाङ
ईन्द्रबहादुर आङ्बो
होमकुमारी खापुङ
धनमाया वि.क.
ध्रुव आङ्देम्बे
श्रीप्रसाद जवेगु
मुक्सामहाङ मेन्याङ्बो
कमलदीप तिगेला
शिव डाँगी
सन्देश बिहानी



छथर महोत्सवमा सहभागी हुँदै हरिराज खेवा



इलामको माङ्सेबुङमा सहभागी हुँदा



इलाम माङ्सेबुङमा सहभागी हुँदा स्वागत थाप्दै



इलामको माङ्सेबुङमा भएको कार्यक्रम उद्घाटन गर्नुहुँदै अर्थराज्यमन्त्री हरिराज



युवाअवस्थामा हरिराज खेवा, जहाँ श्रीमती गीता गुरुङ कालो स्वेटरमा छिन्



हङकङमा आफ्ना स्वकीय सचिव थर्कदीप तिगेला, ङामुकहाङ मेन्याङ्बो र नेता रमेश लिङ्देनको साथमा



नेता वर्षमान पुनसहित धनकुटाका सभासदद्वय हरिराज खेवा र हेमराज भण्डारीसँग भेडेटार नाम्जेमा



मन्त्री बनेपछि धरान पुग्दा छथरे समाज धरानले गरेको स्वागत



पहिलो संविधानसभामा विजयीपश्चात अविरजात्रामा हरिराज खेवा



सहिदपरिवारलाई सम्मानपत्र दिँदै सभासद्द्वय हेमराज भण्डारी र हरिराज खेवा



www.newbusinessage.com/MagazineArticles/view/401

New Business Age
INFORMATION • ANALYSIS

आर्थिक अभियान www.abhiyan.com.np

Home | Management | Biznews | From the Editor | Corporate Focus | Interview

Cover Story

## Micro Entrepreneurship is a must for Economic Prosperity

Published on: 2013-08-08 00:00:00 32 times read 0 Comments

In my opinion, we can achieve unprecedented economic growth in the coming decade since all circumstances has created favourable environment for the growth. Even if the political stagnation is not ended, economic growth and development activities should not be halted due to vested interest of some political parties or leaders. People should not suffer due to inefficiency of the political leadership and the problem of over politicisation of economy should be ended.

**Hari Raj Khewa Limbu**
Former State Minister for Finance

Politics is all about making people happy and prosperous and economic activities help to achieve this aim. Domination of political agendas and lack of employment opportunities will create frustration among citizens and ultimately the situation may create financial disorder. All political parties should be aware of all these facts and let the economy to take its own course.

Engagement of local people in development activities should be ensured to change the approach of development. I think, micro entrepreneurship should be accelerated for economic prosperity. The government should encourage grassroots people to involve in the entrepreneurship. It is worth mention here that agriculture, hydropower and tourism sector are all set to take off to boost our economy. We have tremendous potential for the development. Successive government has been earmarking sufficient budget for the development of agriculture sector creating more opportunities to the farmers. The state should also bring a convincing policy to utilise remittance money in the productive sector.

The government should focus on poorest of the poor section to achieve sustainable development. Economic growth provides opportunities where people can realize their hopes and desires for themselves and their children. I want every people can see their future in this country. Nationalism is not all about political slogan but also collective effort to make the country prosperous. Together we can make this country one of the happiest in the world within next five years or a decade.

राज्यमन्त्रीबारे समाचार
खेवा तथा उनको पुस्तक अपदस्त जिन्दगी







हङकङस्थीत समुद्रमा फोटो खिचाउँदै अर्थराज्यमन्त्री खेवा




केन्द्रीय लिम्बुवान संयुक्त सङ्घर्ष समितिको प्रचार–प्रसार सभामा




हङकङ यात्रामा सम्पादक विश्वास दीप, राज्यमन्त्री खेवा, ज्वाइँ बालकृष्ण याङ्देन र स्वकिय सचिव थर्कदीप तिगेला




हङकङमा राज्य पूनर्संरचना तथा लिम्बुवान स्वायत्तसम्बन्धि कार्यक्रममा बोल्दै खेवा




किरात येले सम्वतसम्बन्धि पुस्तक विमोचनको बेला खेवा




नेपाल बैंक लिमिटेडको कार्यक्रममा राज्यमन्त्री खेवा



तत्कालिन माओवादी अध्यक्ष पुष्पकमल दाहालसँग सभासद खेवा



एक सहकारी संस्थाको उद्घाटन गर्दै राज्यमन्त्री खेवा




हात्तिखर्क धनकुटा – काठमाडौं सम्पर्क समितिको कार्यक्रममा



सुरक्षाकर्मीको साथ भ्रमण गर्दै राज्यमन्त्री खेवा





श्रीमती गीता गुरुङ खेवा, छोरीहरू गुराँश र लारक खेवासँग हरिराज खेवा



आफ्नी दुई दिदीसँग भाइटिका लगाएपछि हरिराज खेवा र भीम




दोश्रो संविधानसभा २०७० को चुनाव प्रचार-प्रसारको पोष्टर



छथर जोरपाटी १, हात्तिखर्कस्थीत खेवाको घर



एक कार्यक्रममा नेता टंक आङ्बुहाङसँग खेवा




सम्मान कार्यक्रममा पूर्वकुलपति वैरागी काइँलासँग



संविधानसभा भवनमा आफ्नै लिम्बू पोशाकमा हरिराज खेवा



दर्ता नं. का.जि.प्र.का. ११६०/०६१

छथरे पान पातुम्लो, याक्थुङ लाम नातुम्लो

# छथरे लिम्बू उत्थान संघ-२०६४

काठमाडौं

## सम्मान पत्र

तपाईं माननिय हरिराज खेवा ज्यू छथरे कुलमा जन्मनु भइ ऐतिहासिक संविधान निर्माण गर्ने संविधान सभा जस्तो गरिमामय सभामा प्रथम छथरे सभासद्को रुपमा छथर धनकुटा क्षेत्र नं. २ बाट निर्वाचित हुन भई छथरे लिम्बू समुदायको गौरव अभिवृद्धि गर्नु भएको मुल्याङ्कन गर्दै, आगामी दिनमा छथरे लगायत सम्पूर्ण लिम्बूको भाषा, संस्कृती, कला, आर्थिक, सामाजिक लगायत सर्वाङ्गीण जातीय उत्थानमा तपाईंको अझ बढी योगदानको अपेक्षा राख्दै आगामी कार्य सफलताको कामनासहित यो सम्मान पत्र प्रदान गर्दछौं।

| कार्यक्रम संयोजक | अध्यक्ष | प्रमुख अतिथि |
| --- | --- | --- |
| धनबहादुर लिम्बू | टेकराज तिगेला | प्रा. वैरागी काईला |
| | २०६५/११/३ | (तिलविक्रम नेम्बाङ) |



## हार्दिक बधाई

माननीय अर्थराज्यमन्त्री
श्री हरिराज खेवा लिम्बू
सिंहदरबार, काठमाडौं

नवगठित मन्त्री परिषदको गरिमामय अर्थराज्यमन्त्री पदमा नियुक्ति हुनुभएकोमा तपाईंको उत्तरोत्तर उन्नती, प्रगति, सुस्व समृद्धि एवं पूर्ण सफलताको मंगलमय शुभ कामना तथा हार्दिक बधाई ज्ञापन गर्दछौं।

दिलकुमार नेम्वाङ, अध्यक्ष — कमला आङदेम्बे, अध्यक्ष — चन्द्रकुमार सेर्मा लिम्बू, अध्यक्ष






सिंहदरबारस्थीत राज्यव्यवस्था समितिको वैठकमा आफ्ना कुरा राख्दै खेवा

एसियन विकास बैंक (एडीबी)को ४५ औ वार्षिक वैठकमा माननीय अर्थराज्यमन्त्री हरिराज खेवाद्वारा हुलाक टिकटमा मारिएको टाँचा






"Sports for health, sports for nation."

8th INT'L RAMNAWAMI OPEN VOLLEYBALL TOURNAMENT 2068

Dhankuta_1 , Hile
Estd. 2059 B.S.

LETTER OF APPRECIATION

Organized by:

SHREE JANACHETANA PUBLIC LIBRARY

Mr. ........Finance Ministry, Kathmandu........has been awarded for the financial support with the sum of Rupees ......1,00,000/-......to accomplish the tournament successfully and to establish the thournament in an international standard, held in Hile from 2012 March 28 to 31 (2068/12/15 to 18) organized by SHREE JANACHETANA PUBLIC LIBRARY, Dhankuta-1, Hile.

HARKA PRASAD LIMBU
Secretary

HARIRAJ KHEWA
State minister for finance
Chief Guest

GANGARAM GOMDEN
President

Date : 2012/03/31(2068/12/18 B.S.)
Venue : Hile Ground( Timure)



छथरे लिम्बू उत्थान संघ

काठमाडौं, नेपाल

सम्मान-पत्र

यस संस्थाका सल्लाहाकार तपाईँ माननीय हरिराज खेवा लिम्बू नेपाल सरकारको अर्थ राज्य मन्त्रि जस्तो गरिमामय पदमा नियुक्ति हुन भई छत्थर क्षेत्र आफ्नो समुदायको गौरव, मान, प्रतिष्ठा श्रीवृद्धि गर्नु भएकोमा बधाई दिदैँ आगामी सफल कार्यकालको कामना गर्दै हार्दिक सम्मान प्रकट गर्दछौं ।

महासचिव
क्षितिज सावा लिम्बू

कार्यक्रम संयोजक
प्रेम खजुम
मिति: २०६८ मंसिर १० गते

अध्यक्ष
टेकराज तिगेला लिम्बू



श्री गोकुण्डेश्वर उच्च माध्यमिक विद्यालय

धनकुटा–६

अभिनन्दन पत्र

श्री माननीय अर्थ राज्यमन्त्री हरिराज खेवा लिम्बूज्यू,
नेपाल सरकार, अर्थमन्त्रालय,
सिंहदरवार, काठमाण्डौं ।

धनकुटा जिल्लाको हात्तिखर्क गाउँ विकास समिति वार्ड नं ६ निवासी श्री हृदयमान खेवा लिम्बू तथा श्रीमती तिर्थमाया लिम्बूका पुत्ररत्नका रुपमा जन्म भै यस श्री गोकुण्डेश्वर उच्च माध्यमिक विद्यालयमा माध्यमिक तह सम्मको अध्ययन पुरा गर्नु भएका तपाई सामाजिक सेवामा सम्लग्न हुँदै संविधान सभाको सदस्य पदमा प्रत्यक्ष निर्वाचित भई हाल अर्थ राज्यमन्त्री जस्तो गरिमामय पदमा आसीन हुनुभएकोमा विद्यालय परिवार हार्दिक सम्मानका साथ अभिनन्दन गर्दछ ।

(महानन्द पोखेल )
प्रधानाध्यापक

मितिः २०६८।११।२५ विहिवार

(दिवबहादर खड्का)
अध्यक्ष
वि. व्य. स



सिधुवा बजार सिरानमा भएको दुर्घटनाग्रस्त बस



दुर्घटनामा निधन भएपछि खेवाका परिवार एनेकपाका अध्यक्ष प्रचण्डसँग भेटघाटको क्रममा




गुगलम्यापबाट घटनास्थलको स्न्यापसट लिइएको



सम्पादक विश्वास दीप तिगेला दुर्घट्नापश्चातको हरिलाई राखिएको स्थानमा श्रद्धाका फूल चढाउँदै

संसारका मजदुरहरू – एक होऊ !
Workers of the world, unite !

मार्क्सवाद-लेनिनवाद-माओवाद – जिन्दावाद !
Long Live Marxism -Leninism -Maoism !

# नेपाल कम्युनिस्ट पार्टी (माओवादी केन्द्र)
# Communist Party of Nepal (Maoist Centre)

केन्द्रीय समिति
Central Committee

पत्र संख्या : ०७२/०७४
चलानी नं. : ०५

## शोक-वक्तव्य

नेपाल कम्युनिष्ट पार्टी (माओवादी केन्द्र) का महाधिवेशन आयोजक समिति सदस्य तथा धनकुटा क्षेत्र नं. २ का पुर्व सभासद तथा पूर्व अर्थराज्य मन्त्री क. हरिराज खेवाको आज दिउँसो १२ बजे धनकुटाको सिदुवा बजार भन्ने ठाउँमा बस दुर्घट्नामा परी दुःखद् निधन भएको समाचारले हामी स्तब्ध भएका छौं । हाम्रो पार्टी उहाँप्रति हार्दिक श्रद्धाञ्जली अपंण गर्नुको साथै शोक सन्तप्त परिवारजनप्रति गहिरो समवेदना व्यक्त गर्दछ ।

साथै सोही दुर्घटनामा उहाँसहित अन्य १२ जनाको मृत्यु भएकोमा सबै मृतकप्रति पार्टी हार्दिक श्रद्धाञ्जली अर्पण गर्दछ र उहाँहरूका शोक सन्तप्त परिवारजनप्रति गहिरो समवेदना व्यक्त गर्दछ । यसैगरी सो दुर्घटनामा धनकुटा जिल्ला पार्टीका सल्लाहकार क. भोला थापा सहित दर्जनौ घाइते हुनुभएकोमा उहाँहरूको शिघ्र स्वास्थ्य लाभको कामना गर्दछ । क. हरिराज खेवा क. भोला थापासँगै धनकुटाको मारेकटहरे बजारबाट धनकुटा सदरमुकाम तर्फ आउदै गर्दा उक्त दुर्घटना भएको थियो ।

धनकुटा हात्तिखर्क गा.वि.स. वडा नं. ६ मा २०२५ साल कात्तिक २३ गते जन्मिनु भएका क. हरिराज खेवा सानैदेखि सामाजिक क्षेत्रमा क्रियाशिल हुनुहुन्थ्यो । उहाँले २०४४ सालमा धनकुटा बहुमुखि क्याम्पसबाट उच्च शिक्षा हासिल गर्नुभएको थियो । २०५० देखि २०५४ साल जनकल्याण प्रावी हातिखर्कमा शिक्षक हुँदै प्रध्यापकसम्म बन्नुभयो । क. हरिराज खेवाले २०५३ सालमा कम्युनिष्ट पार्टीको सदस्यता प्राप्त गरी २०५४ सालमा हात्तिखर्क गा.वि.स.को अध्यक्ष निर्वाचित हुनुभएको थियो । उहाँ २०६४ सालको संविधान सभाको निर्वाचनमा पार्टीको तर्फबाट धनकुटा क्षेत्र नं. २ बाट प्रत्यक्ष निर्वाचित हुनु भएका क. हरिराज खेवाले अर्थराज्य मन्त्रीको जिम्मेवारी समेत बहन गर्नुभएको थियो ।

एमाले, माले हुँदै जनयुद्धको समयदेखि नै पार्टीलाई समर्थन गर्दै आउनु भएका क. हरिराज खेवा एक कर्मठ सामाजिक अभियान्त हुनुका साथै पार्टीको त्यस क्षेत्रको एक होनाहार नेता हुनुहुन्थ्यो । उहाँको श्रीमती गीता गुरुङ्ग खेवा, दुई छोरीहरू गुराँस खेवा र लारक खेवा हुनुहुन्छ । क. हरिराज खेवाको निधनले पार्टी र कम्युनिष्ट आन्दोलनलाई गम्भीर क्षती पुगेको छ । यस दुखद् घडीमा शोकलाई शक्तिमा बदल्ने प्रण गर्दै निरन्तर संघर्षरत रहन सिङ्गो पार्टी पंक्ति, उहाँका आफन्त, परिवारजन र आम जनसमुदायलाई पार्टी केन्द्र हार्दिक अपील गर्दछ ।

१३ साउन, २०७२

पुष्पकमल दाहाल 'प्रचण्ड'
अध्यक्ष

पेरिसडाँडा (कोटेश्वर), काठमाडौं, फोन : ९७७-१-४६०२२९०, ४६०२२८८, फ्याक्स : ९७७-१-४६०२२८९
Email : ucpnm.chq@gmail.com,www.facebook.com/unfiedmaoist,www.twitter.com/UCPNMMaoist,Website : www.ucpnmaoist.org

# नयाँ शक्ति पार्टी, नेपाल

**Naya Shakti Party, Nepal**

प्रदेश नं. १ कार्यालय, धरान

प.सं.
च.नं.

मिति : २०७३।४।१२

## प्रेस विज्ञप्ती

आज धनकुटा जिल्लाको सिधुवामा संखुवासभाबाट आउदै गरेको बस दुर्घटना हुन गई उक्त दुर्घटनामा परी पूर्व मन्त्री हरीराज खेवा लगायत दर्जनौ मानिस मृत्यु हुन पुगेको घटनाले हामी सबैलाई स्तब्ध तुल्याएको छ । यो दु:खद घडीमा दिवङगत आत्मा प्रति श्रद्धान्जली र शोक सन्तप्त परिवारजन प्रति हार्दिक समवेदना प्रकट गर्दछौ । दुर्घटनामापरी घाईते भएका सबैको शिघ्र स्वास्थ्य लाभको कामना गर्दै घाइतेहरुलाई सुविधायुक्त अस्पतालमा छिटो भन्दा छिटो पुऱ्याई नि:शुल्क स्वास्थ्य उपचारको व्यवस्था तथा मृत्युवरण हुनेहरुको परिवारलाई क्षतीपूर्ती राज्यबाट व्यवस्था गरियोस भनि माँग समेत गर्दछौं ।

पासाङ शेर्पा
संयोजक
प्रदेश नम्बर १
नयाँ शक्ति पार्टी, नेपाल

संघीय लिम्बुवान पार्टी, नेपाल

Federal Limbuwan Party, Nepal

<u>प्रेस विज्ञप्ति</u>

नेकपा (माओवादी केन्द्र) का महाधिवेशन आयोजक समिति सदस्य, लिम्बुवान मुक्ति मोर्चा नेपालका केन्द्रीय महासचिव  तथा पूर्व अर्थराज्य मन्त्री हरिराज खेवा लिम्बूको आज धनकुटा जिल्लाको सिंधुवामा गाडी दुर्घटनामा परी भएको असमायिक निधनले लिम्बुवान आन्दोलन र समग्र नेपालका उत्पीडित जातिय-बर्ग मुक्ति सघर्षमा ठूलो क्षती पुग्न गएको छ । यस घट्नाले संघीय लिम्वान पार्टी, नेपाल परिवारलाई अत्यन्तै स्तब्ध बनाएको छ । शोकाकुल परिवारजनमा धैर्यधारणको कामना गर्दै हार्दिक श्रद्धाञ्जली ब्यक्त गर्दछौ ।

[illegible]
संघीय लिम्बुवान पार्टी, नेपाल


kathmandupost.ekantipur.com/news/2016-07-29/13-killed-27-injured-as-bus-veers-off-road.html

ekantipur

the kathmandupost

HOME GENERAL NATIONAL CAPITAL ENTERTAINMENT WORLD EDITORIAL OPED BLOG SPORTS OTHERS

NATIONAL

## Death toll in Dhankuta accident reaches 15

- RAMESH CHANDRA ADHIKARI, DHANKUTA

Jul 29, 2016- The death toll in the bus accident that occurred at Sidhuwa in Parewadin-5, Dhankuta, on Thursday has reached 15. Twenty-seven others were injured. Condition of some of the injured is said to be critical.

The ill-fated vehicle (Ba 2 Kha 7366) skidded off the road and fell some 100 metres, said police. The bus was en route from Basantapur in Terhathum district to Dharan.

Police said seven persons died on the spot and six others succumbed to injuries while undergoing treatment at BP Koirala Institute of Health Sciences in Dharan.

Hariraj Khewa, Dhankuta chairman of the CPN (Maoist Centre), who served as a state minister for finance during the Baburam Bhattarai-led government, was among the dead. More than 40 people were on board the bus when the accident occurred, according to police.

Bhola Thapa, an injured receiving treatment at Dhankuta District Hospital, said bus driver Sonam Tamang had said brakes had failed. "He did try to control the vehicle, but in vain," he added.







स्व. हरिराज खेवाको प्रथम स्मृति दिवसमा आयोजित रक्तदान कार्यक्रम




**कतारमा हरिराज खेवाको श्रद्धाञ्जली सभा गर्दै**




**श्रद्धाञ्जली सभाको ब्यानर**

nepalisamachar.com/?p=12715

# कतारमा पूर्व राज्यमन्त्रि स्व.खेवाको श्रद्धाञ्जली कार्यक्रम सम्पन्न

रबिन थापा मगर, दोहा कतार ।

गत १९ अगष्ट २०१६ का दिन धनकुटा जिल्लाबाट रोजगारीको शिलसिलामा कतारमा रहेका सम्पूर्ण धनकुटेलीहरुको एक मात्र संस्था धनकुटा प्रवासी सेवा समाज कतारले आफ्नो जिल्ला धनकुटाका माननिय पूर्व सभासद, पूर्व राज्यमन्त्रि स्व. हरिराज खेवा लिम्बुको श्रद्धाञ्जली कार्यक्रम सम्पन्न गरेको छ । संस्थाका कार्यवाहक अध्यक्ष ललित लिम्बुको सभापतित्वमा साल्वारोड स्थित टि टावर रेष्टुरेन्टको सभाहलमा भएको कार्यक्रममा प्रमुख अतिथी धनकुटा प्रवासी सेवा समाज दोहा कतारका सल्लाहकार संयोजक तुलसी सुबेदी र अतिथिहरुमा सल्लाहकारहरु डि.एन. मगर र पूर्व सचिब केसब कार्की रहनु भएको थियो ।

सन् ८ नोभेम्बर १९६८ मा हात्तिखर्क धनकुटामा जन्मनुभएका स्व. खेवा पार्टीको कामका सिलसिलामा परेवादिन पुगेर फर्कदा सन् २८ जुलाई २०१६ मा उनको सवारी दुर्घटनामा ज्यान गयो । कतारमा रहेका धनकुटेलीहरुको उल्लेख्य सहभागिता रहेको सो श्रद्धाञ्जली सभामा स्व. खेवा को तस्विरलाई माल्यार्पण गरि चिर शान्तिको कामना गर्दै एक मिनेट मौन धारण गरिएको थियो । बक्तहरुले स्व. खेवाले गरेका अशल कामहरुलाई सम्झिए ।

कार्यक्रममा बोल्दै सल्लाहकार संयोजक सुबेदीले स्व. खेवा को ब्यक्तित्वको बारेमा चर्चा गर्दै भन्नुभयो उनि क्याम्पस जीवनबाटै अभिनय र कलाकारितामा समेत अब्बल खेवा साहित्यसंगै पछिल्लो समय राजनीतिमा सक्रिय थिए । जिल्लाको दुर्गमस्थान हात्तिखर्कमा जन्मेका खेवा बाल्यकालदेखि युवावस्थासम्म गाउघरमा बिताए । विद्यालयको पढाइ सकेर २०४४ सालमा धनकुटा बहुमुखी क्याम्पसमा उच्च शिक्षा हासिल गरे । क्याम्पस जीवनमा उनको कलाकारिता झांगिएको थियो । त्यसो त उनी नाटक विधामा लेखन, निर्देशन र अभिनय समेत गर्थे । अभिनयमा राष्ट्रिय रुपमा पहिलो स्थान हात पारेका थिए । विद्यार्थी जीवनमा राजनीति थालेका थिए ।

उनको राजनीतिक फड्को तिब्र गतिमा भएको थियो । २०६४ सालको पहिलो संविधानसभा निर्वाचनमा उनी धनकुटा क्षेत्र नं. २ मा प्रत्यक्षतर्फ विजयी समेत भए । त्यसपछि माओवादी नेतृत्वमा बनेको सरकारमा उनी अर्थ राज्यमन्त्री समेत भए । पछिल्लो समय दोस्रो संविधानसभा निर्वाचनमा पराजित भएपछि भने उनी माओवादी केन्द्रको जिल्ला अध्यक्ष भएका थिए ।

कार्यक्रम को समापन गर्दै एक सादा जिवन उच्च बिचार राख्ने धनकुटेली नेता अब हामी बिच नरहनुभएको । मिलनसार स्वभावका कारण लोकप्रियतासँगै राजनीतिको उचाई लिएका खेवाको निधनले यति बेला जिल्ला मात्र नभई बिदेशमा रहेका धनकुटेलीहरु शोकमा डुबेका बताउनु भयो । कार्यक्रम रबिन थापामगरले संचालन गर्नुभएको थियो ।



rss.com.np/category/index

News

Download Download as zip Print

## मुलुकले होनाहार योद्धा गुमायो –प्रम

2016-08-16 12:19

काठमाडौँ, ३२ साउन । प्रधानमन्त्री पुष्पकमल दाहालले पूर्व अर्थराज्यमन्त्री एवम् नेकपा (माओवादी केन्द्र) का नेता हरिराज खेवाको निधनले पूर्व क्षेत्रले मात्रै नभएर मुलुकले एक होनहार योद्धा गुमाउनुपरेको बताउनुभएको छ ।

यही साउन १३ गते धनकुटाको सिधुवामा भएको बस दुर्घटनामा परी नेता खेवाको निधन भएको थियो । प्रधानमन्त्री निवास बालुवाटारमा आज नेता खेवाको परिवारसँग भेटवार्ता गर्दै उहाँले आश्रित परिवारलाई सरकार र पार्टीले पूर्ण सहयोग गर्ने स्पष्ट गर्नुभयो ।
भेटमा प्रधानमन्त्रीले शोकमा परिवारले देखाएको धैर्य र संयमताप्रति सन्तोष व्यक्त गर्दै छोरीहरुको शिक्षादीक्षामा पार्टीले पनि आवश्यक सहयोग गर्ने प्रतिबद्धता व्यक्त गर्नुभएको प्रधानमन्त्रीका स्वकीय उपसचिव मनोहरि तिमिल्सिनाले जानकारी दिनुभयो ।

भेटमा सहभागी नेता खेवाकी श्रीमती गीता गुरुङका अनुसार प्रधानमन्त्रीले दुई छोरी लाराक र गुराँसको शिक्षादीक्षामा सरकारले सहयोग गर्ने तथा परिवारलाई रोजगारीको प्रबन्ध गर्ने बचन दिनुभएको छ । यस्तै नेता खेवाको राजनीतिक उत्तराधिकारीका रुपमा उहाँकी श्रीमतीले राजनीतिक जीवन सुरु गर्ने विषयमा समेत प्रधानमन्त्रीसँग छलफल भयो । रासस



epaper.ekantipur.com/kantipur/2016-08-03/8 बुधबार, १९ साउन, २०७३ (Wednesday, August 3, 2016)

Share This Issue | Share Page 8

Page: 8 of 23

## हार्दिक श्रद्धाञ्जली

जन्म
वि.सं. २०२५।०७।२३

स्वर्गारोहण
वि.सं. २०७३।०४।१३

### स्व. हरिराज खेवा

भारती उच्च माध्यमिक विद्यालय हात्तिखर्कका भू.पु. विद्यार्थी तथा यसै विद्यालयका वर्तमान प्र.अ. भिमखेवा लिम्बुका दाजु पूर्व गा.वि.स. अध्यक्ष क्षेत्र नं. २ का पूर्व सभासद तथा पूर्व माननिय अर्थ राज्यमन्त्री, ने.क.पा माओवादी केन्द्रका केन्द्रिय सदस्य धनकुटा जिल्ला इन्चार्ज, लिम्बुवान राष्ट्रि मुक्ति मोर्चाका महासचिव, भक्तराज कन्दङवा स्मृति प्रतिष्ठानका अध्यक्ष हात्तिखर्क-६ निवासी **हरिराज खेवाको** सिधुवामा भएको सवारी दुर्घटनामा परी असामयिक निधनले यस विद्यालय परिवार मर्माहत भएको छ । सोकको घडिमा शोकसन्तप्त परिवार प्रति धैर्यधारण गर्न ईश्वरले शक्ति प्रदान गरुन साथै दिवंगत आत्माको चिरशान्तिको कामना गर्दै हार्दिक श्रद्धाञ्जली अर्पण गर्दछौं ।

**सहायक प्रधानाध्यापक एवं**
**समस्त श्री भारती उच्च माध्यमिक विद्यालय हात्तिखर्क-६ परिवार**



जन्म
मिति २०२५/७/२३ गते

स्वर्गारोहण
मिति २०७३/४/१३ गते

## स्व. कामरेड हरिराज खेवा लिम्बू

लिम्बुवान राष्ट्रिय मुक्ति मोर्चा, नेपाल केन्द्रीय महासचिव तथा नेकपा माओवादी केन्द्रका केन्द्रीय सदस्य तथा नेपाल सरकारका पूर्व अर्थ राज्यमन्त्री श्री कामरेड हरिराज खेवा लिम्बूको यहि मिति २०७३ श्रावण १३ गते बस दुर्घटनामा परि दुःखद निधन भएकोमा हामी अत्यन्तै मर्माहित भएका छौं।

यस दुःखको घडीमा मृत-आत्माप्रति चीर-शान्तिको कामना गर्दै भावपुर्ण श्रद्धाञ्जली अर्पण गर्दछौं। साथै शोकाकुल परिवारजनप्रति गहिरो समवेदना व्यक्त गर्दछौं।

मुक्सामहाङ्ग मेन्याङ्बो (क. मुकेश)
कार्यवाहक अध्यक्ष
लिम्बुवान राष्ट्रिय मुक्ति मोर्चा, नेपाल केन्द्रीय समिति तथा पोलिट ब्युरो सदस्य
नेकपा माओवादी केन्द्र



उत्तरी सिमानाको नाका भ्रमणको क्रममा









स्व. खेवाको दोश्रो स्मृति दिवसमा माल्यार्पण गर्दै खेवाको श्रीमती गीता गुरुङ




स्व. हरिराज खेवा खेवा स्मृति प्रतिष्ठानको कार्यालय



स्मृति-ग्रन्थबारे वैठक बस्दै प्रतिष्ठानका पदाधिकारी र सम्पादक



संविधानसभाको सदस्य पदक गृह–सचिव प्रेमकुमार राईद्वारा हरिराजकी श्रीमती गीता गुरुङ खेवा



दिवंगत हरिराज खेवाको निधनले समाज र राष्ट्रले एक बहुप्रतिभाशाली नेता गुमायो । सडक दुर्घटनाका कारण अल्पायूमै हुन गएको वहाँको निधनले राष्ट्रलाई अपुरणीय क्षति पुग्यो । अझ विशेषतः पूर्वी क्षेत्रले भावी नेता गुमायो । तर, वहाँ अमर रहनुभएको छ ।

**नन्दबहादुर पुन**

सम्माननीय उपराष्ट्रपति

हरिराज खेवा एउटा असल राजनीतिज्ञ, कुशल जनप्रतिनिधि, जनताको प्रिय कलाकार, साहित्य सर्जक, जनप्रिय समाजसेवी र सफल सत्ता सञ्चालकको रूपमा स्थापित भइसक्नुभएको थियो । वहाँमा रहेका सवल पक्षहरू मिति २०७३ साउन १३ गतेको दुर्घटनामा हामीले वहाँलाई गुमाउँदा सँगसँगै गुमाए पनि नेपालका सच्चा क्रान्तिकारी कम्युनिष्ट र साहित्य कलाक्षेत्रका महानुभावहरूका लागि यो हरिराज खेवा स्मृति-ग्रन्थ अविश्वमरणीय र उपयोगी हुने विश्वास लिएको छु ।

**रामबहादुर थापा "बादल"**

गृहमन्त्री

स्व. खेवा पार्टीको नेता, कार्यकर्ता, त्यो भन्दा बढि पटक-पटक निर्वाचित जनप्रतिनिधि हुनुहुन्थ्यो र वहाँ सिङ्गो देश एवं जनताको साझा सम्पति हुनुहुन्थ्यो भन्ने बुझाईले वहाँको हरेक पक्षलाई समेट्ने उद्देश्यका साथ समावेशी रूपमा सामाग्रीहरूलाई अटाएका छौं । बेग्लाबेग्लै लेखकहरूबाट केही कुराहरू दोहोरिएका पनि छन् तर हामीले आ-आफ्नो स्वतन्त्र विचार र अनूभूतिहरू हुन भनेर खुल्ला छोडेका छौं ।

**सम्पादक**

9 789937 062396

**हरिराज खेवा स्मृति प्रतिष्ठान**

**धनकुटा**